# कालिकाकुलपञ्चशतक
# (देवीपञ्चशतिक)

मूल रचयिता
**आचार्य श्रीनाथ**

सम्पादक/अनुवादक
**माधवप्रसाद लामिछाने**




नेपाल प्रज्ञा-प्रतिष्ठान
कमलादी, काठमाडौँ

**कालिकाकुलपञ्चशतक (देवीपञ्चशतिक)**

| | | |
|---|---|---|
| मूल रचयिता | : | आचार्य श्रीनाथ |
| सम्पादक/अनुवादक | : | माधवप्रसाद लामिछाने |
| संस्करण | : | पहिलो, वि.सं. २०७४ (१२०० प्रति)<br>हीरक जयन्ती प्रकाशन |
| प्रकाशक | : | नेपाल प्रज्ञा-प्रतिष्ठान<br>कमलादी, काठमाडौँ |
| कम्प्युटर सज्जा | : | रञ्जन घिमिरे |
| आवरण सज्जा | : | वसन्तराज अज्ञात |
| मूल्य | : | रु. २४०।- |
| मुद्रण | : | साझा प्रकाशनको छापाखाना<br>पुल्चोक, ललितपुर |
| ISBN | : | 978-9937-689-42-7 |

# कुलपतिको मन्तव्य

नेपालका भाषा, साहित्य, कला, संस्कृति तथा ज्ञान-विज्ञानका विविध विधाको अध्ययन, अनुसन्धान एवम् प्रवर्धन गर्दै तत् विषयमा उत्कृष्ट ग्रन्थ प्रकाशन गर्ने अभिप्रायका साथ वि.सं. २०१४ मा सुरुमा नेपाली साहित्य कला एकेडेमीका रूपमा स्थापित नेपाल एकेडेमीले क्रमशः रायल नेपाल एकेडेमी र नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठानको नामबाट विकसित हुँदै आफूले राज्यबाट प्राप्त गरेको उत्तरदायित्वलाई गहनतापूर्वक वहन गर्दै आएको कुरा सबैलाई अवगत भएकै छ। २०६२/०६३ को जन आन्दोलनपछि साबिकको नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठानबाट ललित कला एवम् नाट्य-सङ्गीत विधालाई छुट्टचाई छुट्टाछुट्टै प्रज्ञा-प्रतिष्ठान गठन गरिएको र नेपाल प्रज्ञा-प्रतिष्ठान ऐन २०६४ ले नेपालका भाषा, साहित्य, संस्कृति, सामाजिक शास्त्र र दर्शनको अध्ययन, अनुसन्धानमार्फत प्रवर्धन गर्ने जिम्मेवारी प्रदान गर्दै वर्तमान नेपाल प्रज्ञा-प्रतिष्ठान गठन गरेको हो। यस अर्थमा प्रज्ञा-प्रतिष्ठानको गठनदेखिकै बिरासत ग्रहण गर्दै हाल आफूले पाएका कार्यक्षेत्रमा यो प्रज्ञा-प्रतिष्ठान कार्यरत छ।

भाषा, संस्कृति, धर्म, दर्शन आदि क्षेत्रमा रहेको मुलुकको विविधतालाई सम्बोधन गर्दै यस्तो विविधताभित्र रहेको एकतालाई अझ समृद्ध पार्ने क्रममा नेपालका प्राज्ञिक जगत्का समग्र विज्ञहरूलाई समेट्दै अघि बढ्न हामी कटिबद्ध छौँ। देशभित्र र बाहिर रहेका समग्र नेपाली स्रष्टाको छाता भई उनीहरूको ज्ञान र सिपलाई अधिकतम प्रयोग गर्दै उनीहरूलाई प्राज्ञिक स्थान प्रदान गर्न प्रज्ञा-प्रतिष्ठान कटिबद्ध छ। यसरी राष्ट्रिय रूपमा समग्र नेपालीहरूको साझा प्राज्ञिक थलो बनाउने लक्ष्यका साथ नेपाल प्रज्ञा-प्रतिष्ठानका नीति र कार्यक्रम रहने गरेका छन्। यसका

अतिरिक्त अन्तर्राष्ट्रिय जगत्मा स्थापित समान प्रकृतिका प्राज्ञिक संस्थाहरूसँग संस्थागत समझदारी बढाउँदै प्राज्ञिक आदान-प्रदान मार्फत नेपाल प्रज्ञा-प्रतिष्ठानको अन्तर्राष्ट्रिय छवि निर्माण गर्न पनि हामी प्रतिबद्ध छौँ । यसरी स्पष्ट राष्ट्रिय एवं अन्तर्राष्ट्रिय छवि भएको प्रज्ञा-प्रतिष्ठानको रूपमा नेपाल प्रज्ञा-प्रतिष्ठानलाई विकसित गर्ने हाम्रो प्रयासलाई सार्थक बनाउन सरोकारवाला समग्र प्राज्ञहरूको सहयोगको आवश्यकता हामीले महसुस गरेका छौँ । यसरी नेपालभित्र र बाहिर पनि गोष्ठी, सेमिनार, सभा, सम्मेलन, अध्ययन, अनुसन्धान एवं ग्रन्थ प्रकाशन सहित अनुवाद मार्फत ज्ञान र सृजनाको आदान-प्रदानमा नै नेपाल प्रज्ञा-प्रतिष्ठान सक्रिय रहने प्रतिबद्धता सरोकारवाला सबै प्राज्ञहरूसँग जाहेर गर्दछौँ ।

**नेपाल प्रज्ञा-प्रतिष्ठान**
**हीरक वर्ष, २०७४**

(**गङ्गाप्रसाद उप्रेती**)
**कुलपति**
**नेपाल प्रज्ञा-प्रतिष्ठान**

# प्रकाशकीय

नेपालमा तन्त्रपरम्पराको लामो इतिहास छ। तान्त्रिक साधनापद्धतिमा कुलप्रक्रिया उच्चतर साधनापद्धतिमा पर्दछ। कालिकाकुलपरम्पराको महत्त्वपूर्ण ग्रन्थमा **कालिकाकुलपञ्चशतक** पर्दछ। यस ग्रन्थका कालीमुख, कालिकाक्रम, कालिकाकुल, देवीपञ्चशतिक नाम पनि प्रचलनमा छन्। कालिकाकुलपरम्पराका प्रवर्तक आचार्य श्रीनाथद्वारा वि.सं. ९३५-९८५ का बीचमा कालिकाकुलपञ्चशतकको रचना गरिएको हो। शैव एवम् शाक्त परम्पराका ठूला आचार्य जयरथले तन्त्रालोकको विवेकनामक आफ्नो टीकामा देवीपञ्चशतिक वा पञ्चशतिक नामक ग्रन्थबाट भनी यस ग्रन्थका केही श्लोकहरू उद्धृत गरेको पाइएकोले कालिकाकुलपरम्परामा यस ग्रन्थको प्रामाणिकता र लोकप्रियता सिद्ध हुन्छ।

शैव तथा शाक्त तन्त्र परम्पराका प्रसिद्ध आचार्य विमलप्रबोध कालिकाकुलपञ्चशतक लिएर काश्मीरबाट नेपाल आएका र नेपालका प्रथम मल्ल राजा अरि मल्लको राज्याभिषेक उनले गरेको बयान पाइन्छ। प्राचीन नेवारी, बङ्गाली तथा देवनागरी लिपिमा सारिएका तथा नेपालमा भेटिएका यस ग्रन्थको पाण्डुलिपिलाई सम्पादन तथा अनुवाद गरी पुस्तक तयार पार्ने उपप्रा. माधव लामिछानेलाई नेपाल प्रज्ञा-प्रतिष्ठानको तर्फबाट धन्यवाद ज्ञापन गर्दछु।

विष्णुविभु घिमिरे

(डा. **विष्णुविभु घिमिरे**)
**उपकुलपति**

**कमलादी, काठमाडौँ**

# विभागीय मन्तव्य

नेपाल प्रज्ञा–प्रतिष्ठान दर्शन विभागको अनुसन्धानपरियोजना अन्तर्गत **कालिकाकुलपञ्चशतक**को सम्पादन भएको हो। राष्ट्रिय अभिलेखालयमा रहेको पाण्डुलिपिको आधारमा तयार पारिएको यस पुस्तकबाट पाण्डुलिपिको दृष्टिले अत्यन्त सम्पन्न नेपालको पुस्तकसम्पदालाई कोट्याउने काम भएको छ। उपोद्घातका साथै नेपाली अनुवादसहितको यो सम्पादन समयमै बुझाई प्रकाश गर्ने समयमा परिमार्जनमा दत्तचित्त उपप्रा. श्रीमाधवप्रसाद लामिछानेलाई धन्यवाद छ। पुस्तकसम्पादनमा महत्त्वपूर्ण सुझाव दिई डा. श्रीमहेशराज पन्तले हामीलाई गुन लगाउनु भएको छ, त्यसका लागि उहाँमा कृतज्ञता निवेदन गर्दछु। गुणदोषको आधारमा यस पुस्तकको यथोचित मूल्याङ्कन हुनेछ र हामीलाई भविष्यमा सही मार्ग पहिल्याउन बढी मद्दत मिल्नेछ भन्ने आशा पनि मैले लिएको छु।

दिनेशराज पन्त

(**प्रा. दिनेशराज पन्त**)
प्रमुख
दर्शन विभाग
नेपाल प्रज्ञा-प्रतिष्ठान

# प्राक्कथन

प्रस्तुत **कालिकाकुलपञ्चशतक** नामक ग्रन्थको पाण्डुलिपि खोजीदेखि प्रारम्भ भएको ग्रन्थसम्पादनको यस यात्रामा मलाई पर्याप्त हौसला र प्रेरणा प्रदान गर्नुका साथै समयसमयमा आवश्यक सल्लाह, सुझाव र अध्ययन सामग्रीसमेत उपलब्ध गराई ग्रन्थसम्पादनको जटिल कार्यलाई सरल बनाउन सहयोग गर्नुहुने आदरणीय प्राज्ञ प्रा. दिनेशराज पन्तज्यूको सहयोग धन्यवादको सीमाभन्दा पर छ त्यसैले म उहाँप्रति सदैव नतमस्तक छु। नेपालमा उपलब्ध पाण्डुलिपिहरू प्राचीनता र प्रामाणिकताका दृष्टिले उच्च कोटीका रहेका छन्। यस तथ्यलाई हृदयङ्गम गरी प्रस्तुत ग्रन्थ प्रकाशन गर्नमा तदारुकता देखाइदिएकोमा नेपाल प्रज्ञा-प्रतिष्ठानका कुलपति गङ्गाप्रसाद उप्रेती, उपकुलपति डा. विष्णुविभु घिमिरे, सदस्य-सचिव प्रा.डा. जीवेन्द्र देव गिरी र प्रज्ञा-प्रतिष्ठानका सम्बद्ध सबैमा हार्दिक कृतज्ञता प्रकट गर्दछु।

प्रस्तुत सम्पादित ग्रन्थको उपोद्घातका ११-४१ पृष्ठका प्रस्तुतिमा डा.महेशराज पन्तको **Jātarūpa's commentary on the Amarkośa** (Motilal Banarasidas, Delhi, 2000) नामक कृतिको पूर्ण प्रभाव रहेको छ। प्रस्तुत ग्रन्थको सम्पादनमा उक्त पुस्तकबाट मैले प्रशस्त प्राज्ञिक खुराक प्राप्त गरेको छु। अतः म उहाँ र उहाँको उक्त कृतिप्रति सदैव ऋणी रहनेछु। त्यसका साथै ग्रन्थ सम्पादनका क्रममा उपयोगी सामग्री प्रदान गरी पुऱ्याउनु भएको सहयोगका लागि म उहाँलाई हार्दिक धन्यवाद व्यक्त गर्न चाहन्छु।

ग्रन्थ सम्पादनका क्रममा आदरणीय गुरु प्रा. विद्यानाथ उपाध्याय भट्टले दिनुभएको मार्गनिर्देशन र आशीर्वाद यस कार्यका लागि मेरो बलियो सम्बल बनेको छ त्यसैले उहाँप्रति कृतज्ञता प्रकट गर्नु म आफ्नो कर्तव्य सम्झन्छु।

मलाई सदैव अनुसन्धानमूलक कार्यमा लाग्न प्रेरित गर्ने मेरा आदरणीय गुरुहरू प्रा. डा. स्थानेश्वर तिमल्सिना एवं प्रा. डा. दिवाकर आचार्यलाई यस सन्दर्भमा सम्झनु र हार्दिक नमन गर्नु म आफ्नो कर्तव्य सम्झन्छु।

ग्रन्थ सम्पादनका क्रममा आदरणीय गुरु प्रा. रामहरि दाहाल तथा सहकर्मी अग्रज विद्वान्हरू सहप्रा. डा. जीवन अधिकारी, सहप्रा. प्रमोदवर्धन कौण्डिन्न्यायन तथा सहप्रा. भीम कण्डेलले दिनु भएको महत्त्वपूर्ण सुझावका लागि म उहाँहरूलाई हार्दिक धन्यवाद व्यक्त गर्न चाहन्छु।

प्रस्तुत ग्रन्थको सम्पादन कार्यमा व्यस्त रहेको जानकारी गराउँदा खुसी व्यक्त गर्ने एवं काश्मीर शैवदर्शनका साथै यस ग्रन्थसँग सम्बद्ध विषयमा पनि थप जानकारी लिने उद्देश्यले सम्पूर्ण आर्थिक व्ययभार वहन गर्दै मेरो साथमा काश्मीरयात्रामा सहभागी हुने मेरा अष्ट्रेलियाली मित्र इरिक ले सिमोरलाई पनि म यहाँ स्मरण गर्दै धन्यवाद प्रकट गर्न चाहन्छु।

बनारस निवासी मेरा भारतीय मित्र निहार पुरोहितले मार्क डिच्कोभ्स्की नामक बेलायती विद्वान्सँग पनि रहेको यस ग्रन्थको पाण्डुलिपि मलाई उपलब्ध गराउन गर्नुभएको प्रयत्नका लागि म उहाँलाई धन्यवाद दिन चाहन्छु।

राष्ट्रिय अभिलेखालय, काठमाडौँमा रहेका यस ग्रन्थका पाण्डुलिपिहरू उपलब्ध गराउन सहयोग गर्ने उक्त अभिलेखालयका अनुसन्धान अधिकृत राजु रिमाल, मनिता न्यौपाने एवं अन्य सम्बद्ध कर्मचारीहरूलाई पनि धन्यवाद दिन चाहन्छु।

प्रस्तुत ग्रन्थको सम्पादनका क्रममा सम्पूर्ण घरायसी जिम्मेवारी एक्लैले वहन गरी निर्धारित समयमै कार्यसम्पन्न गर्न सहयोग गर्ने मेरी जीवनसँगिनी भगवती पनि धन्यवादकी पात्र छिन्। त्यसैगरी ग्रन्थलाई कम्प्युटर टङ्कण गर्ने क्रममा देखापर्ने प्राविधिक समस्या समाधान गर्न सहयोग गर्ने छोरो अस्तित्व र छोरी आयुषालाई पनि सस्नेह धन्यवाद दिन चाहन्छु।

अन्त्यमा दृष्टिदोषवश मुद्रणसम्बन्धी केही त्रुटि रहन गएका भए त्यसका निम्ति म सहृदयी विद्वान् पाठकहरूसँग क्षमायाचना गर्दछु।

**– माधवप्रसाद लामिछाने**
**उपप्राध्यापक, नेपाल संस्कृत विश्वविद्यालय**

# विषयसूची

# उपोद्घात

**विषय प्रवेश**

आदरणीय प्राज्ञ प्रा. दिनेशराज पन्तज्यूको सल्लाहबमोजिम नेपाल प्रज्ञा-प्रतिष्ठानबाट प्रकाशित **दर्शनावली** (भाग-३) का लागि शिवाद्वयवाद अन्तर्गत क्रमदर्शनमाथि लेख लेख्ने क्रममा बेलायती विद्वान् मार्क डिच्कोभ्स्कीले **कालिकाकुलपञ्चशतक** नामक ग्रन्थलाई क्रमदर्शनका प्रथम आचार्यका रूपमा सर्वमान्य शिवानन्द प्रथमको रचना हुन सक्ने सम्भावना व्यक्त गरेको भनी क्रमदर्शनका प्रसिद्ध भारतीय विद्वान् नवजीवन रस्तोगीले लेखेको लेखमाथि जब मेरो दृष्टि पर्‍यो तब उक्त ग्रन्थको मातृका खोज्ने उत्सुकता ममा जाग्यो। सोही सिलसिलामा राष्ट्रिय अभिलेखालयका अनुसन्धान अधिकृत राजु रिमाल एवं मनिता न्यौपानेको सहयोगमा कालिकाकुलपञ्चशतक शीर्षकमा दुईवटा मातृका माइक्रोफिल्म गरिएको जानकारी पाएपछि त्यसलाई त्यहीँ बसेर हेर्ने निधो गरेँ। ती दुईवटा मातृकामध्ये एउटा देवनागरीलिपिमा र अर्कोचाहिँ नेवारलिपिमा सारेको पाइयो। उक्त मातृका हेर्दै जाँदा त्यसमा भएका केही श्लोकहरू अभिनव गुप्तद्वारा विरचित **तन्त्रालोक**माथि आचार्य जयरथले रचना गरेको विवेक नामक व्याख्यामा उद्धृत गरिएका श्लोकहरूसँग मिलेको पाइयो। ती श्लोकहरूमध्ये केही श्लोकहरू **देवीपञ्चशतिक** वा **पञ्चशतिक** नामक ग्रन्थबाट र केही श्लोकहरू ग्रन्थको उल्लेख विना नै उद्धृत गरिएको देखेपछि उक्त ग्रन्थप्रति मेरो रुचि स्वाभाविक रूपमा वृद्धि भयो। उक्त ग्रन्थका अरू पनि मातृका हुन सक्ने सम्भावनाका साथ काली वा कालिकासँग सम्बद्ध मातृका खोजी गर्दै जाँदा **कालिकाक्रम** शीर्षकमा माइक्रोफिल्म गरिएको अर्को मातृका फेला पर्‍यो। सो मातृका गौडलिपिमा सारेको पाइयो। पछि यससम्बन्धी थप खोजी गर्दै जाँदा **कालिकाकुलक्रमार्चन** (रिल नं. ए-१८२/६) शीर्षकमा माइक्रोफिल्म गरिएको अर्को मातृका पनि फेला पर्‍यो। यसप्रकार उक्त ग्रन्थका चारवटा मातृका फेला परे तर कालिकाकुलक्रमार्चन शीर्षकको मातृकालाई भने यस संस्करणमा समयाभावका कारण उपयोग गर्न सकिएको छैन।

## प्रस्तुत संस्करण

प्रस्तुत ग्रन्थको सम्पादन राष्ट्रिय अभिलेखालय, काठमाडौँमा रहेका उपर्युक्त तीनवटा मातृकाका आधारमा गरिएको छ। केशर पुस्तकालयमा सूचीकृत एवं नेपाल–जर्मन हस्तलिखित ग्रन्थ संरक्षण परियोजना अन्तर्गत माइक्रोफिल्म गरिएको कालिकाक्रम शीर्षकको गौडलिपिमा सारिएको मातृकालाई यहाँ मातृका 'क' संज्ञा दिइएको छ भने राष्ट्रिय अभिलेखालयमा सूचीकृत नेवारलिपिमा सारिएको कालिकाकुलपञ्चशतक शीर्षकको मातृकालाई मातृका 'ख' संज्ञा दिइएको छ। त्यसैगरी राष्ट्रिय अभिलेखालयमा नै सूचीकृत देवनागरीलिपिमा सारिएको कालिकाकुलपञ्चशतक शीर्षकको मातृकालाई मातृका 'ग' संज्ञा दिइएको छ। मातृका 'ख' र 'ग' को तुलनामा मातृका 'क' अधिक प्राचीन भएकाले मातृका 'क' को पाठमा कुनै त्रुटि नभएको अवस्थामा मातृका 'क' को पाठलाई आधार मानी त्यसैलाई मूल पाठमा स्थान दिइएको छ र अन्य मातृकामा उल्लिखित पाठलाई पनि टिप्पणीमा स्थान दिइएको छ।

अनुनासिक वर्ण वा अनुस्वारको प्रयोगका सन्दर्भमा विकल्पले दुवै रूप शुद्ध मान्ने परम्परा रहेको अवस्थामा आधुनिक लेखनशैलीको अनुसरण गरिएको छ। उदाहरणका लागि संक्षेप वा सङ्क्षेप, संप्रवक्ष्यामि वा सम्प्रवक्ष्यामि जस्ता शब्दहरूको लेखनमा दोस्रो रूपलाई यहाँ स्थान दिइएको छ र मातृकाको यथापाठलाई टिप्पणीमा स्थान दिइएको छ।

प्रस्तुत ग्रन्थको सम्पादनका क्रममा मूलपाठमा यथासम्भव शुद्ध पाठ राख्ने प्रयत्न गरिएको छ। प्रतिलिपिकारको प्रमादवश भएका अक्षराशुद्धिलाई यहाँ स्थान दिइएको छैन। उदाहरणका लागि कुनै मातृकामा 'संसार'का स्थानमा 'संशार', 'तस्मात्'का स्थानमा 'तस्मात', 'न्यसेत्'का स्थानमा 'न्यषेत्' लेखेको पाइएको खण्डमा त्यसको सङ्केत पादटिप्पणीमा गर्नु आवश्यक नठानी गरिएको छैन।

प्रस्तुत ग्रन्थको सम्पादनका क्रममा मातृकाहरूको परिचय एवं तिनीहरूको बाह्य समीक्षा गर्ने सन्दर्भमा डा. महेशराज पन्तले Jātarūpa's commentary on the Amarakośa नामक आफ्नो कृतिमा अपनाउनु भएको शैलीको अनुसरण गरिएको छ।

## मातृका परिचय

### मातृका 'क' को सामान्य परिचय

केशर पुस्तकालयमा पुस्तकसङ्ख्या ५२४ मा सूचीकृत कालिकाक्रम शीर्षकको मातृका 'क' नेपाल–जर्मन हस्तलिखित ग्रन्थ संरक्षण

परियोजनाद्वारा रिल नं सी-४९/३ अन्तर्गत माइक्रोफिल्म गरिएको छ। उक्त मातृका गौडलिपिमा लेखिएको छ। एलेक्सिस स्यान्डर्सनको मतमा उक्त मातृका लक्ष्मणसेन संवत् १२२ अर्थात् वि.सं. १२८७–१२९९ का बीचमा सारिएको हो (Goodal & paudoux(Ed.), 2007, P. 436). ताडपत्रमा कालो पाको मसीले गौडलिपिमा सारिएको उक्त मातृका २९ से.मी. लम्बाइ र ५ से.मी. चौडाइ परिमाणको रहेको छ। हरेक पत्रको तलमाथि र दायाँबायाँ करिब ३ से.मी.खाली राखिएको छ। उक्त मातृकामा जम्मा उनन्तीसवटा पत्र रहेका छन्। ग्रन्थ सम्पादनका क्रममा पत्रको माथिल्लो भागलाई 'ख' र तल्लो भागलाई 'क' नामकरण गरी १क, १ख, २क, २ख आदि सङ्केत दिइएको छ। उक्त ग्रन्थलाई माइक्रोफिल्म गर्ने क्रममा पत्रहरूको क्रम भङ्ग भएको छ। पत्रसङ्ख्या १, २, ४, ५, ८, ९, १०, ११, १२, १३, १७, १८, १९, २०, २१, २२ र २७ दुरुस्त रहेका छन् भने अन्य पत्रको हालको अवस्था निम्न बमोजिम रहेको छ :

पत्रसङ्ख्या २ख पछि पत्रसङ्ख्या ३क हुनुपर्नेमा पत्रसङ्ख्या २६ख राखिएको छ।

पत्रसङ्ख्या ६खपछि पत्रसङ्ख्या ८क राखिएको। पत्रसङ्ख्या ७ उपलब्ध छैन।

पत्रसङ्ख्या १४खपछि पत्रसङ्ख्या १५क हुनुपर्नेमा पत्रसङ्ख्या १६क राखिएको छ।

पत्रसङ्ख्या १५खपछि पत्रसङ्ख्या १६क हुनुपर्नेमा पत्रसङ्ख्या १७क राखिएको छ।

पत्रसङ्ख्या १६खपछि पत्रसङ्ख्या १७क हुनुपर्नेमा पत्रसङ्ख्या १५क राखिएको छ।

पत्रसङ्ख्या २२खपछि पत्रसङ्ख्या २३क हुनुपर्नेमा पत्रसङ्ख्या २४क राखिएको छ।

पत्रसङ्ख्या २३खपछि पत्रसङ्ख्या २४क हुनुपर्नेमा पत्रसङ्ख्या २५क राखिएको छ।

पत्रसङ्ख्या २४खपछि पत्रसङ्ख्या २५क हुनुपर्नेमा पत्रसङ्ख्या २३क राखिएको छ।

पत्रसङ्ख्या २४खमा पत्रसङ्ख्या उल्लेख गर्ने निर्धारित स्थान टुटेको छ र उक्त स्थानमा पत्रसङ्ख्या २२ उल्लिखित पत्रको केही भाग माइक्रोफिल्म गर्दा खिचिएको छ।

त्यसपछिको पत्रमा पत्रसङ्ख्या २६क र पत्रसङ्ख्या ३क राखिएको छ।

पत्रसङ्ख्या २५खपछि पत्रसङ्ख्या २६क हुनुपर्नेमा पत्रसङ्ख्या २९क राखिएको छ ।

पत्रसङ्ख्या २८खपछि पत्रसङ्ख्या २९क हुनुपर्नेमा पत्रसङ्ख्या ३०क राखिएको छ ।

पत्रसङ्ख्या २९खपछि पत्रसङ्ख्या ३०क हुनुपर्नेमा पत्रसङ्ख्या २७क राखिएको छ ।

पत्रसङ्ख्या २९खमा पत्रसङ्ख्या उल्लेख गर्ने निर्धारित स्थान टुटेको छ र उक्त स्थानमा पत्रसङ्ख्या २५ख उल्लिखित पत्रको केही भाग माइक्रोफिल्म गर्दा खिचिएको छ ।

प्रस्तुत मातृकामा हरेक पत्रमा पाँच हरफ रहेका छन् र प्रति हरफ सरदर ५६ अक्षर रहेका छन् । हरेक पत्रको बीच भागभन्दा करिब ५ से.मी. दायाँपट्टि करिब ४ से. मी. खाली ठाउँ राखी उक्त खाली ठाउँको बीच भागमा पर्ने गरी एउटा प्वाल बनाइएको छ। उक्त प्वाल ग्रन्थलाई बाँध्न प्रयोग गरिने धागो छिराउने प्रयोजनका लागि बनाइएको हो । चिसोले ढुँढी आएर हरेक पानाको दायाँ र बायाँ छेउका भागहरू टुक्रिएका छन् र यसरी टुक्रिँदा कुनै पानामा बढीमा पाँच अक्षरसम्म टुटेका छन् भने कुनै पानामा चाहिँ अक्षरमा कुनै क्षति भएको छैन । पत्रसङ्ख्या ३ख मा तेस्रो, चौथो र पाँचौँ हरफको दायाँ र बायाँ भागका केही अक्षरहरू खुइलिएर नबुझिने भएका छन्। पत्रसङ्ख्या १७खमा दायाँ र बायाँ भागका केही अक्षरहरू खुइलिएर नबुझिने भएका छन्। पत्रसङ्ख्या १९खका अक्षरहरू पनि खुइलिएका छन् तर आइग्लासको प्रयोगले ती अक्षरहरू पढ्न सकिने खालका रहेका छन् ।

**मातृका ‘ख’ को सामान्य परिचय**

विद्वच्छिरोमणि पं. हेमराज पाण्डेको व्यक्तिगत सङ्ग्रहमा रहेका तथा राष्ट्रिय अभिलेखालयमा पुस्तक सङ्ख्या ५–३५८ मा सूचीकृत गरिएको कालिकाकुलपञ्चशतकम् शीर्षकको उक्त मातृका नेपाल–जर्मन हस्तलिखित ग्रन्थसंरक्षण परियोजनाद्वारा रिल नं बी–३०/२६ अन्तर्गत माइक्रोफिल्म गरिएको छ। उक्त मातृका ने.सं. ७६५(वि.सं. १७०१)मा सारिएको भनी तात्कालिक वीर पुस्तकालयबाट प्रकाशित बृहत्सूचीपत्रमा उल्लेख गरिएको छ (पराजुली(सम्पा.), वि.सं.२०२०, पृ. ३८) तर उक्त मातृकाको फ्याक्सिमिलिमा संवत्सूचक कुनै सङ्केत पाइदैन त्यसैले यो विषय थप अनुसन्धेय रहेको छ। नेपाली कागजमा कालो मसीले नेवारी लिपिमा सारिएको उक्त मातृका २०.५ से.मी लम्बाइ र ५ से.मी. चौडाइ परिमाणको रहेको छ। उक्त मातृकामा जम्मा १२४ पत्र रहेका छन् र हरेक पत्रमा दुईवटा भाग रहेका छन्। पत्रको माथिल्लो भागलाई ख र तल्लो भागलाई क नामकरण गरी प्रस्तुत सम्पादित ग्रन्थमा १क, १ख, २क, २ख आदि सङ्केत दिइएको छ। हरेक पत्रको तलमाथि र दायाँबायाँ करिब ४ से.मी. खाली राखिएको छ। पत्रसङ्ख्या २४ देखि ७० सम्म प्रस्तुत ग्रन्थ उपलब्ध छ। प्रस्तुत मातृकामा पत्रसङ्ख्या ३५ र पत्रसङ्ख्या ५० देखि पत्रसङ्ख्या ५७ सम्म जम्मा नौवटा पत्र उपलब्ध छैनन्। उक्त मातृकामा हरेक पत्रमा पाँच हरफ रहेका छन् भने पहिलो र पाँचौँ हरफमा सरदर ३५ अक्षर र दोस्रो, तेस्रो र चौथो हरफमा सरदर ३२ अक्षर रहेका छन्। प्रत्येक पत्रको बीच भागबाट करिब १.५ से.मी. दायाँपट्टि पर्ने गरी पहिलो र पाँचौँ हरफको बीचमा करिब ३ से.मी. खाली ठाउँ राखिएको छ। उक्त खाली ठाउँको बीचमा पर्ने गरी एउटा प्वाल बनाइएको छ। उक्त प्वाल ग्रन्थलाई बाँध्न प्रयोग गरिने धागो छिराउने प्रयोजनका लागि बनाइएको हो। पत्रसङ्ख्या २४कको पहिलो र दोस्रो हरफ तथा पत्रसङ्ख्या २४खको चौथौ र पाँचौँ हरफ, पत्रसङ्ख्या २६कको पहिलो हरफका केही अक्षरहरू कीराले काटेकाले उपलब्ध छैनन्। त्यसैगरी पत्रसङ्ख्या ४२कको पहिलो र दोस्रो हरफका बायाँ भागका केही अक्षरहरू मसी उडेकाले नबुझिने भएका छन्। पत्रसङ्ख्या ४५कका धेरै अक्षरहरू एवं पत्रसङ्ख्या ४५खको दायाँ भागको तेस्रो, चौथो र पाँचौँ हरफका अक्षरहरू मसी उडेकाले नबुझिने भएका छन्। मातृकामा उपलब्ध अन्य पत्र र पाठको स्थिति राम्रो छ।

**मातृका 'ग' को सामान्य परिचय**

विद्वच्छिरोमणि पं. हेमराज पाण्डेको व्यक्तिगत सङ्ग्रहमा रहेको तथा राष्ट्रिय अभिलेखालय, काठमाडौँमा ग्रन्थसङ्ख्या ५-५१८३ मा सूचीकृत गरिएको कालिकाकुलपञ्चशतकम् शीर्षकको उक्त मातृका नेपाल-जर्मन हस्तलिखित ग्रन्थसंरक्षण परियोजनाद्वारा रिल नं ए-१५०/६ अन्तर्गत माइक्रोफिल्म गरिएको छ। नेपाली सादा कागजमा कालो मसीले देवनागरीलिपिमा सारिएको उक्त मातृका ३२.५ से.मी. लम्बाइ र १२.५ से.मी. चौडाइ परिमाणको रहेको छ। यसमा जम्मा चौधवटा पत्र रहेका छन् जसमध्ये सुरुका सातवटा पत्र पत्रसङ्ख्या १ देखि पत्रसङ्ख्या ७ सम्म लगातार अङ्कित छन्, त्यसपछि क८, ख८ र ग८ अङ्कित तीनवटा पत्र रहेका छन् भने त्यसपछि पुनः पत्रसङ्ख्या ९ देखि पत्रसङ्ख्या १२ सम्म लगातार अङ्कित चारवटा पत्र रहेका छन्। हरेक पत्रमा दुईवटा भाग रहेका छन्। पत्रको माथिल्लो भागलाई ख र तल्लो भागलाई क नामकरण गरी प्रस्तुत सम्पादित ग्रन्थमा १क, १ख, २क, २ख आदि सङ्केत दिइएको छ। पत्रसङ्ख्या ग८कमा चौध हरफ रहेका छन् भने पत्रसङ्ख्या १२कमा नै ग्रन्थ समाप्त भएकाले पत्रसङ्ख्या १२खमा **श्रीखपञ्चकस्तोत्रम्**बाहेक केही लेखिएको छैन। मातृकाका अन्य पत्रका हरेक भागमा एघार हरफ रहेका छन्। पत्रसङ्ख्या ४क को पाँचौँदेखि आठौँ हरफ र पत्रसङ्ख्या ग८खको आठौँदेखि एघारौँ हरफसम्म सरदर अठतीस अक्षर एवं पत्रसङ्ख्या ग८कको बाह्रौँदेखि चौधौँ हरफसम्म सरदर छयहत्तर अक्षर रहेका छन् भने अन्य पत्रका हरेक हरफमा सरदर चौवन्न अक्षर रहेका छन्। प्रस्तुत मातृका अन्य मातृकाका तुलनामा निकै अर्वाचीन देखिन्छ अतः यस मातृकाको स्थिति राम्रो छ, कतै पत्र टुटेको वा अक्षरहरू खुइलिएका छैनन्।

का॰कु॰पं॰श॰ १२ रं विभुम् ॥ चिच्चक्रचेतनायुक्तं चन्द्रकोट्यवभासकम् । कल्पान्ताग्निसहस्राभं भूरिसूर्यसमप्रभम् ॥ रुद्रकादिशिवान्तस्थं सर्वसत्त्वादनो
द्यतम् । कलालयेन सहसा भञ्जयन्तं चितिमण्डले ॥ तत्राकाशं विजातीयान्निर्मलं ब्रह्मसन्निभम् । यत्र सम्प्रस्थिता देवी चिद्विश्रामभूमि
का ॥ स्फुरद्द्वादशभिर्भेदैः परमार्कस्वरूपिणी । रश्मिद्वादश्यसद्रश्मिसहस्रशतसन्निभा ॥ वाचां पथि कथं योज्या वक्तुं माकुलनन्दन ।
यो विन्दति सकृत्तस्याः स्मरणात् खेचरो भवेत् ॥ निर्माति विश्वमखिलं संयमत्ते लीलया पुनः । तत्तस्य साधकस्यैव भुक्तिमुक्ति विद्यते ॥ त्रै
लोक्ये तिष्ठते परं भुक्तेनयथेश्वर । परं विज्ञानविभवं कथितं ते त्रिलोचन ॥ एतद्रहस्यं परमं त्वामेयं कालिकाक्रमम् । दुष्प्राप्यं का
लिकाम्नायं सिद्धानां बोधशालिनाम् ॥ न देयं क्रूरतार्किकेन लोभमोहजुषां नृणाम् । नास्तिकानां नटीवानां न स्थाने वासनाम् ॥ भक्ति
श्चात्मपत्नीनामस्थिमालादिधारिणाम् । वेदान्तादिक्रियारूढदानधर्मतपोजुषाम् ॥ तीर्थाश्रमप्रपन्नानां न देयं पारमार्थिकम् । देयं च
गुरुभक्तानां भावज्ञानरहस्य च ॥ कुलागमरहस्यापि कालिभक्तियुतस्य च । अदेयं तस्यापि वीरस्य गुप्ताचारस्य भैरव ॥ तस्यैव वचनं दान
र्यं किं पुनः प्राकृते जने । एतत्सर्वं समासेन कथितं भुजगाङ्गद ॥ योऽप्यशास्त्रस्य देवेश प्राप्येदन्यस्य तथा । कान्ते न पूजयेद्वाथ योगिनीनां
समहत्त्वम ॥ यस्य तिष्ठति हस्तस्थं श्रीकालिक्रमाकुलं । संपूज्यः सर्वथा देवयथा भैरवनायकः ॥ ॥ इति श्रीमदुत्तरपीठे श्रीमच्छ्रीनाथा राम॰
वतारिते श्रीकालिकाकुलपञ्चशते सप्तमः पटलः ॥ ५१ ॥ ॥ समाप्तमिदं श्रीकालिकाक्रमम् ॥ ॥ १२

पत्रसङ्ख्या १२ ख

श्रीरत्नचक्रपञ्चकस्तोत्रम्

## मातृकाको बाह्य समीक्षा

### पत्रसङ्ख्याङ्कन

मातृका 'क'मा पत्रहरूको सङ्ख्याङ्कन हरेक पत्रको माथिल्लो पानाको बायाँ भागमा करिब ३ से.मी. खाली छोडिएको स्थानमा सकेसम्म बीचमा पर्ने गरी गरिएको छ।

मातृका 'ख'मा पत्रसङ्ख्याको उल्लेख हरेक पत्रको माथिल्लो पानाको दायाँ र बायाँ दुवै भागमा करिब चार से.मी. खाली छोडिएको स्थानमा पानाको एकदम बीचमा पर्ने गरी गरिएको छ। दायाँ भागमा पत्रसङ्ख्या अक्षरमा लेखिएको छ भने बायाँ भागमा अङ्कमा लेखिएको छ।

मातृका 'ग'मा पत्रसङ्ख्याको उल्लेख हरेक पत्रको माथिल्लो पानाको दायाँ र बायाँ दुवै भागमा छोडिएको खाली ठाउँमा गरिएको छ। दायाँ भागमा दोस्रो हरफको सीधा पर्ने गरी उक्त खाली स्थानमा अङ्कमा पत्रसङ्ख्या उल्लेख गरिएको छ भने बायाँ भागमा चाहिँ अन्तिम हरफको सीधा पर्ने गरी अङ्कमा नै पत्रसङ्ख्या उल्लेख गरिएको छ र त्यसको माथिल्लो हरफको सीधा पर्ने गरी पत्रसङ्ख्याको माथि 'राम' लेखिएको छ। सातौँ पत्रसम्म यही क्रम देखिन्छ। त्यसपछि चाहिँ क८, ख८ र ग८ उल्लिखित तीनवटा पत्र रहेका छन्। उपर्युक्त पत्रहरूमा पनि पत्रसङ्ख्याको उल्लेख माथि गरेअनुरूप नै गरिएको छ। त्यसपछि पुनः पत्रसङ्ख्या ९ देखि पत्रसङ्ख्या १२ सम्म क्रमैले माथि उल्लेख गरेअनुरूप नै पत्रसङ्ख्याको उल्लेख गरिएको छ।

### चिह्नप्रयोग

मातृका 'क'मा "ॐ नमः श्रीमङ्गलायै" भन्ने मङ्गलाचरण वाक्यपछि दुईवटा दण्डको प्रयोग गरिएको छ। मातृका 'क' मा प्रयुक्त उक्त दण्डको स्वरूप यस्तो छ- ।। अर्थात् पहिलो दण्ड पछिल्लो दण्डको आधा परिमाणको छ। मातृका 'ख' मा पनि उक्त मङ्गलाचरण वाक्यपछि दुईवटा दण्डको प्रयोग भएको छ जुन वर्तमानमा प्रचलित स्वरूपको नै छ अर्थात् दुवै दण्ड समान परिमाणका छन्। त्यसैगरी मातृका 'ग' मा पनि उक्त मङ्गलाचरण वाक्यपछि दुईवटा समान परिमाणका दण्डको प्रयोग देखिन्छ। मातृका 'ग' मा उक्त दुईवटा दण्डपछि करिब १ से.मी. खाली ठाउँ राखेर पुनः दुईवटा दण्डको प्रयोग गरी ग्रन्थको आरम्भ गरिएको छ। कुनै श्लोक पूरा भएपछि श्लोकसमाप्तिसूचक दुईवटा दण्डको प्रयोग गर्ने परम्परा भए तापनि मातृका 'क' मा उक्त परम्पराको पूर्ण निर्वाह भएको छैन। कतै

श्लोक पूरा भएपछि दुईवटा दण्डको प्रयोग देखिन्छ भने कतैचाहिँ एउटा मात्रै दण्डको प्रयोग देखिन्छ। प्रथम मङ्गलाचरण श्लोक चार पादको छ। मातृका 'क'मा उक्त श्लोकको अन्तिम पादमा मात्रै दुईवटा दण्डको प्रयोग गरिएको छ, अन्य पादमा दण्डको प्रयोग गरिएको छैन। उक्त सन्दर्भमा मातृका 'ख' र 'ग'मा भने दोस्रो पादमा एउटा दण्ड र अन्तिम अर्थात् चौथो पादमा दुईवटा दण्डको प्रयोग गरिएको छ। मातृका 'क'मा 'श्रीभैरव उवाच' वा 'श्रीभैरव्युवाच' भन्ने वाक्यको अगाडि र पछाडि दुवै स्थानमा दुईवटा दण्डको प्रयोग देखिन्छ। उक्त वाक्यभन्दा अगाडिको श्लोक अर्धश्लोक भएको अवस्थामा पनि सो अर्धश्लोकको समाप्तिमा दुईवटा दण्डको प्रयोग गरिएको छ। यस सन्दर्भमा मातृका 'ख' र 'ग'मा पनि सोही परम्पराको निर्वाह गरेको देखिन्छ। यसैगरी मातृका 'क'मा पटलको अन्तिम श्लोकको पछाडि दुईवटा दण्डको प्रयोग गरी आधा से.मी.जति खाली ठाउँ राखेर पुनः दुईवटा दण्डको प्रयोग गरी पुष्पिकावाक्य लेखिएको छ। यस सन्दर्भमा मातृका 'ग'मा पनि मातृका 'क'कै परम्पराको अनुसरण गरिएको छ तर दण्डको स्वरूपचाहिँ भिन्न छ। यस सन्दर्भमा मातृका 'ख'मा भने पटलको समाप्तिमा दुईवटा दण्डको प्रयोगपछि यस्तो चिह्नको प्रयोग गरिएको छ– ० । त्यसपछि पुनः दुईवटा दण्डको प्रयोग गरी पुष्पिकावाक्य लेखिएको छ। त्यसैगरी पुष्पिकावाक्यको समाप्तिमा पनि दुईवटा दण्डको प्रयोग तीनवटै मातृकामा समानरूपले गरिएको छ।

मातृका 'ग'मा एउटा दण्ड वा दुईवटा दण्ड प्रयोग गर्नुपर्ने अवस्था छ तर पत्रको बायाँ भागमा पर्याप्त स्थान छैन भने यस्तो चिह्नको प्रयोग गरिएको छ– ॰। उक्त मातृकामा पत्रसङ्ख्या २क मा चौथो र आठौँ हरफमा दुईपटक, पत्रसङ्ख्या ५कमा आठौँ हरफमा एकपटक, पत्रसङ्ख्या ८क मा सातौँ हरफमा एकपटक, पत्रसङ्ख्या क८ख मा दोस्रो हरफमा एकपटक, पत्रसङ्ख्या ख८ख मा छैठौँ हरफमा एकपटक, पत्रसङ्ख्या ख९क मा दोस्रो, चौथो र आठौँ हरफमा तीनपटक, पत्रसङ्ख्या ग८ख मा पहिलो र दोस्रो हरफमा दुईपटक, पत्रसङ्ख्या ग९क मा एघारौँ हरफमा एकपटक, पत्रसङ्ख्या १०ख मा पहिलो हरफमा एकपटक गरी जम्मा तेह्रपटक उपर्युक्त चिह्नको प्रयोग भएको छ।

मातृका 'क'मा पत्रहरू बाँध्न धागो छिराउने प्रयोजनका लागि जुन स्थानमा प्वाल बनाइएको छ त्यस स्थानको दाहिनेपट्टि एवं पत्रको दायाँ भागमा अक्षर लेख्दै जाँदा स्थान शेष रहन गएमा हरफलाई समान क्रमले मिलाउनका लागि उक्त शेष रहन गएको स्थानमा यस्तो चिह्नको प्रयोग गरेको देखिन्छ– ॰ । उक्त चिह्न मातृका 'क'मा एकसय पन्ध्रपटक

प्रयोग भएको छ। उक्त प्रयोजनका लागि मातृका 'ख'मा कतै यस्तो चिह्न – ꣻ, कतै यस्तो चिह्न– ¦ र कतै चाहिँ दुईवटा दण्डको प्रयोग भएको देखिन्छ। त्यस्तो अवस्थामा दुईवटा दण्डको प्रयोग मातृका 'ख'मा तीनपटक भएको छ (पत्रसङ्ख्या २४खः ३, पत्रसङ्ख्या ३९खः ३ र पत्रसङ्ख्या ६६कः ३) माथिकै सन्दर्भमा ꣻ यस्तो चिह्नको प्रयोग मातृका 'ख'मा एकसय बीसपटक भएको छ भने ¦ यस्तो चिह्नको प्रयोग एकासीपटक भएको छ। मातृका 'ग'मा उक्त प्रयोजनका लागि यस्तो चिह्नको प्रयोग भएको छ– ꣻ। उक्त चिह्न मातृका 'ग'मा बत्तीसपटक प्रयोग भएको छ।

मातृका 'क'मा पत्रहरू बाँध्नका लागि धागो छिराउने प्रयोजनका लागि प्वाल राख्न छोडिएको खाली स्थानको दाहिनेपट्टिको भागमा अक्षर लेख्दै जाँदा कुनै अक्षरको आकार नअटाउने भएमा आकार बुझाउनका लागि उक्त अक्षरको शिरोभागको देब्रेपट्टि यस्तो चिह्न प्रयोग गरिएको छ– ꣻ। उक्त चिह्न मातृका 'क' मा उनन्तीसपटक प्रयोग भएको छ।

## बुट्टा

मातृका 'क' मा दुई प्रकारका बुट्टाहरूको प्रयोग देखिन्छ। तिनीहरू यस्ता छन् -१. ꣸ २. ꣸। पहिलो बुट्टा ग्रन्थको अन्तिम अर्थात् सातौँ पटलबाहेक अन्यत्र पटलको समाप्तिमा पुष्पिकावाक्यपछि एक जोडी युग्मदण्डका बीचमा प्रयोग गरिएको छ। सातौँ पटलमा चाहिँ श्लोकको समाप्तिपछि एक जोडी युग्मदण्डका बीचमा उक्त बुट्टाको प्रयोग गरी पुष्पिकावाक्य लेखिएको छ। दोस्रो बुट्टा ग्रन्थको समाप्तिमा पुष्पिकावाक्य पछि **समाप्तमिदं श्रीकालिकाक्रमम्** लेखेर एक जोडी युग्मदण्डका बीचमा प्रयोग गरिएको छ।

मातृका 'ख'मा पनि दुई प्रकारका बुट्टाहरूको प्रयोग देखिन्छ। तिनीहरू यस्ता छन् -१. ꣸ २. ○। पहिलो प्रकारको बुट्टा भैरव उवाच वा भैरव्युवाच भन्ने वाक्य लेख्नुभन्दा पहिले युग्मदण्डको अगाडि प्रयोग गरिएको छ तर उपर्युक्त वाक्य कुनै पटलको प्रारम्भमा छ भने द्वितीय पटलको प्रारम्भमा बाहेक अन्यत्र दोस्रो प्रकारको बुट्टाको प्रयोग गरिएको छ। दोस्रो प्रकारको बुट्टाको प्रयोग प्रथम र द्वितीय पटलको समाप्तिमा बाहेक अन्य पटलको समाप्तिमा पुष्पिकावाक्यभन्दा अगाडि गरिएको छ। सप्तम पटलमा पुष्पिकावाक्यपछि यो बुट्टाको प्रयोग गरी **समाप्तमिदं श्रीकालिकाक्रमम्** लेखेर पुनः एक जोडी युग्मदण्डका बीचमा यो बुट्टाको प्रयोग गरिएको छ। यस प्रकार मातृका 'ख'मा दोस्रो प्रकारको बुट्टाको प्रयोग दशपटक भएको छ।

**शुद्धिप्रक्रिया**

मातृका 'ग'मा शुद्धिका लागि पाँचवटा प्रक्रिया अपनाएको पाइन्छ।

१. **अशुद्ध वर्णलाई नै पुनः सच्याउने** : यो प्रक्रिया दुई ठाउँमा (पत्रसङ्ख्या १क : १ र पत्रसङ्ख्या ३ख : ७ र ८) अपनाइएको छ।

२. **अशुद्ध वर्ण रहेको हरफको सीधा नजिक पर्ने पत्रको खाली भाग (दायाँ वा बायाँ) मा कोष्ठकभित्र वा कोष्ठक विना नै शुद्ध वर्ण लेख्ने र अशुद्ध वर्णको मुनि सङ्केतस्वरूप ३. बिन्दु दिने** : यो प्रक्रिया पाँच ठाउँमा (पत्रसङ्ख्या ७क : ६ दुईपटक, पत्रसङ्ख्या ७क : ९, पत्रसङ्ख्या ७क : ११, पत्रसङ्ख्या ग८क : ४) अपनाइएको छ।

४. **अशुद्ध वर्णको ठीक माथि शुद्ध वर्ण लेख्ने** : यो प्रक्रिया दुई ठाउँमा (पत्रसङ्ख्या ख८ख : १० र पत्रसङ्ख्या १०क : ४) अपनाइएको छ। पत्रसङ्ख्या ख८ख : १० मा अशुद्ध वर्णहरूको माथि कोष्ठकमा शुद्ध वर्ण लेखिएको छ भने पत्रसङ्ख्या १०क: ४ मा अशुद्ध वर्णको ठीक माथि शुद्ध वर्ण लेखी अशुद्ध वर्णको मुनि सङ्केतस्वरूप बिन्दु दिइएको छ।

५. **अशुद्ध वर्ण वा अशुद्ध शब्दलाई केही नगरी पुनः कोष्ठकमा शुद्ध वर्ण वा शुद्ध शब्द लेख्ने** : यो प्रक्रिया तीन ठाउँमा (पत्रसङ्ख्या ख८ख : ३, ख८क : ५ र ख८ख : ७) अपनाइएको छ।

मातृका 'क' र 'ख'मा कतै पनि शुद्धिप्रक्रियाका लागि अतिरिक्त प्रयास गर्नु परेको देखिँदैन। यसबाट ती दुवै मातृकामा लिपिकरहरूको पूर्ण सचेतता र लगनशीलताको बोध हुन्छ।

**अक्षर वा शब्द थप्ने प्रक्रिया**

मातृका 'ख'मा एक ठाउँमा (पत्रसङ्ख्या ४३ख : १) लेख्न छुटेको शब्द थप्ने प्रक्रिया अपनाइएको छ। उक्त स्थानमा जहाँ शब्द छुटेको छ त्यहाँ डिकोमाथि यस्तो चिह्न प्रयोग गरी छुटेको शब्द लेखिएको छ– ∨। उक्त शब्दको अगाडि यस्तो चिह्न– ✗ र पछाडि यस्तो चिह्न दिइएको छ– ⌒। थप गरिएको शब्द देवनागरीलिपिमा लेखिएको देखिएकाले शब्द थप्ने यो प्रक्रिया ग्रन्थ सार्ने बखतमा नभई धेरै कालपछि अपनाइएको बुझिन्छ।

मातृका 'ग'मा तीन ठाउँमा (पत्रसङ्ख्या १क : १, ग८क : १२, ग८ख : १) छुटेको अक्षर वा शब्द थप्ने प्रक्रिया अपनाइएको छ। पत्रसङ्ख्या १क : १ मा जहाँ अक्षर छुटेको हो त्यहाँ हुनुपर्ने अक्षरको ठीक मुनि यस्तो चिह्न दिएर माथिपट्टि छुटेको अक्षर थपिएको छ– ⌒। पत्रसङ्ख्या ग८क

: १२-१४ मा तीनवटा हरफ थपिएको छ। यसरी थप्दा पत्रको तल्लो भागमा छोडिएको खाली ठाउँमा साना अक्षरमा ती थपिएका हरफहरू लेखिएका छन्। पत्रसङ्ख्या ग८ख : १ मा जहाँ अक्षरहरू छुटेका छन् त्यहाँ यस्तो चिह्न दिएर डिकोमाथि छुटेका अक्षरहरू लेखिएका छन्– ❦ ।

### वर्णविन्यास

**अवग्रहचिह्न (खण्डाकार)**

विसर्गान्त शब्द र अकार आदिमा हुने शब्द, आकारान्त शब्द र अकार आदिमा हुने शब्द एवं एकारान्त शब्द र अकार आदिमा हुने शब्दका बीच सन्धि हुँदा अकार आदिमा हुने शब्दको अकार लोप भई त्यसका स्थानमा अवग्रहचिह्नको प्रयोग गर्ने आधुनिक संस्कृत लेखनशैली रहेको छ। विसर्गान्त शब्द र अवर्णाद्य शब्दका बीच सन्धि भएको अवस्थामा विसर्गान्त शब्दको विसर्गको उत्व हुने र अवर्णाद्य शब्दको अकार लोप भई उक्त अकारका स्थानमा अवग्रहचिह्नको प्रयोग गर्ने प्रचलन रहेको छ। आकारान्त शब्द र अवर्णाद्य शब्दका बीच सन्धि हुँदा अवर्णाद्य शब्दको अकार लोप भई त्यसको स्थानमा अवग्रहचिह्नको प्रयोग गर्ने प्रचलन रहेको छ। त्यसैगरी एकारान्त शब्द र अवर्णाद्य शब्दका बीच सन्धि हुँदा अवर्णाद्य शब्दको अकार लोप भई त्यसका स्थानमा अवग्रहचिह्नको प्रयोग गर्ने परम्परा रहेको छ। प्रस्तुत ग्रन्थमा जम्मा साठीवटा शब्दहरू अवग्रहचिह्न प्रयोग गर्नुपर्ने खालका छन्। तीमध्ये विसर्गान्त शब्द र अवर्णाद्य शब्दका बीच सन्धि भई अवग्रहचिह्नको प्रयोग गर्नुपर्ने शब्दहरू बाईसवटा रहेका छन् भने आकारान्त शब्द र अवर्णाद्य शब्दका बीच सन्धि भई उक्त चिह्नको प्रयोग गर्नुपर्ने शब्दहरू उन्नाईसवटा रहेका छन्। त्यसैगरी एकारान्त शब्द र अवर्णाद्य शब्दका बीच सन्धि भई अवग्रहचिह्नको प्रयोग गर्नुपर्ने शब्दहरू उन्नाईसवटा रहेका छन्। मातृका 'क' र 'ख'मा कतै पनि अवग्रह चिह्नको प्रयोग देखिँदैन तथापि ती मातृकामा अवग्रहचिह्नको प्रयोग गर्नेबाहेक अन्य सबै नियमहरूको अनुसरण गरिएको छ। मातृका 'ग'मा भने केवल एक स्थानमा (पत्रसङ्ख्या ४ख : २) अवग्रहचिह्नको प्रयोग गरिएको छ, अन्यत्र उक्त चिह्नको प्रयोग देखिँदैन तर माथि उल्लिखित नियमहरूको भने अनुसरण गरिएको छ।

**द्वित्व**

मातृका 'क' र 'ख'मा रेफभन्दा पछाडि आउने क, ग, च, ज, ण, त, द, ध, न, प, ब, भ, म, ल अनि व गरी पन्ध्रवटा वर्णलाई द्वित्व गरेको

देखिन्छ। मातृका 'क'मा रेफपछि आउने कवर्णको द्वित्व लगभग पचास प्रतिशत देखिन्छ भने मातृका 'ख'मा पनि रेफपछि आउने कवर्णको द्वित्व लगभग पचास प्रतिशत नै देखिन्छ। मातृका 'क'मा रेफपछि आउने गवर्णको द्वित्व लगभग त्रियान्नब्बे प्रतिशत देखिन्छ भने मातृका 'ख'मा लगभग एकासी प्रतिशत देखिन्छ। प्रस्तुत ग्रन्थमा रेफपछि चवर्ण आउने शब्द एउटा रहेको छ[1]। उक्त शब्दको चवर्ण मातृका 'क'मा द्वित्व भएको छ भने मातृका 'ख'मा उक्त शब्द मसी उडेकाले नबुझिने भएको छ त्यसैले उक्त सन्दर्भमा केही भन्न सकिने स्थिति छैन। मातृका 'क'मा रेफपछि आउने जवर्णको द्वित्व लगभग एकानब्बे प्रतिशत रहेको छ भने मातृका 'ख'मा उक्त अनुपात शत प्रतिशत रहेको देखिन्छ। मातृका 'क'मा रेफपछि आउने णवर्णको द्वित्व लगभग शून्य छ भने मातृका 'ख'मा चाहिँ यो अनुपात लगभग त्रिहत्तर प्रतिशत रहेको छ। मातृका 'क'मा रेफपछि आउने तवर्णको द्वित्व करिब बयालीस प्रतिशत देखिन्छ भने मातृका 'ख'मा सो अनुपात करिब पैँतीस प्रतिशत देखिन्छ। मातृका 'क'मा रेफपछि आउने दवर्णको द्वित्व करिब चौवालीस प्रतिशत देखिन्छ भने मातृका 'ख'मा सो अनुपात छपन्न प्रतिशत देखिन्छ। मातृका 'क'मा रेफपछि आउने धवर्णको द्वित्व करिब एकतीस प्रतिशत रहेको छ भने मातृका 'ख'मा सो अनुपात करिब साठी प्रतिशत रहेको छ। मातृका 'क' एवं 'ख'मा रेफपछि आउने नवर्णको द्वित्व शत प्रतिशत रहेको देखिन्छ। मातृका 'क'मा रेफपछि आउने पवर्णको द्वित्व करिब तेत्तीस प्रतिशत छ भने मातृका 'ख'मा सो अनुपात सतसठ्ठी प्रतिशत रहेको छ। मातृका 'क'मा रेफपछि आउने बवर्णको द्वित्व सतसठ्ठी प्रतिशत रहेको छ भने मातृका 'ख'मा सो अनुपात शत प्रतिशत रहेको छ। मातृका 'क'मा रेफपछि आउने भवर्णको द्वित्व लगभग सात प्रतिशत रहेको छ भने मातृका 'ख'मा चाहिँ सो सन्दर्भमा भवर्णको द्वित्व करिब तेत्तीस प्रतिशत रहेको छ। मातृका 'क'मा रेफपछि आउने मवर्णको द्वित्व करिब पैँतीस प्रतिशत रहेको छ भने मातृका 'ख'मा चाहिँ सो सन्दर्भमा मवर्णको द्वित्व करिब पैँसठ्ठी प्रतिशत रहेको छ। मातृका 'क'मा रेफपछि आउने लवर्णको द्वित्व अनुपात ६:१ रहेको छ भने मातृका 'ख'मा सो अनुपात ६:२ रहेको छ। मातृका 'क'मा रेफपछि आउने ववर्णको द्वित्व लगभग चौरासी प्रतिशत रहेको छ भने मातृका 'ख'मा उक्त सन्दर्भमा ववर्णको द्वित्व लगभग छपन्न प्रतिशत रहेको छ।

---

१ सम्पादित ग्रन्थ ४/४क = मातृका 'क'-१४क : १, मातृका 'ख'-४५ख :१, मातृका 'ग'-३८क : ६।

**अद्वित्व**

मातृका 'क' र 'ख' मा तत्त्व एवं सत्त्व शब्दमा वकारभन्दा अगाडिको तवर्ण द्वित्व हुनुपर्नेमा द्वित्व भएको छैन तर मातृका 'ग' मा भने उक्त शब्दहरूमा तवर्णको द्वित्व भएको छ। त्यसैगरी क, ख र ग तीनवटै मातृकामा ऋतूज्ज्वला, तेजोज्ज्वला र महोज्ज्वला शब्दमा रहेको जवर्णको द्वित्व हुनुपर्नेमा भएको देखिँदैन।

**अनुनासिक वर्ण**

अघिल्लो वर्ण अनुस्वारले युक्त छ र पछिल्लो वर्ण स्पर्शवर्ण (कदेखि मसम्मका वर्णहरू) छ भने त्यस्तो अवस्थामा अनुस्वार परिवर्तन नभई अनुस्वार नै रहने वा अनुस्वारपछिको वर्ण जुन वर्गको छ सोही वर्गको अनुनासिक वर्णमा परिवर्तन हुने वैकल्पिक प्रयोग संस्कृतभाषाको लेख्यपरम्परामा पाइन्छ। जसअनुसार उपर्युक्त सन्दर्भमा मातृका 'क'मा चौवन्न प्रतिशत शब्दहरूमा अनुनासिक वर्णको प्रयोग भएको छ भने मातृका 'ख'मा छयालीस प्रतिशत र मातृका 'ग'मा सत्तरी प्रतिशत अनुनासिक वर्णको प्रयोग भएको छ।

अघिल्लो वर्ण अनुस्वारले युक्त छ र पछिल्लो वर्ण 'च' वा 'तु' निपात छ भने त्यस्तो अवस्थामा पनि पछिल्लो वर्ण 'च' निपात भए अनुस्वार चवर्गको अनुनासिक वर्ण 'ञ्' मा परिवर्तन हुने, पछिल्लो वर्ण 'तु' निपात भए तवर्गको अनुनासिक वर्ण 'न्' मा परिवर्तन हुने वा अनुस्वार नै रहने वैकल्पिक प्रयोग संस्कृत भाषाको लेख्यपरम्परामा पाइन्छ। जसअनुसार उपर्युक्त सन्दर्भमा मातृका 'क'मा करिब पैँसठ्ठी प्रतिशत शब्दहरूमा अनुनासिक वर्णको प्रयोग पाइन्छ भने मातृका 'ख'मा करिब बयालीस प्रतिशत शब्दहरूमा अनुनासिक वर्णको प्रयोग पाइन्छ। त्यसैगरी मातृका 'ग'मा उपर्युक्त सन्दर्भमा अनुनासिक वर्णको प्रयोग ज्यादै न्यून रहेको छ। यसलाई तथ्याङ्कमा हेर्ने हो भने उक्त प्रयोग करिब चार प्रतिशत मात्र हुन आउँछ।

**हलन्त 'म्'को सट्टामा अनुस्वारको प्रयोग**

संस्कृत भाषाको स्तरीय लेख्यपरम्परामा वाक्य, श्लोक वा अर्धश्लोकको अन्तिम शब्द अन्त्यमा हलन्त 'म्' ध्वनिले युक्त छ भने त्यस्तो अवस्थामा अनुस्वारको सट्टामा हलन्त 'म्' नै लेख्ने प्रचलन रहेको छ। प्रस्तुत ग्रन्थको मातृका 'क' र 'ख'मा भने उक्त परम्पराको पटक्कै निर्वाह

भएको छैन। मातृका 'ग'मा चाहिँ केही अपवादलाई[1] छोडेर उपर्युक्त सन्दर्भमा हलन्त 'म्' कै प्रयोग भएको दखिन्छ।

**अनुस्वारको सट्टामा हलन्त 'न्' वा हलन्त 'म्' को अनुचित प्रयोग**

अनुस्वारयुक्त वर्णका पछाडि य, र, ल, व, श, ष, स, ह वर्ण छ भने अनुस्वार नै लेख्ने परम्पराका विपरीत प्रस्तुत ग्रन्थको मातृका 'क', 'ख' र 'ग'मा केही ठाउँमा उक्त अनुस्वारलाई हलन्त 'म्' वर्णका रूपमा अनुचित प्रयोग गरिएको छ। त्यसैगरी अनुस्वारयुक्त वर्णका पछाडि तवर्ण छ भने अनुस्वार नै लेख्ने वा उक्त अनुस्वारलाई हलन्त 'न्'मा परिवर्तन गर्ने परम्पराका विपरीत अनुस्वारलाई हलन्त 'म्'का रूपमा अनुचित प्रयोग गरिएको छ। उदाहरण :

---

१. मातृका 'ग'मा हलन्त 'म्'को सट्टामा अनुस्वारको प्रयोग गरिएका केही उदाहरणहरू :
संस्थां (१क : १ = सम्पादित ग्रन्थ १/१)
भावां (१क : १ = सम्पादित ग्रन्थ १/१)
कालीं (१क : २ = सम्पादित ग्रन्थ १/१)
कलां (१क : २ = सम्पादित ग्रन्थ १/२क)
संज्ञितां (१क : २ = सम्पादित ग्रन्थ १/२)
करवीरकं (१क : ३ = सम्पादित ग्रन्थ १/३क)
निषेवितं (१क : ३ = सम्पादित ग्रन्थ १/४क)
ब्रह्मसत्परं (६क : ८ = सम्पादित ग्रन्थ ३/२९क)
परं (७क : ६ = सम्पादित ग्रन्थ ४/८क)
कुलक्रमं (७क : ९ = सम्पादित ग्रन्थ ४/१४क)
शुभां (७क : १० = सम्पादित ग्रन्थ ४/१५क)
निराश्रयं (ख८ख : १ = सम्पादित ग्रन्थ ५/४)
वर्जितं (ख८ख : १ = सम्पादित ग्रन्थ ५/५क)
भावनापरिवर्जितं (ख८ख : २ = सम्पादित ग्रन्थ ५/६क)
परमेश्वरं (ख८ख : २ = सम्पादित ग्रन्थ ५/६)
द्वन्द्वविवर्जितं (ख८ख : २ = सम्पादित ग्रन्थ ५/७क)
द्वैताद्वैतोभयोज्झितं (ख८ख : ३ = सम्पादित ग्रन्थ ५/८क)
संवित्तिलक्षणं (ख८ख : ३ = सम्पादित ग्रन्थ ५/८)
सर्वमण्डलं (ग८क : ४ = सम्पादित ग्रन्थ ५/२९)
जलौकसां (ग८क : ५ = सम्पादित ग्रन्थ ५/३०)
बीजमनुत्तमं (९क : १ = सम्पादित ग्रन्थ ५/७५क)
केवलं (९क : १ = सम्पादित ग्रन्थ ५/७५)
पञ्चफट्कारवर्जितं (९क : २ = सम्पादित ग्रन्थ ५/७७क)
कालिक्रमाकुलं (१२क : १० = सम्पादित ग्रन्थ ७/५८क)

१. मातृका 'ख' सम्वित्तिविषयं (३३क : २ = सम्पादित ग्रन्थ २/३९क)
२. मातृका 'ग' सम्वित्तिविषयं (३ख : ४ = सम्पादित ग्रन्थ २/३९क)
३. मातृका 'क' नपुम्सकाद्यौ (१०क : २ = सम्पादित ग्रन्थ २/९४)
४. मातृका 'ख' तदन्तम्वामतो (३८ख : १ = सम्पादित ग्रन्थ २/९४)
५. मातृका 'क' नपुम्सकान्तौ (१०क : ३ = सम्पादित ग्रन्थ २/९५)
६. मातृका 'ख' नपुन्सकान्तौ (३८ख : २ = सम्पादित ग्रन्थ २/९५)
७. मातृका 'क' माम्सानि (१०क : ५ = सम्पादित ग्रन्थ २/९८)
८. मातृका 'ख' सारम्विचिन्तयेत् (४२क : ३ = सम्पादित ग्रन्थ ३/३०क)
९. मातृका 'क' माम्सानि ( १३क : ४ = सम्पादित ग्रन्थ ३/४६क)
१०. मातृका 'क' सम्वित्तिलक्षणं (१९क : २ = सम्पादित ग्रन्थ ५/८)
११. मातृका 'क' काल्यंशम्तु (१९क : ४ = सम्पादित ग्रन्थ ५/१२क)

**मातृकाहरूको आपसी सम्बन्ध**

प्रस्तुत ग्रन्थको सम्पादनका क्रममा उपयोग गरिएका तीनवटा मातृकाहरूमध्ये मातृका 'क' गौडलिपिमा लेखिएको सबैभन्दा पुरानो मातृका हो। उक्त मातृका लक्ष्मणसेन संवत् १२२ (वि.सं. १२८७ –१२९९)का बीचमा सारिएको हो भन्ने मानिएको छ Goodal & padoux(Ed.), 2007, P. 436) . यद्यपि मातृका 'ख' कहिले सारियो त्यसको उल्लेख मातृकामा गरिएको छैन तर उक्त मातृका नेवारलिपिमा लेखिएकाले मातृका 'क' भन्दा केही अर्वाचीन देखापर्दछ। मातृका 'ग' देवनागरीलिपिमा लेखिएकाले उक्त मातृका सबैभन्दा अर्वाचीन ठहर्दछ।

यी तीनवटा मातृकाहरूको आपसी सम्बन्ध छ वा छैन, कुनकुन मातृकाबीच सम्बन्ध छ त्यो विषय निर्क्योल गर्नका लागि मैले यहाँ तीनवटा प्रक्रिया अपनाएको छु।

पहिलो प्रक्रियाअनुसार तीनवटै मातृकामा उपलब्ध पाठहरूमध्ये केहीलाई उदाहरणका लागि तल प्रस्तुत गरिएको छ :

| **मातृका क** | **मातृका ख** | **मातृका ग** | **सम्पादित ग्रन्थ** |
|---|---|---|---|
| परमात्मना (१क : ३) | परमात्मने (२४क : ४) | परमात्मने (१क : ३) | १।३घ |
| बुद्धिकौशल्यभाविता (पत्रसङ्ख्या उल्लेख गरिएको छैन तर हुनुपर्ने २ख : ४) | बुद्धिकौशल्यभावता (२७क : १) | बुद्धिकौशल्यभावता (१ख :८) | १।३०क |
| ३.ज्योतिर्भानोस्तु (६क : १) | ज्योतिभानोस्तु (३२क : १) | ज्योतिभानोस्तु (३क : ८) | २।२७घ |
| पानगोष्ठ्यां (९क : ५) | पानगोष्ठ्या (३७क : ५) | पानगोष्ठ्या (४ख : १०) | २।८३ख |
| निष्क्रियानन्दनाथस्तु (११ख : १) | निष्क्रियानन्दनाथश्च (४०ख : ४) | निष्क्रियानन्दनाथश्च (५ख : १०) | ञ |
| ब्रह्मान्तं(१२क : ४) | ब्रह्माण्डं(४२क : २) | ब्रह्माण्डं(६क : ८) | ३।२९क |
| वशीकरोति (१२ख : ४) | वशीकारोति (४२ख : ५) | वशीकारोति (६ख : १) | ३।३७क |
| पूजकेन च (१३क : ४) | पूजकेन चेत् (४३खक : ४) | पूजकेन चेत् (६ख : ७) | ३।४६ख |
| कन्दलस्थान्तु (१३क : ५) | कन्दलस्था तु (४४क : १) | कन्दलस्था तु (६ख : ९) | ३।४९ख |
| विग्रहं मन्येद् (१३ख : १) | विग्रहं मन्यद् (४४क : २) | विग्रहं मन्यद् (६ख : १०) | ३।५०क |
| ध्यायेत परमेशानीं (१३ख : २) | ध्यायेत्परमेशानीं (४४क : ४) | ध्यायेत्परमेशानीं (६ख : १०) | ३।५१ग |
| श्रृणुष्वि मे (साविक १५ख : ३ तर हुनुपर्ने १४ख : ३) | श्रृणुष्व मे (४९क : २) | श्रृणुष्व मे (७क : ११) | ४।१६ख |
| योगेश्वरि(१५क : ३) | योगेश्वरे (४७क : १) | योगेश्वरे(७ख : ६) | ४।२६ग |
| संयुता(१५क : ४) | संयुतां(४७क : २) | संयुता (७ख : ७) | ४।२७ग |

उदाहरणका रूपमा माथि उल्लेख गरिएका शब्दहरूलाई हेर्दा मातृका 'क'सँग मातृका 'ख' र 'ग'को कुनै सम्बन्ध नरहेको र मातृका 'ख'बाट मातृका 'ग' सारिएको हो भन्ने कुरा स्पष्ट बुझिन्छ। मातृका 'ख'मा अनुपलब्ध पत्रहरू उक्त मातृकाबाट मातृका 'ग'मा सार्नुभन्दा पहिले नै हराएको देखिन्छ। मातृका 'ग'को पत्रसङ्ख्या क८कमा इतः परं मूलपुस्तके ८ पत्र त्रुटितः= लेखी त्यसलाई बीचमा सीधा तेर्सो धर्कोले काटिएको छ ( मातृका 'क' : पत्रसङ्ख्या क८क)

। मातृका 'ख'को पत्रसङ्ख्या ४९ को तल्लो पानादेखि पत्रसङ्ख्या ५७ को माथिल्लो पानासम्म ८ पत्र अनुपलब्ध रहेको तथ्यले मातृका 'ख'बाटै मातृका 'ग' सारिएको हो भन्ने कुरा स्पष्ट हुन्छ। मातृका 'ग'मा छुटेको उक्त पाठ **कालिकाकुलक्रमार्चन** शीर्षकको अर्को मातृकाबाट सारिएको हुन सक्ने सम्भावना रहेको छ।

अब मातृका 'क'सँग मातृका 'ख' र 'ग'को कुनै सम्बन्ध नरहेको कुरा अझ स्पष्ट पार्नका लागि मातृका 'ख' मा अनुपलब्ध पाठमध्येबाट केही शब्दलाई उदाहरणका लागि तल प्रस्तुत गरिन्छ।

| **मातृका क** | **मातृका ख** | **मातृका ग** | **सम्पादित ग्रन्थ** |
|---|---|---|---|
| महा (साविक १५ख : ४ तर हुनुपर्ने १६ख : ४) | अनुपलब्ध | तथा (क८क : ११) | ४।५२घ |
| महा (साविक १५ख : ४ तर हुनुपर्ने १६ख : ४ | अनुपलब्ध | तथा (क८ख : १) | ४।५४घ |
| भक्षभक्षणी (साविक १५ख : ५ तर हुनुपर्ने १६ख : ५) | अनुपलब्ध | अभक्षभक्षिणी (क८ख : १) | ४।५५क |
| तत्रान्ते (साविक १५ख : ५ तर हुनुपर्ने १६ख : ५) | अनुपलब्ध | चान्ते (क८ख : १) | ४।५५क |
| चण्डकर्म(१७क : १) | अनुपलब्ध | चण्डेकर्म (क८ख : २) | ४।५६घ |
| संयुतं(१७क : २) | अनुपलब्ध | संयुता (क८ख : ३) | ४।५७घ |
| पदं(१७क : २) | अनुपलब्ध | पलं (क८ख : ४) | ४।५९क |

| | | | |
|---|---|---|---|
| एष त्रिधाक्षरः (१७क : ४) | अनुपलब्ध | राष त्रिधाक्षर (क८ख : ६) | ४।६३ |
| अथान्यामुद्धरिष्यामि (१७क : ५) | अनुपलब्ध | अथाभ्यामुद्धरिष्यामि (क८ख : ६) | ४।६३क |
| प्रोद्धरेदादौ(१७क : ५) | अनुपलब्ध | तूद्धरेदादौ (क८ख : ७) | ४।६३ग |
| वामकर्णमथोद्धरेत् (१७ख : १) | अनुपलब्ध | नामकर्णमथोद्धरेत् (क८ख : ८) | ४।६६ख |
| मन्त्रान्तं (१७ख : २) | अनुपलब्ध | मन्त्रार्णं (क८ख : ९) | ४।६७ख |
| एषा विद्या (१७ख : ३) | अनुपलब्ध | राधाविद्या (क८ख : १०) | ४।६९क |
| धर्मः(१८क : ३) | अनुपलब्ध | धर्म्यः (ख८क : ४) | ४।७७क |
| निःकलुषं(१८ख : ५) | अनुपलब्ध | निकूलं च(ख८ख : १) | ५।४ग |
| हानादानपदैर्मुक्तं (१९क : १) | अनुपलब्ध | दानादानपदैर्युक्तं (ख८ख : २) | ५।६ग |
| शब्दात्परतरं (१९क : २) | अनुपलब्ध | श्रद्धात्परतरं (ख८ख : ३) | ५।९ख |
| कमलनोद्भूताः (१९क : ४) | अनुपलब्ध | कवलनोद्भूता (ख८ख : ५) | ५।१२क |
| शान्तिमर्च्छति (१९क : ५) | अनुपलब्ध | शान्तिमृच्छति (ख८ख : ६) | ५।१३घ |

माथिको उदाहरणबाट पनि मातृका ‘क’सँग मातृका ‘ग’को कुनै सम्बन्ध नरहेको र मातृका ‘ख’मा अनुपलब्ध पाठ अर्को कुनै मातृकाबाट सारिएको हुन सक्ने सम्भावना देखिन्छ।

**कालिकाकुलपञ्चशतक ग्रन्थको स्वरूप**

प्रस्तुत कालिकाकुलपञ्चशतक नामक ग्रन्थ जम्मा सात पटलमा विभक्त छ। प्रथम पटलमा पचपन्न श्लोकहरू रहेका छन् जसमध्ये उनन्तीसौँ श्लोक अर्धश्लोक रहेको छ। द्वितीय पटलमा एक सय दुई श्लोकहरू रहेका छन्। तृतीय पटलमा त्रिपन्न श्लोकहरू रहेका छन्। चतुर्थ पटलमा मातृका ‘क’को पुष्पिकावाक्यमा श्लोकसङ्ख्या उल्लेख गर्ने क्रममा बयान्नब्बे श्लोक उल्लेख गरिए तापनि उपलब्ध श्लोकसङ्ख्या चौरासी रहेको छ जसमध्ये चौरासीऔँ श्लोक अर्धश्लोक रहेको छ॥ कतै

पाठ टुटेको वा पत्र हराएको सङ्केत भेटिँदैन त्यसैले लिपिकरको गल्तीले त्यस्तो भएको हुन सक्छ भन्ने मेरो अनुमान छ। मातृका 'ख'मा चतुर्थ पटलको श्लोकसङ्ख्या ५१ग देखि पञ्चम पटलको श्लोकसङ्ख्या ५० सम्मको पाठ उपलब्ध नभएकाले चतुर्थ पटलको पुष्पिकावाक्यमा कति श्लोकसङ्ख्या उल्लेख गरिएको थियो भन्न सकिने अवस्था छैन। मातृका 'ग'मा चतुर्थ पटलको पुष्पिकावाक्यमा श्लोकसङ्ख्या उल्लेख गरिएको छैन। पञ्चम पटलमा मातृका 'क'को पुष्पिकावाक्यमा एकसय एकतीस श्लोकसङ्ख्या लेखिएको छ भने मातृका 'ख' र 'ग'को पुष्पिकावाक्यमा एकसय तीन श्लोकसङ्ख्या गरिएको छ तर उपलब्ध श्लोकसङ्ख्या सतासी मात्र रहेको छ जसमध्ये सतासीऔँ श्लोक अर्धश्लोक रहेको छ। कतै पत्र हराएको वा पाठ टुटेको सङ्केत भेटिँदैन त्यसैले यहाँ पनि लिपिकरकै दोष हो कि भन्नुपर्ने स्थिति रहेको छ। षष्ठ पटलमा तीनवटै मातृकामा चालीस श्लोक उल्लेख गरिएको छ तर एकचालीस श्लोक रहेको छ जसमध्ये तेस्रो श्लोक अर्धश्लोक रहेको छ। सप्तम पटलमा तीनवटै मातृकामा सन्ताउन्न श्लोक उल्लेख गरिएको छ तर उपलब्ध पाठ अनुसार उक्त पटलमा अन्ठाउन्न श्लोक रहेको छ जसमध्ये आठौँ श्लोक अर्धश्लोक रहेको छ। पनि त्यति नै रहेको छ। यसप्रकार प्रस्तुत ग्रन्थमा जम्मा श्लोकसङ्ख्या चारसय असी देखिन्छ।

**कालिकाकुलपञ्चशतक ग्रन्थको रचनाशैली**

प्रस्तुत ग्रन्थ भैरव र भैरवीको संवादका रूपमा अवतीर्ण भएको छ। यस ग्रन्थमा भैरवीले गुरुभावमा रहेर शिष्यभावमा रहेका भैरवलाई कालीपरम्परामा निहित कौलज्ञानको उपदेश गरेकी छिन्। ग्रन्थको रचनाशैलीलाई हेर्दा यो ग्रन्थ आगमकोटीको ग्रन्थजस्तो देखिए तापनि प्रस्तुत ग्रन्थको पुष्पिकावाक्यले यस ग्रन्थका रचनाकार श्रीनाथ भएको साक्ष्य प्रस्तुत गर्दछ। यदाकदा ग्रन्थकारहरूले आफूले प्रतिपादन गर्न खोजेको विषयलाई ज्यादै महत्त्व प्रदान गर्दै त्यसलाई अनादि सिद्ध गर्नका लागि यस्तो शैली अवलम्बन गर्ने गरेका प्रमाणहरू पाइन्छन्। उदाहरणका लागि **महाकालसंहिता** नामक ग्रन्थलाई लिन सकिन्छ जहाँ ग्रन्थकार आदिनाथले महाकाल र देवीको संवादका रूपमा उक्त ग्रन्थको रचना गरेका छन्।

**ग्रन्थकार श्रीनाथ र उनको समय**

प्रस्तुत ग्रन्थका रचनाकार श्रीनाथ हुन् भन्ने कुरा यस ग्रन्थको पुष्पिकावाक्यमा उद्धृत **इति श्रीमदुत्तरपीठोद्भूते श्रीश्रीनाथावतारिते श्रीकालिकाकुले पञ्चशते००** भन्ने पदावलीबाट स्पष्ट हुन्छ। नेपालमा मात्र उपलब्ध कालीकुल परम्पराको अर्को ग्रन्थ कालिकाकुलक्रमसद्भाव पनि आचार्य श्रीनाथकै रचना भएको उल्लेख एलेक्सिस स्यान्डर्सनले गरेका छन् ( Goodal & Padoux(Ed.), 2007, P. 264)। यसका अतिरिक्त कुलार्णवतन्त्र, श्रीतन्त्रालोक, शिवसूत्रविमर्शिनी र शितिकण्ठले रचना गरेको महानयप्रकाशमा पनि श्रीनाथको उल्लेख पाइन्छ। कुलार्णवतन्त्रको बाह्रौं उल्लासमा पादुकाभक्तिलक्षणका प्रसङ्गमा भनिएको छ –

**श्रीनाथचरणाम्भोजं यस्यां दिशि विराजते।**
**तस्यां दिशि नमस्कुर्याद् भक्त्या प्रतिदिनं प्रिये** ॥ (२।११)

अर्थात् श्रीनाथको चरणकमल जुन दिशामा विराजमान रहन्छ त्यस दिशामा प्रतिदिन भक्तिपूर्वक नमस्कार गर्नुपर्दछ। तन्त्रालोकमा पर्याप्त धनसम्पत्ति नभएका तथा देश, काल आदि दोषका कारण यथोक्त विधिअनुसार कुलपरम्परामा दीक्षित हुन असमर्थ तर साँच्चिकै शरणागत, भोगेच्छु एवं मुमुक्षु साधकका लागि सन्तत्यागममा वर्णित तथा पातालका अधिपति हाटकेश्वरद्वारा निर्दिष्ट दीक्षाविधिको वर्णनका क्रममा श्रीनाथको पूजाको प्रसङ्ग उल्लेख गरिएको छ। जसअनुसार श्रीनाथ, आर्य र भगवान् यी तीनलाई कन्दचक्र अर्थात् मूलाधारचक्रमा प्रतिष्ठा एवं पूजा गर्नुपर्दछ (श्रीतन्त्रालोक : ३०।१००–१०२)। यसका साथै तन्त्रालोकमा भेदाभेदवादी शैवागमका प्रवर्तक श्रीनाथको उल्लेख पाइन्छ। वास्तवमा तिनै श्रीनाथ नै द्वयात्मक अद्वयवादी काश्मीरी कालीकुलधाराका प्रवर्तक हुन्। शिवसूत्रविमर्शिनीमा आचार्य क्षेमराजले श्रीनाथको कथनका रूपमा निम्नलिखित अर्धश्लोक उद्धृत गरेका छन् -

**श्रयेत् स्वातन्त्र्यशक्तिं स्वां सा श्रीकाली परा कला**। (३।१३, विमर्शिनीव्याख्या, पृ.१५९)। अर्थात् आफ्नै स्वातन्त्र्यशक्तिस्वरूप परा कला श्रीकालीको आश्रय ग्रहण गर्नू। शितिकण्ठले रचना गरेको महानयप्रकाशमा श्रीनाथको उल्लेख यसरी गरिएको छ – **आदिपीठादिष्टः श्रीनाथस्तु** (सम्पा.) शास्त्री, १९३७ ई. : ७३)। प्रस्तुत कालिकाकुलपञ्चशतक ग्रन्थको पुष्पिकावाक्यमा उल्लिखित **इति श्रीमदुत्तरपीठोद्भूते श्रीश्रीनाथावतारिते श्रीकालिकाकुले पञ्चशते००** पदावलीबाट आचार्य श्रीनाथ श्रीकालिकाकुल नामक ग्रन्थका प्रणेता वा कालिकाकुल वा कालीकुल परम्पराका अवतारक भएको जानकारी प्राप्त हुन्छ। आचार्य क्षेमराजले शिवसूत्रविमर्शिनीमा

श्रीनाथको कथनका रूपमा उद्धृत गरेको अर्धश्लोक कालीपरक रचना देखिएकाले यी श्रीनाथ कालीकुल परम्पराका प्रवर्तक श्रीनाथ नै हुन सक्ने सम्भावना देखिन्छ। अतः माथि उल्लिखित श्रीनाथ एकै व्यक्ति हुन सक्ने मैले अनुमान गरेको छु।

प्रस्तुत कालिकाकुलपञ्चशतक ग्रन्थमा शिवानन्द र उनकी पत्नी समयाको उल्लेख पाइन्छ –

**शिवानन्दस्तथा ज्ञेया समया तच्चतुर्थकम्** । (३।१७)

क्रमदर्शनका प्रथम आचार्यका रूपमा सर्वमान्य शिवानन्दको समय ई.सं. ८०० देखि ८५० सम्म अर्थात् वि.सं. ८५७ देखि ९०७ सम्म निर्धारित गरिएको छ (Rastogi, 1979, P. 104). अतः श्रीनाथ शिवानन्दभन्दा पछिका देखा पर्दछन्। आचार्य जयरथले तन्त्रालोकको विवेक व्याख्यामा उद्धृत देवीपञ्चशतिक वा पञ्चशतिक नामक ग्रन्थ प्रस्तुत कालिकाकुलपञ्चशतक ग्रन्थकै नामान्तर हो भन्ने ठम्याइ यस पङ्क्तिकारको रहेको छ। यस विषयमा तल छुट्टै शीर्षकमा चर्चा गरिएको छ। देवीपञ्चशतिक वा कालिकाकुलपञ्चशतकको अस्तित्व शिवदृष्टिका रचयिता एवं त्रिकपरम्परा र कालिकाकुल परम्परामा अभिनवगुप्तका परमेष्ठी गुरु सोमानन्दको समयमा थियो भन्ने जानकारी तन्त्रालोकको विवेकव्याख्याबाट प्राप्त हुन्छ– **श्रीदेवीपञ्चशतिकेऽपि अस्य श्रीसोमानन्दभट्टपादेभ्यः प्रभृति त्रिकदर्शनवदेव गुरवः** (४।७३क)। शिवानन्द र सोमानन्दका बीच तीन पुस्ताको अर्थात् ७५ वर्षको अन्तराल देखापर्दछ (Rastogi, 1979, P. 128). अतः शिवानन्द र सोमानन्दको बीचको कुनै समयमा श्रीनाथको अस्तित्व सिद्ध हुन्छ।

### प्रस्तुत ग्रन्थको मातृका 'क' र 'ख'मा उल्लिखित विमलप्रबोध

प्रस्तुत ग्रन्थको मातृका 'क' र 'ख'मा ग्रन्थको अन्तिम पुष्पिकावाक्यमा विमलप्रबोध नामक व्यक्तिको उल्लेख गरिएको छ– **परमहंसपरिव्राजकषडन्वयाचार्यश्रीविमलप्रबोधपादानामिति** । शैव तथा शाक्त तन्त्रपरम्पराको रहस्य जान्ने शैवाचार्य विमलप्रबोधले नेपालका प्रथम मल्ल राजा अरि मल्लको राज्याभिषेक गराएको जानकारी पाइन्छ (नेपाल, वि.सं. २०६२, पृ. १४९)। अतः विमलप्रबोध सोही समयमा नेपालमा रहेका र कालिकाकुपञ्चशतक नामक ग्रन्थ उनको स्वामित्वमा रहेको देखिन्छ। त्यसका साथै यिनले **कालिकाकुलक्रमार्चन** नामक ग्रन्थ लेखेको देखिन्छ (पूर्ववत्, पृ. १३६)।

**कालिकाकुलपञ्चशतक र कालिकाकुल**

तन्त्रालोकको सत्ताइसौँ, अठ्ठाइसौँ र उनन्तीसौँ आह्निकमा अभिनवगुप्तले **श्रीकालीकुल** नामक ग्रन्थको सङ्केत गरेका छन्। तन्त्रालोकको सत्ताइसौँ आह्निकमा पूजाको आधार कुन वस्तुलाई बनाउने भन्ने सन्दर्भमा अभिनवगुप्तले **श्रीमत्कालीमुख** ग्रन्थमा बताएझैँ खड्ग, छुरी, कैँची, निर्मल ऐनालाई पूजाको आधार बनाउनुपर्छ भनेर लेखेका छन् (४४ श्लोक)। यहाँ प्रयुक्त श्रीमत्कालीमुख शब्दले श्रीकालीकुल नामक ग्रन्थलाई नै सङ्केत गर्न खोजेको देखिन्छ। व्रजवल्लभ द्विवेदीको पनि यही धारणा रहेको छ (द्विवेदी(सं.), ई.सं. १९८३, पृ. २६ )। तन्त्रालोकमा अभिनवगुप्तले श्रीमत्कालीमुख अर्थात् श्रीकालीकुल नामक ग्रन्थलाई आधार मान्दै पूजाका लागि जुन वस्तुहरूलाई आधार मानेका छन् ती वस्तुहरू प्रस्तुत कालिकाकुलपञ्चशतक ग्रन्थमा सोही सन्दर्भमा निर्देश गरिएका वस्तुहरूसँग तुलनीय छन् –

**अथवा छुरिकां स्थाप्य कर्तरीं वा सुदारुणाम्।**
**महामुकुटपृष्ठे तु पूज्या संहारभैरवी** ॥ (४ पटल, ७२ श्लोक)।

नेत्रतन्त्रको उद्योतव्याख्यामा आचार्य क्षेमराजले श्रीकालीकुल नामक ग्रन्थबाट निम्नलिखित श्लोक उद्धृत गरेका छन् -

**तस्य देवाधिदेवस्य परबोधस्वरूपिणः।**
**विमर्शः परमा शक्तिः सर्वज्ञा बोधशालिनी** ॥ (१।३०, उद्योतव्याख्या)

उपर्युक्त श्लोक स्वच्छन्दतन्त्रको उद्योतव्याख्यामा आचार्य क्षेमराजले श्रीकालिकाकुल नामक ग्रन्थबाट भनी उद्धृत गरेका छन् (स्वच्छन्दतन्त्र, ११।४, उद्योतव्याख्या)। त्यसैगरी नेत्रतन्त्र र स्वच्छन्दतन्त्रको उद्योतव्याख्यामा श्रीकालीकुल र श्रीकालिकाकुल नामक ग्रन्थबाट भनी उद्धृत उपर्युक्त श्लोक आचार्य क्षेमराजले नै शिवसूत्रको विमर्शिनीव्याख्यामा कालिकाक्रम नामक ग्रन्थबाट भनी उद्धृत गरेका छन् (शिवसूत्र, ३।४४, विमर्शिनीव्याख्या) त्यसैले कालीकुल, कालिकाकुल र कालिकाक्रम एउटै ग्रन्थका नामान्तर मात्र हुन् भन्ने स्पष्ट हुन्छ।

प्रस्तुत ग्रन्थको पुष्पिकावाक्यमा पनि **००श्रीकालिकाकुले पञ्चशते००** भन्ने पदावलीको प्रयोग देखिएकाले प्रस्तुत ग्रन्थ उपर्युक्त कालिकाकुल ग्रन्थकै अभिन्न ग्रन्थ हुनसक्ने सम्भावना देखिएको छ। प्रस्तुत ग्रन्थको अन्तिम पुष्पिकावाक्यमा आएको **समाप्तमिदं श्रीकालिकाक्रमम्** भन्ने पदावलीले यो सम्भावनालाई अझ बलियो बनाएको छ। प्रस्तुत ग्रन्थको सप्तम पटलको अन्तिम श्लोकमा जसको हातमा यो कालिकाक्रम–कुलशास्त्र रहन्छ त्यो भैरवझैँ सदा पूजित हुन्छ भन्ने भावको श्लोक रहेको

छ (७ पटल, ५७ श्लोक)। उक्त श्लोकले पनि प्रस्तुत ग्रन्थ कालीकुल, कालिकाकुल वा कालिकाक्रम नामले प्रसिद्ध ग्रन्थकै अभिन्न ग्रन्थ हुन सक्ने सम्भावना देखिन्छ।

यति हुँदाहुँदै पनि आचार्य क्षेमराजले नेत्रतन्त्र र स्वच्छन्दतन्त्रको उद्योतव्याख्यामा कालीकुल र कालिकाकुल नामक ग्रन्थबाट उद्धृत गरेको श्लोक एवं शिवसूत्रको विमर्शिनीव्याख्यामा कालिकाक्रम नामक ग्रन्थबाट उद्धृत गरेका श्लोकहरू प्रस्तुत ग्रन्थमा नभेटिनुले उपर्युक्त तर्कको विपक्षमा एउटा गम्भीर संशय पनि उत्पन्न गरिदिएको छ।

**कालिकाकुलपञ्चशतक र देवीपञ्चशतिक**

तन्त्रालोकको विवेकव्याख्यामा आचार्य जयरथले **देवीपञ्चशतिक** वा **पञ्चशतिक** नामक ग्रन्थबाट भनी उद्धृत गरेका केही श्लोकहरू प्रस्तुत कालिकाकुलपञ्चशतक ग्रन्थका श्लोकहरूसँग केही जस्ताको तस्तै र केही सामान्य पाठान्तरका साथ मिलेका देखिन्छन्। तन्त्रालोकको चतुर्थ आह्निकको विवेकव्याख्यामा आचार्य जयरथले त्रयोदश कालीको सन्दर्भमा देवीपञ्चशतिक वा पञ्चशतिकबाट भनी ४४ पङ्क्ति अर्थात् २२ श्लोक उद्धृत गरेका छन् (४।१४८–१७३क)। ती सम्पूर्ण श्लोकहरू प्रस्तुत कालिकाकुलपञ्चशतक ग्रन्थको पञ्चम पटलको तेईसौँ श्लोकदेखि अठचालीसौँ श्लोकसम्मका श्लोकहरूसँग प्रायः जस्ताको तस्तै मिल्दछन्। त्यसैगरी आचार्य जयरथले तन्त्रालोकको उनन्तीसौँ पटलको विवेकव्याख्यामा देवीपञ्चशतिकबाट भनी आठ पङ्क्ति अर्थात् ४ श्लोक उद्धृत गरेका छन् (२९।४२ र २९।६४क)। ती श्लोकहरू प्रस्तुत कालिकाकुलपञ्चशतकको दोस्रो पटलको श्लोकसङ्ख्या पन्ध्रदेखि सत्रसम्मका श्लोकहरूसँग मिल्दछन्। त्यसैगरी आचार्य जयरथले तन्त्रालोकको विवेकव्याख्यामा ग्रन्थको नामोल्लेख विना नौवटा पङ्क्ति अर्थात् साढे चार श्लोक उद्धृत गरेका छन् (३।६७, विवेकव्याख्या, पृ.)। ती श्लोकहरू प्रस्तुत कालिकाकुलपञ्चशतक ग्रन्थको चतुर्थ पटलका श्लोकसंख्या तीनदेखि सातसम्मका श्लोकहरूसँग मिल्दछन्। त्यसैगरी उनन्तीसौँ आह्निकको विवेकव्याख्यामा छ पङ्क्ति अर्थात् तीन श्लोक नामोल्लेख विना उद्धृत गरिएको छ ( २९।१७ र २९।२५–२६, विवेकव्याख्या)। ती श्लोकहरू पनि प्रस्तुत कालिकाकुलपञ्चशतक ग्रन्थको पञ्चम पटलका श्लोकसङ्ख्या पचासदेखि एकाउन्न तथा श्लोकसङ्ख्या एकासीदेखि बयासीसम्म मिल्दछन्। ग्रन्थको नामोल्लेख विना उद्धृत ती श्लोकहरूको विषयमा जयरथ अनभिज्ञ रहेका देखिन्छन्।

यसप्रकार आचार्य जयरथले तन्त्रालोकको विवेकव्याख्यामा देवीपञ्चशतिक वा पञ्चशतिक नामबाट उद्धृत गरेका छब्बीस श्लोकहरू र नामोल्लेख विना नै उद्धृत गरेका साढे सात श्लोकहरू गरी जम्मा साढे तेत्तीस श्लोकहरू प्रस्तुत कालिकाकुलपञ्चशतक ग्रन्थसँग मिल्दछन् । यति धेरै श्लोकहरू मिल्नुलाई सामान्य संयोग मात्र भन्न सकिँदैन ।

कालिकाकुलपञ्चशतकलाई नै देवीपञ्चशतिक वा पञ्चशतिक भन्ने अर्को नामले व्यवहार गरिन्थ्यो भन्ने देखिन्छ । आचार्य क्षेमराजले **शिवसूत्र** (३।३०)को विमर्शिनीव्याख्या (पृ.१९६)मा तथा **नेत्रतन्त्र** (२१।५३)को उद्योत व्याख्या (पृ.२२१)मा **कालिकाक्रम** नामक ग्रन्थबाट भनी उद्धृत गरेको निम्नलिखित श्लोकलाई महेश्वरानन्दले **महार्थमञ्जरी** नामक ग्रन्थमा **देविकाक्रम** नामक ग्रन्थबाट भनी उद्धृत गरेका छन्-

**नहि ज्ञानादृते भावाः केनचिद्विषयीकृताः ।**

**ज्ञानं तदात्मतां यातमेतस्मादवसीयते ॥** (सम्पा.) द्विवेदी, १९९२ ई.सं., पृ. १०) । उपर्युक्त श्लोकलाई आचार्य जयरथले पनि कालिकाक्रम नामक ग्रन्थबाट भनी तन्त्रालोकको विवेकव्याख्यामा उद्धृत गरेका छन् (५।८०, विवेकव्याख्या, पृ. २७९) । कालीनयलाई देवीनय भनिएझैँ कालिकाक्रमलाई देविकाक्रम र कालिकाकुलपञ्चशतकलाई देवीपञ्चशतिक वा पञ्चशतिक भन्ने गरेको देखिन्छ । अतः आचार्य जयरथले तन्त्रालोकको विवेकव्याख्यामा देवीपञ्चशतिक वा पञ्चशतिक नामक जुन ग्रन्थको उल्लेख गरेका छन् त्यो कालिकाकुलपञ्चशतककै नामान्तर हो भन्ने निष्कर्षमा पुग्न सकिन्छ ।

**कुलमतको उद्भव**

सम्पूर्ण शैव र शाक्त विचारधाराको प्रारम्भ पाशुपतमत र कापालिक परम्पराबाट भएको मानिन्छ । पाशुपतमत शुद्ध संन्यासीहरूको परम्परा हो भने कापालिक परम्परा उग्र चर्याका माध्यमले विभिन्न किसिमका सिद्धिहरू प्राप्त गर्नका लागि प्रयत्नशील रहने शैव गृहस्थहरूको परम्परा हो । अतः समग्र शैवशास्त्रको विकास श्रीकण्ठद्वारा प्रवर्तित कापालिक परम्परा एवं लकुलेश्वरद्वारा प्रवर्तित पाशुपतमतबाट भएको हो–

**द्वावाप्तौ तत्र च श्रीमच्छ्रीकण्ठलकुलेश्वरौ ।**

**द्विप्रवाहमिदं शास्त्रं सम्यङ्निःश्रेयसप्रदम् ॥** (तन्त्रालोक, ३७।१४ख-१५क) । शाक्तागम वा शाक्त तान्त्रिक विचारधारा पनि शैवशास्त्रमै अन्तर्भूत हुन्छ । श्रीकण्ठद्वारा प्रवर्तित धाराबाट नै त्रिक परम्पराको विकास भएको छ जसमा अद्वैतप्रधान त्र्यम्बक शाखा, द्वैतप्रधान आमर्दक शाखा र

द्वैताद्वैतप्रधान श्रीनाथ शाखा एवं अद्वैतप्रधान कौल शाखायुक्त अर्धत्र्यम्बक शाखा गरी साढे तीन शाखा रहेका छन् । अद्वैत, द्वैत र द्वैताद्वैत शैवशास्त्रको प्रारम्भ क्रमशः त्र्यम्बक, आमर्दक र श्रीनाथद्वारा प्रतिपादित मठिकाबाट भएको छ भने कुलमतको प्रारम्भ त्र्यम्बककी पुत्रीद्वारा प्रतिपादित मठिकाबाट भएको छ त्यसैले उक्त मठिकालाई अर्धमठिका वा अर्धत्र्यम्बक पनि भनिन्छ ।

तान्त्रिक साधनापद्धतिमा कुलप्रक्रियालाई अन्य तन्त्रप्रक्रियाको तुलनामा उच्चतर साधनाप्रक्रियाको रूपमा हेरिएको छ। अभिनवगुप्तले कुलप्रक्रियालाई शाम्भव उपायका रूपमा हेर्नुको रहस्य पनि त्यही नै हो। अन्य तन्त्रप्रक्रियाहरू साधकलाई निर्विकल्पावस्थामा पुऱ्याउने सोपान मानिएका छन् भने कुलप्रक्रियाचाहिँ साधकलाई निर्विकल्पावस्थामा आरूढ गराई तज्जन्य आनन्दको भोग गराउने विशिष्ट साधनापद्धति मानिएको छ। अतः कुलपद्धतिको विकास अत्यन्त व्यापक स्तरमा भएको देखिन्छ। हरेक अद्वैतप्रधान तान्त्रिक मतमा विशिष्ट कुलपद्धतिको विकास भएको छ त्यसैले शैवागम वा शाक्ततन्त्रहरूमा कुलविधिको उल्लेख कहीँ न कहीँ अवश्य पाइन्छ ।

कुलमतको विकास शाम्भव एवं शाक्त दुवै दृष्टिले भएको छ। शाम्भव दृष्टिमा अनुत्तररूप सैँतीसौँ तत्त्वलाई परम कौल तत्त्व मानिन्छ भने शाक्त दृष्टिमा कुलेश्वर र कुलेश्वरीको यामलभावलाई नै परम कौल तत्त्व मानिन्छ। शाक्तप्रधान कुलमतका मुख्यतः दुईवटा कुल रहेका छन् - श्रीकुल र कालीकुल। श्रीकुलअन्तर्गत पराशक्तिको सौम्य र शान्त स्वरूपको प्रतिनिधिका रूपमा तदनुकूल साधनापद्धतिद्वारा त्रिपुरसुन्दरीको उपासना गरिन्छ भने कालीकुलअन्तर्गत पराशक्तिको रौद्र स्वरूपको प्रतिनिधिका रूपमा तदनुकूल उग्र एवं घोर साधनापद्धतिद्वारा भगवती काली वा कालसङ्कर्षिणीको उपासना गरिन्छ। सर्वप्रथम यस कुलप्रक्रियाको उपदेश भैरवनाथद्वारा उनकी शक्ति भैरवीलाई प्राप्त भयो। त्यसपछि सो उपदेश भैरवीद्वारा मच्छन्दनाथ वा मत्स्येन्द्रनाथलाई प्राप्त भयो भन्ने जानकारी पाइन्छ ।

**कुलज्ञानको स्वरूप**

परम प्रकाशस्वरूप अनुत्तर तत्त्वको स्वातन्त्र्यशक्तिलाई कौलिकी शक्ति भनिन्छ जो अनुत्तर शिवको स्वभावका रूपमा शिवमा अभिन्नरूपले विद्यमान छ (तन्त्रालोक, ३ आह्निक ६७ श्लोक)। निष्कल तत्त्वातीत परम शिव वा पराशक्ति नै विश्वको मूल केन्द्रमा उत्तीर्णरूपले विद्यमान छ।

विश्वविकासका प्रति उसको उन्मुखता वा स्फुरत्ता नै प्रकाशस्वरूप परम शिवको रश्मिपुञ्जबाट निर्मित निर्मल विमर्शस्वरूप ऐना हो। यसै विमर्शस्वरूप ऐनामा प्रतिबिम्बित परम शिवलाई सर्वप्रथम परिपूर्ण अहंको बोध हुन्छ। त्यो अहं नै अकार आदि वर्णरूप वाचक एवं शिवदेखि पृथ्वीसम्मको पदार्थरूप वाच्यले युक्त विश्वविकासको प्रथम सोपान हो। छत्तीस तत्त्वले युक्त समस्त भुवनमण्डललाई मयूररसन्यायले आफूभित्र समेटेर रहेको अहं तत्त्वलाई शिवशक्तिस्वरूप दिव्यदम्पतिको सामरस्यरूप मानिन्छ। अहंले प्रत्याहारन्यायले पचास वर्णहरूलाई आफूभित्र समेटेको छ। सङ्केतपद्धतिका अनुसार अहंको अकार अनुत्तर प्रकाशस्वरूप शिवको सङ्केत हो भने हकार विमर्शस्वरूप शक्तिको सङ्केत हो –

**अकारः सर्ववर्णाग्र्यः प्रकाशः परमः शिवः ।**

**हकारोऽन्त्यः कलारूपो विमर्शाख्यः प्रकीर्तितः ॥** (द्विवेदी(सम्पा.), ई.सं. १९८८ , पृ. २४)। तिनै प्रकाशस्वरूप अनुत्तर परम शिवको विमर्शस्वरूप कौलिकी वा सूक्ष्म कुण्डलिनी शक्ति विश्ववैचित्र्यरूप कुलको विस्तार गर्ने इच्छाले ज्ञानशक्ति, क्रियाशक्ति र इच्छाशक्तिका रूपमा अभिव्यक्त हुन्छ। शिवका साथ कौलिकी शक्तिको जुन यामलरूप हो त्यसैलाई आनन्द शक्ति भनिन्छ र त्यो नै विश्वसृष्टिको मूल हो (तन्त्रालोक, ३।६८)। अतः कुलदर्शनमा शिवशक्तिको यामलभावमा विशेष जोड दिएको पाइन्छ। त्यसै हुनाले शिवशक्तिको यामलभावरूप आनन्दको अभिव्यक्तिलाई साधनाको प्रमुख लक्ष्य मान्दै तदनुरूप साधनापद्धतिको निरूपण गरेको देखिन्छ।

### कुलसाधनाको अधिकारी

कुलमतलाई अभिनवगुप्तले शाम्भवोपायका सन्दर्भमा चर्चा गरेका छन्। अतः सम्पूर्ण भेदप्रथालाई परिहार गर्न सक्षम निर्विकल्प दशामा आरूढ साधकहरू नै कुलसाधनाका लागि वास्तव अधिकारी हुन्। जसले कुल तत्त्वको व्यापकतालाई मनन गरेको छ, जसमा सर्वं सर्वात्मकम् अर्थात् संसारका सबै नामरूपात्मक पदार्थ पूर्ण छन् भन्ने वैश्विक दृष्टिकोणलाई अवलम्बन गरेको छ त्यस्तो निर्विकल्प अवस्थाको साक्षात्कार गर्ने धाराधिरूढ साधक नै कुलसाधनाको अधिकारी हो (तन्त्रालोक, २९।१–२, विवेकव्याख्या)।

कुलमतमा समग्रतावादी दृष्टिको प्रधानता पाइन्छ अर्थात् सम्पूर्ण कुराहरू पूर्ण छन्, पूर्णकै अभिव्यक्तिस्वरूप पूर्ण हुन् भन्ने दृष्टिकोण पाइन्छ। अतः संसारका सामान्यभन्दा सामान्य ठानिएका र सामान्य लोकले

घृणाको दृष्टिले हेर्ने द्रव्यविशेषमा पनि जसले आनन्दशक्तिको अनुसन्धान गर्न सक्छ, जसमा शङ्का र घृणाको भाव पटक्कै छैन त्यस्तो निर्विकल्प भावमा अधिरूढ उदात्त व्यक्ति नै कुलसाधनाको वास्तव अधिकारी मानिन्छ ।

**कुलसाधनाका तत्त्वहरू**

कुलसाधनामा अर्घपात्र, यागधाम र दीपलाई कुलयागका लागि प्रमुख द्रव्य मानिएको छ (तन्त्रालोक, २९।१४) । आद्ययाग वा दूतीयागका क्रममा दूतीसङ्गमबाट प्राप्त कुण्डगोलक नामक शुक्रशोणितरूप द्रव्यविशेषलाई अर्घ भनिन्छ । यहाँ एउटा कुरा के विचारणीय छ भने ऋग्वेदको भाष्यमा सायणाचार्यले सोमलाई **इन्द्रियो रसः** भनिएकोमा **इन्द्रस्य स्वभूतो रसो वीर्यं** अर्थात् इन्द्रको वीर्यको अर्थमा लिएका छन् (ऋग्वेद, ७।३।१४।१, सायणभाष्य) । यसबाट सोमलाई वीर्यरूप मान्ने परम्परा वेदमा थियो भन्ने अनुमान गर्न सकिन्छ । सोही वैदिक परम्पराको सादृश्यमा तान्त्रिक परम्परामा पनि मद्यलाई वीर्यरूप मान्ने परम्परा प्रचलित भएको मैले अनुमान गरेको छु । त्यसैले तान्त्रिक परम्परामा मद्यलाई बुझाउने शब्दले वीर्यलाई पनि बुझाउने गरेको पाइन्छ । उदाहरणका लागि महोदक शब्दलाई लिन सकिन्छ जसको अर्थ तान्त्रिक परम्परामा मद्य र वीर्य दुवै हुन्छ ।

जुन द्रव्यलाई लोकमा घृणास्पद मानिन्छ, जसलाई शास्त्रले बहिष्कार गरेको छ त्यस्तो द्रव्यलाई कुलसाधनामा स्वीकार्य मानिन्छ (तन्त्रालोक, २९।१० ) । वास्तवमा सम्पूर्ण चराचर जगत् शिवमय छ त्यसैले कुनै पनि वस्तुलाई अशुद्ध मान्न सकिँदैन, जुन वस्तु शिवरहित छ वा संविच्छून्य छ त्यो नै अशुद्ध हो (तन्त्रालोक, ४।२४२, विवेकव्याख्या) तर कुनै पनि वस्तुमा शिवराहित्य वा संविच्छून्यताको कल्पना गर्न सकिँदैन त्यसैले हरेक वस्तु कुलपूजनमा ग्राह्य मानिन्छ । जुन वस्तु आनन्दप्रद हुन्छ त्यही वस्तुले अर्घपात्र भर्नुपर्छ भन्ने मान्यता कुलसाधनामा रहेको छ (तन्त्रालोक, २९।२२क) । यसै मान्यताका कारण कुलसाधनामा मद्यलाई अर्घद्रव्यका रूपमा स्वीकार गरिएको छ ।

अदिव्य शरीरले गरेको याग फलदायी नहुने भएकाले साधकले आफ्नो शरीरलाई दिव्य बनाउनका लागि आफूमा भैरवस्वरूपको चिन्तन गर्नुपर्छ र मातृसद्भाव आदि मन्त्रहरूसँग आफ्नो तादात्म्य स्थापित गरी आफूलाई शक्तिपुञ्जका रूपमा दृढ चिन्तन गर्नुपर्छ (तन्त्रालोक, २९।६४)। यस किसिमको दृढ चिन्तनद्वारा आफूमा भैरवभावको आवेश भई समग्र

वृत्तिहरूमा शैवमहाभावको आविर्भाव हुन्छ। त्यतिखेर सम्पूर्ण चराचर जगत्लाई भैरवभावमा प्राप्त उक्त साधकले आफ्नै प्रतिबिम्बका रूपमा अनुभव गर्दछ। त्यतिखेर उसले गरेका समग्र क्रियाकलापहरू संविच्छक्तिकै अर्चना वा कुलयाग बन्न पुग्छन्। उसले गरेका हरेक क्रियाकलापमा केवल आनन्दको उच्छलन देखापर्दछ। यसप्रकार समग्र विश्ववैचित्र्यलाई आफ्नै प्रतिबिम्बका रूपमा ग्रहण गर्नका लागि एवं हरेक वस्तुमा शक्तिको अनुसन्धानद्वारा भैरवभावमा आरूढ हुनका लागि कुलसाधकले मन, वचन र कर्मले जुनजुन आचरण गर्दछ त्यो सबै कुलयाग मानिन्छ (तन्त्रालोक, २९।६)। उक्त कुलयाग बाह्य आधारमा, शक्ति वा दूतीमा, यामलभावमा, देहमा, मध्यनाडीमा र बुद्धिमा सम्पादन गर्न सकिन्छ (तन्त्रालोक, २९।७)। कुलयागका यिनै छवटा आधारलाई यागधाम भनिन्छ।

**बहिर्यागधाम**

बाह्र अङ्गुल, चौबीस अङ्गुल वा छत्तीस अङ्गुलको रातो नयाँ कपडा, खुला आकाशमुनिको जमिन, सिन्दूर पोतिएको घडा, कायपीठरूप नरिवल, मद्यपूरित घडा र सुसज्जित मण्डललाई बहिर्यागधाम भनिन्छ। यीमध्ये कुनै एक धाममा गणेश, वटुक, क्षेत्रपाल, गुरुपङ्क्ति, पीठ, सिद्ध, योगिनीको पूजनपूर्वक यागधामको मध्यमा कुलेश्वर र कुलेश्वरीको पूजन गर्ने क्रमलाई एकवीरक्रम भनिन्छ।

**शक्तिधाम**

कुलसाधनामा आफ्नी दूतीका साथमा रहेर परस्पर भैरवभैरवीभावले गरिने पूजाक्रमलाई यामलक्रम वा दूतीयाग भनिन्छ। यो क्रम अत्यन्त गोप्य र गुरुमुखबाट मात्र यथार्थ रूपमा जान्न सकिने भएकाले शास्त्रमा यसको सङ्केत मात्र गरेको पाइन्छ।

**यामलधाम**

दूतीका साथ यामलभावमा रहेर कुलपूजा सम्पन्न गर्ने क्रममा यामलभावको पराकाष्ठामा आनन्दको पूर्ण उच्छलनका साथ आफूमा भैरव वा भैरवीको आवेशका साथ कुलपूजा सम्पन्न गरिन्छ भने उक्त यामलभावरूप धामलाई यामलधाम र उक्त पूजनक्रमलाई यामलक्रम भनिन्छ।

**देहधाम**

देहमा नै विभिन्न पीठहरूको कल्पना गरी मन्त्रयोगका माध्यमबाट देहलाई नै यागधाम बनाइन्छ भने त्यसलाई देहधाम भनिन्छ। यसअन्तर्गत शरीरमा अवस्थित विभिन्न चक्रहरूमा मन्त्रयोगको अभ्यास र शक्तिको अनुसन्धानरूप क्रिया सम्पन्न गरिन्छ।

**प्राणपथधाम**

प्राणरूप सृष्टि र अपानरूप संहारका रूपमा सतत सञ्चरणशील प्राणशक्तिलाई मध्यधामरूप सुषुम्णा मार्गमा प्रवेश गराई कुण्डलिनीयोगको अभ्यास गरिने उक्त धामलाई प्राणपथधाम भनिन्छ।

**बुद्धिधाम**

कुलयाग सम्पादनको आधार बुद्धिलाई बनाइन्छ भने त्यसलाई बुद्धिधाम भनिन्छ। बुद्धिधाममा सम्पादन गरिने कुलयागमा संविच्छक्तिको सतत ध्यान गरिन्छ र उक्त संविच्छक्तिका साथ आफूलाई एकाकार गराई सम्पूर्ण चराचर जगत्‌लाई आफूदेखि अभिन्न रूपमा बोध गरी पूर्णाहन्तास्वरूपको विकास गरिन्छ।

कुलयागमा दीपको पनि ठूलो महत्त्व रहेको छ। मुख्य कुलचक्रको मध्यमा कुलेश्वर र कुलेश्वरीको यामलभावले पूजा सम्पन्न गरिन्छ। यस कुलचक्रमा विभिन्न देवी वा योगिनीहरूले घेरिएकी कुलेश्वरीको कल्पना गरिन्छ। वास्तवमा कुलेश्वरी विभिन्न शक्तिहरूकी पुञ्ज हुन् भने ती देवी वा योगिनीहरू कुलेश्वरीका रश्मि हुन्। अतः कुलेश्वरीको रश्मिका रूपमा विभिन्न देवी वा योगिनीहरूको कल्पना गरी तिनको प्रतीकस्वरूप दीपहरूको प्रयोग गरिन्छ। दीपलाई महापशुको प्रतीक पनि मानिन्छ।

**कुलसाहित्य**

वस्तुतः कुलमत वा कुलपरम्परा एउटा यस्तो वक्त्रपरम्पराबाट प्रवाहित साधनामार्ग हो जो तर्कप्रधान दार्शनिक विवेचनभन्दा माथि रहेको स्वानुभूतिगम्य तान्त्रिक ज्ञानको सार हो। अतः यस मतमा ग्रन्थरचनाको अपेक्षा दीक्षा र अभ्यासमा बढी जोड दिइएको छ। अर्को कुरा कुलमत सम्पूर्ण शैव तथा शाक्त तान्त्रिक विचारधाराको साररूप भएकाले हरेक शैव तथा शाक्त ग्रन्थमा कुलविधिको चर्चा कहीँ न कहीँ अवश्य पाइन्छ त्यसैले पनि कुलमतको छुट्टै सम्प्रदायगत साहित्यका रूपमा कुनै निश्चित ग्रन्थहरूलाई तोक्नु कठिन कार्य हो। अतः आम्नायगत विभाजनलाई आधार

बनाएर ती आम्नायहरूमा निहित विशिष्ट दृष्टिका प्रतिपादक तन्त्रहरूलाई नै कुलमतको साहित्य मान्नु एउटा सार्थक उपाय बन्न सक्छ। आम्नायगत विभाजन कुलमतको निजी वैशिष्ट्य हो, जुन विभाजन सम्भवतः सिद्धान्तागममा प्रस्तुत पञ्चस्रोतसम्बन्धी वर्गीकरणलाई आधार बनाएर गरिएको हो। यद्यपि ऊर्ध्वाम्नाय, ऊर्ध्वोर्ध्वाम्नाय तथा अधराम्नायको समेत कल्पना गरेर पाँच, छ वा सात आम्नायको परिकल्पना गरेको पनि पाइन्छ तर मुख्यतः चारवटा आम्नायको धारणा नै सर्वाधिक प्रचलित र मान्य देखिन्छ त्यसैले अब यहाँ चारवटा आम्नायहरूमा कुलमतको विकास कसरी भएको छ र ती आम्नायसँग सम्बद्ध मुख्य कुलसाहित्य के-के हुन् भन्ने विषयमा प्रस्तुत लेखलाई केन्द्रित गरिन्छ।

**पूर्वाम्नाय**

त्रिक परम्परामा विकसित कुलधारालाई यस आम्नायसँग जोडेको पाइन्छ। परा, परापरा र अपरारूप त्रिविध विद्या वा शक्तिलाई केन्द्रमा राखेर विकसित साधनापद्धति नै त्रिक परम्पराको मुख्य वैशिष्ट्य हो। अतः यस कुलधारामा परा आदि त्रिविध शक्तिको माझमा ब्राह्मी आदि मातृशक्तिहरूले घेरिएका कुलेश्वर एवं कुलेश्वरीको प्रतिष्ठापना गरिन्छ। यसलाई मुख्य कुलचक्र भनिन्छ र यस कुलचक्रको बाहिर सिद्धक्रमको पूजा गर्ने विधान रहेको छ। यस कुलधारामा सिद्धक्रम यसप्रकार रहेको छ- खगेन्द्रनाथ, कूर्मनाथ, मेषनाथ र मच्छन्दनाथ वा मत्स्येन्द्रनाथ। यस कुलधाराका मुख्य तन्त्रसाहित्य हुन्- सिद्धयोगेश्वरीमत, मालिनी-विजयोत्तरतन्त्र, त्रिशिरोभैरवतन्त्र, त्रिकसद्भावतन्त्र, माधवकुलतन्त्र, निशिसञ्चारतन्त्र, परात्रीशिका, रुद्रयामलतन्त्र आदि।

**दक्षिणाम्नाय**

यस आम्नायको सम्बन्ध षोडशी महाविद्या वा महात्रिपुरसुन्दरीको परम्परामा विकसित कुलधारासँग रहेको छ। यस आम्नायमा पराशक्तिका रूपमा महात्रिपुरसुन्दरीको सौम्य रूपको उपासना गरिन्छ। यस परम्परालाई श्रीविद्यासम्प्रदाय वा सौभाग्यसम्प्रदाय पनि भनिन्छ। यस कुलधारामा मित्रनाथ, ओड्डनाथ, षष्ठनाथ र चर्यानाथ सिद्धक्रममा देखिन्छन्। यस सम्प्रदायको सबैभन्दा प्राचीन तन्त्र वामकेश्वरतन्त्र हो। यसअतिरिक्त तन्त्रराजतन्त्र, ज्ञानार्णवतन्त्र, शक्तिसङ्गमतन्त्र, नित्याषोडशिकार्णव, योगिनीहृदय, सौभाग्यसुधोदय, कामकलाविलास, मातृकाचक्रविवेक आदि यस आम्नायसँग सम्बद्ध कुलमतका साहित्य हुन्।

**पश्चिमाम्नाय**

यस आम्नायको सम्बन्ध कुब्जिकाको परम्परामा विकसित कुलधारासँग रहेको छ। वर्तमानमा यस परम्पराका ग्रन्थहरू नेपालमा मात्र उपलब्ध छन्। काठमाडौं उपत्यकाका तीनै सहर र काठमाडौंदेखि बाहिरका मुख्य प्राचीन नेवारबस्तीहरूमा स्थापित तुलजा वा तलेजु भवानी यस परम्पराकी मुख्य उपास्य देवी हुन्। यस आम्नायमा पनि दक्षिणाम्नायकै गुरुक्रमलाई अपनाइएको छ। कुब्जिकातन्त्र, मन्थानभैरवतन्त्र, कुलालिकाम्नाय आदि यस आम्नायसँग सम्बद्ध कुलमतका साहित्य हुन्।

**उत्तराम्नाय**

काली परम्परामा विकसित कुलधारालाई यस आम्नायअन्तर्गत राखिएको छ। पराशक्ति कालीलाई सर्वोच्च उपास्य मानेर रचना गरिएका मत एवं क्रमसम्प्रदायका ग्रन्थहरू यस आम्नायसँग सम्बद्ध छन्। यस आम्नायमा विकसित कुलधारामा पनि पूर्वाम्नायकै सिद्धक्रम रहेको छ। यस परम्परामा बाह्र कालीहरूद्वारा घेरिएकी कालसङ्कर्षिणीलाई नै परम सर्वोच्च सत्ता मानिन्छ र तिनकै उपासना गरिन्छ। जयद्रथयामलतन्त्र, कालिकाकुलपञ्चशतक, कालिकाक्रमसद्भावतन्त्र, कालिकुलक्रमार्चन, देवीद्व्यर्धशतिका, उत्तरघराम्नाय आदि यस आम्नायअन्तर्गत विकसित कुलमतका साहित्य हुन्। नेपालमा मात्र उपलब्ध कालीकुलपरम्पराका ग्रन्थहरूमा देवीद्व्यर्धशतिका, कालिकाकुलक्रमसद्भाव, उत्तरघराम्नाय रहेका छन् भनी प्रसिद्ध तन्त्रविद् एलेक्सिस स्यान्डर्सनले उल्लेख गरेका छन् (Goodal & Paudoux(Ed.), 2007, P. 252). उत्तरघराम्नाय चिञ्चिणीमतसारसमुच्चयको एउटा अंश रहेको उनले बताएका छन् (Goodal & Paudoux(Ed.), 2007, P. 252).

**कालिकाकुलपरम्परा**

उत्तराम्नायमा विकसित कुलधाराको सम्बन्ध कालिकाकुलपरम्परासँग रहेको कुरा माथि प्रसङ्गवश चर्चा भइसकेको छ। पराशक्ति कालीलाई नै यस परम्परामा सर्वोच्च उपास्य मानेर तिनैको उपासना गरिन्छ। अतः तलका केही पृष्ठहरूमा कालीतत्त्व, कालीउपासना आदि विषयमाथि प्रकाश पार्दै कालिकाकुलपरम्पराको सङ्क्षिप्त परिचय प्रस्तुत गरिन्छ।

**कालीतत्त्व**

काली शब्दको निष्पत्ति कल धातुबाट भएको छ। कल धातुका निम्नलिखित पाँचवटा अर्थ रहेका छन् - १.क्षेप(फ्याँक्नु वा बाहिर निकाल्नु) २.गत(जान्नु) ३.सङ्ख्यान ( पृथक् रूपमा गणना गर्नु वा नियमन गर्नु) ४.गत(पुग्नु) ५.शब्द (नादरूपमा परामर्श गर्नु)

फ्याँक्नु वा बाहिर निकाल्नु भन्ने अर्थमा प्रयोग हुने कल धातुबाट बनेको काली शब्दको व्युत्पत्ति अनुसार- **कलयति स्वात्माभेदेन स्थितं प्रमातृप्रमाणप्रमेयरूपं विश्वं बहिर्भावेनोल्लासयतीति परा संविद्देव काली इत्युच्यते** अर्थात् आफूदेखि अभिन्न रूपमा रहेको प्रमाता, प्रमाण र प्रमेयरूप जगत्लाई भिन्नजस्तै गरी बाहिर अवभाासित गर्ने चितिशक्तिलाई नै काली भनिन्छ ।

जान्नु अर्थमा प्रयोग हुने कल धातुबाट बनेको काली शब्दको व्युत्पत्ति अनुसार- **कलयति स्वात्मबहिर्भावेनावभासितमपीदं मातृमानमेयात्मकं जगत् स्वात्माभेदेनैव परामृशतीति परैव संविद्देवी काली इत्युच्यते** अर्थात् आफ्नो चैतन्य स्वरूपदेखि अभिन्नरूपले रहे तापनि भिन्नभैँ बाहिर अवभासित भएको प्रमाता, प्रमाण र प्रमेयरूप जगत्लाई आफ्नै स्वरूपमा ज्ञान गर्ने चितिशक्तिलाई नै काली भनिन्छ ।

पृथक्रूपले गणना गर्नु वा भिन्नभिन्नरूपले नियमन गर्नु भन्ने अर्थमा प्रयोग हुने कल धातुबाट बनेको काली शब्दको व्युत्पत्तिअनुसार- **कलयति भेदितमपि मातृमेयादिकं जगद्रूपमर्थं परस्परापोहनात् अयं घटः, न पटः इति प्रतिनियतरूपतया अवस्थापयति इति परैव चिल्लहरी संवित् काली इत्युच्यते** अर्थात् आफ्नो चैतन्य स्वरूपदेखि अभिन्नरूपले रहे तापनि भिन्नभैँ बाहिर अवभासित भएको प्रमाता, प्रमाण र प्रमेयरूप जागतिक पदार्थलाई अपोहनशक्ति (अपूर्ण ज्ञानरूप अवरोधक शक्ति)का माध्यमबाट यो घैँटो हो, कपडा होइन, यो नीलो हो, पहँलो होइन इत्यादि भिन्नभिन्न रूपमा व्यवस्थित गर्ने संवित् शक्तिलाई काली भनिन्छ ।

पुग्नु अर्थमा प्रयोग हुने कल धातुबाट बनेको काली शब्दको व्युत्पत्तिअनुसा- **कलयति यया मातृमानमेयात्मको भेदितोऽर्थः स्वसंवित्तिमकुरे स्वात्मन्यव्यतिरिक्तत्वेपि अव्यतिरेकैणैव स्वरूपारोहितत्वेनैवावस्थापयतीति परा कालसङ्कर्षिणी देवी काली इत्युच्यते** अर्थात् आफ्नो चैतन्यस्वरूपदेखि अभिन्न भए तापनि उक्त चैतन्यदर्पणमा भिन्नरूपले प्रतिबिम्बित भइरहेको प्रमाता, प्रमाण र प्रमेयरूप जगत्लाई आफ्नै चैतन्यस्वरूपमा पुनः स्थापित गर्ने कालसङ्कर्षिणी संवित् भगवतीलाई काली भनिन्छ ।

नादरूप परामर्शको अर्थमा प्रयोग हुने काली शब्दको व्युत्पत्तिअनुसार- **कलयति समस्तानाम् अविकल्पसविकल्पादीनां ज्ञानानां सृष्टि–स्थिति–संहार–पिधानानुग्रहात्मकपञ्चकृत्यानुसन्धानेन स्वात्मपरामर्शशेषतयैव सर्वं परामृश्यतीति परैव संवित् काली इत्युच्यते** अर्थात् निर्विकल्पात्मक एवं सविकल्पात्मक सम्पूर्ण ज्ञानको परामर्श सृष्टि, स्थिति, संहार, तिरोधान र अनुग्रहस्वरूप पञ्चकृत्यका रूपमा गर्दै सम्पूर्ण ज्ञानलाई आफ्नै बोधस्वरूप तुरीय सत्तामा विलीन गर्ने परासंवित्लाई काली भनिन्छ ।

कालीको स्वरूपमा शक्तितत्त्वको पूर्ण अभिव्यक्ति पाइन्छ । कालीको स्वरूपमा निहित सृष्टि र संहारको रहस्यलाई शब्दद्वारा पूर्णरूपले अभिव्यक्त गर्न सकिँदैन त्यसैले कालीलाई शब्दातीत भनिन्छ । काली नै विश्वकी जननी एवं भुक्ति तथा मुक्ति प्रदान गर्ने शक्ति हुन् ।

कालीतत्त्वलाई बुझ्नका लागि सर्वप्रथम कालतत्त्वलाई बुझ्नुपर्दछ । सम्पूर्ण चराचर जगत्लाई कलन वा ग्रास गर्ने तत्त्वलाई काल भनिन्छ । सोही काल, कालकाल वा महाकाल नामक तत्त्वबाट नै सम्पूर्ण जगत्को उत्पत्ति हुन्छ र पुनः ती समस्त तत्त्वहरू कालकै गर्भमा लीन हुन्छन् । त्यसैले भनिएको छ– कालः पचति भूतानि कालः संहरति प्रजा अर्थात् कालले नै समस्त पञ्चमहाभूतात्मक जगत्लाई पचाउँछ र त्यसले नै जीवहरूको संहार गर्दछ । भैरवरूपी कालले नै ब्रह्मादेखि कीटपर्यन्त सम्पूर्ण जगत्को रचना गर्दछ । सोही महाकालको अभिन्न स्वातन्त्र्यशक्तिलाई नै महाकाली भनिन्छ । सृष्टिपूर्वको संहारदशामा महाकालीको नै साम्राज्य रहन्छ । त्यसैले महानिर्वाणतन्त्रमा भनिएको छ –

**सृष्टेरादौ त्वमेवासि तमोरूपमगोचरम् ।**
**त्वत्तो जातं जगत् सर्वं परब्रह्मसिसृक्षया ॥**

अर्थात् सृष्टिपूर्व इन्द्रियले नदेखिने तमस् वा अन्धकारका रूपमा तिमी नै विद्यमान थियौ । परब्रह्मको सृष्टि गर्ने चाहनाका कारण यो सम्पूर्ण जगत् तिमीबाट नै जन्मिएको हो । मैत्रायण्युपनिषद्मा पनि भनिएको छ – तमो वा इदमेकमग्रमासीत् अर्थात् यो तमस् वा अन्धकार नै पहिले (सृष्टिपूर्व) थियो । सोही तमस् वा प्रलयकालको अनिर्वचनीय स्वरूप नै तन्त्रशास्त्रमा वर्णित आद्याशक्ति काली वा महाकाली हुन् । महाशक्ति काली परब्रह्मस्वरूप महाकालको स्फुरत्ता हो ।

कालीतत्त्व नै समस्त प्रकाश वा ज्योतिको उद्गमस्रोत हो । तमस् वा अन्धकाररूप काली कसरी प्रकाशको स्रोत हुन सक्छ भनेर यहाँ पाठकहरूलाई आश्चर्य लाग्न सक्छ । वास्तवमा प्रलयकालमा अन्धकारले प्रकाशलाई पनि आफूमा लीन गराएको हुन्छ । सम्पूर्ण विश्वब्रह्माण्ड

यहाँसम्म कि प्रकाश पनि अन्धकारमा विलीन हुन्छ। आधुनिक विज्ञानले पनि यसैका आधारमा ब्ल्याक होल(कृष्ण विवर)को कल्पना गर्दै प्रलयकालमा सम्पूर्ण ब्रह्माण्ड सोही ब्ल्याक होलमा विसर्जन हुने कुरा बताएको छ। सृष्टिदशामा आद्याशक्ति कालीले आफूभित्र रहेको जगत्लाई वामाशक्तिका रूपमा पुनः बाहिर वमन गर्दछिन् अतः स्वाभाविक रूपले प्रकाश पनि सोही तमस्बाटै उद्भूत हुन्छ। तिनै महाकालीलाई तन्त्रशास्त्रले संवित्, कुल, सामर्थ्य, ऊर्मि, हृदय, सार, स्पन्द, विभूति, चिति, परावाक्, स्वातन्त्र्य, त्रीशिका, कालसङ्कर्षिणी, चण्डी, ओज आदि अनगिन्ती संज्ञा दिएर तिनको स्वरूप र साधनाको विवेचना गरेको छ। तिनै महाकाली दशवटा मुख्य भावमा विभक्त भएर दश महाविद्याका रूपमा देखा पर्दछिन्। सृष्टि, स्थिति र संहाररूप तीनवटा कृत्यका प्रत्येकको आदि, मध्य र अन्त्य गरी नौवटा रूप र ती सबैको समष्टिस्वरूप गरी दश महाविद्याको क्रम दशमहाविद्यापरम्परामा स्वीकार गरिएको छ। ती दश महाविद्या हुन् – काली, तारा, षोडशी, भुवनेश्वरी, भैरवी, छिन्नमस्ता, धूमावती, बगला, मातङ्गी र कमला। शक्तिसङ्गमतन्त्रका अनुसार विरूपाक्षमतअनुसार दश महाविद्यामा चण्डेश्वरी, लघुश्यामा र त्रिपुरालाई जोड्दा तेह्र महाविद्या र भैरवमतमा दश महाविद्यामा वनदुर्गा, शूलिनी, अश्वारुढा, त्रैलोक्यविजया, वाराही र अन्नपूर्णा जोड्दा सोह्र महाविद्या मानिन्छ। त्यसैगरी क्रमदर्शनमा एउटै महाकाली सृष्टि, स्थिति, संहार र अनाख्यारूप चारवटा क्रमले प्रमाता, प्रमाण र प्रमेय दशामा उल्लसित हुँदा द्वादशकालीको रूपमा देखापर्ने कुराको उल्लेख पाइन्छ। सोही दर्शनमा ती द्वादशकालीको समष्टिस्वरूप त्रयोदशकालीको चिन्तन पनि फेला पर्दछ। यहाँ तिनको उल्लेख गर्नु सान्दर्भिक हुनेछ।

**सृष्टिकाली**

जब पञ्चज्ञानेन्द्रियका माध्यमबाट प्रमेयरूप बाह्य पदार्थलाई ग्रहण गर्नका लागि चेतना उक्त प्रमेयरूप बाह्य पदार्थप्रति उन्मुख हुन्छ तब प्राथमिक क्षणमा उक्त प्रमेय पदार्थलाई निर्विकल्प रूपमा ग्रहण हुन्छ। उक्त निर्विकल्प प्रथम आभासको अवस्थामा द्रष्टा, दर्शन र दृश्यको कुनै विकल्प वा भेद रहँदैन। सृष्टिका प्रति उन्मुख चितिशक्तिको सोही प्राथमिक निर्विकल्प अवस्थालाई नै सृष्टिकाली भनिन्छ।

**रक्तकाली**

निर्विकल्पात्मक प्रथम आभासरूप सृष्टिकालीको उदय भएपछि संवित् शक्ति जब पदार्थप्रति उन्मुख हुँदै प्रमेयवर्ती प्रमाणदशामा आएर इन्द्रियका माध्यमबाट रूप, रस आदि विषयका साथ जब रागमा प्राप्त भई विषयहरूलाई भोग्दै विषयभोगरूप रागलाई निर्विकल्प भावले अनुभव गर्दछ तब संवित् शक्तिको त्यस्तो स्वरूपविकासको दोस्रो अवस्थालाई रक्तकाली भनिन्छ ।

**स्थितिनाशकाली**

विषयलाई भोग्ने कार्य समाप्त भएपछि उक्त विषयभोगबाट तृप्त भएर पुनः अन्तर्मुख भई ग्राह्य र ग्रहणको स्थितिलाई आत्मसात् गरेर परम चैतन्यसत्ताका साथ एकाकार हुने चितिशक्तिको अवस्थालाई स्थितिनाशकाली भनिन्छ । यस अवस्थामा विषयभोगरूप रागको अवसान हुने भएकाले चितिशक्तिको त्यस अवस्थालाई स्थितिनाशकाली भनिएको हो ।

**सुकाली**

अभिनवगुप्तले सुकालीलाई गणना नगरी तन्त्रालोकमा द्वादशकालीको वर्णन गरेका छन् तर तन्त्रालोकका विवेकव्याख्याकार आचार्य जयरथले पञ्चशतिकलाई उद्धृत गर्दै सुकालीलाई समेत गणना गरी त्रयोदशकालीको धारणालाई समर्थन गरेका छन् । भीषण एवं रौद्र स्वरूपकी कुलशक्ति सुकाली सम्पूर्ण सिद्धिकी प्रदात्री हुन् ।

**यमकाली**

परा संवित्स्वरूप भगवती काली जगत्लाई नियमन गर्ने उद्देश्यले एकातिर समस्त विकल्परूप विश्ववैचित्र्यलाई आफ्नै चैतन्यस्वरूप अग्निमा अन्तर्लीन गरी परप्रमातृदशामा स्फुरित हुन्छिन् भने अर्कातिर बहिर्मुखी बन्दै आफूभित्र चैतन्यबीजका रूपमा विद्यमान समस्त नामरूपात्मक जगत्लाई बाह्य विकल्पस्वरूपमा प्रकाशन गरी महाविलासरूपी रसको आनन्द लिँदै सङ्कुचित प्रमातृदशामा स्फुरित हुन्छिन् । चितिशक्तिको यिनै स्वरूप आच्छादन एवं स्वरूप उन्मीलनरूप द्वयात्मक स्वरूपलाई नै यमकाली भनिन्छ । यस अवस्थामा शक्तिको सतत अनुसन्धानद्वारा विकल्पजाललाई भेदन गर्ने प्रयत्न साधकले गरेन भने स्वात्मस्थितिबाट च्युत भएर अन्य संसारी व्यक्तिहरूझैँ बहिर्मुख हुने खतरा रहन्छ ।

**संहारकाली**

समस्त विकल्पात्मक विश्ववैचित्र्यलाई आफ्नो चितिस्वरूप अग्निमा अन्तर्लीन गर्दा स्वरूप–उन्मीलनात्मक परप्रमातृदशाको स्फुरण हुन्छ र समस्त विकल्पस्वरूप भावमण्डलको उपसंहार भएको अनुभव हुन्छ। सोही अवस्थालाई संहारकाली भनिन्छ।

**मृत्युकाली**

संहारकालीको अवस्थामा इदं (भेद)का रूपमा अवभासित समस्त विश्ववैचित्र्य अहं (अभेद)मा विलीन भएको बोध हुन्छ। त्यस अवस्थामा पनि इदन्ता (भेदरूपता) सम्पूर्णरूपले विलीन भएको हुँदैन अर्थात् पूर्ण अहन्ताको परामर्श भइसकेको हुँदैन त्यसैले उपाधियुक्त अहन्तारूपी संवित् (संहारकाली) उपाधिरहित स्वभावभूत पूर्णाहन्ता (मृत्युकाली)मा विलीन भएको अवस्थालाई मृत्युकाली भनिन्छ।

**भद्रकाली**

प्रमाणगत संहारस्वरूप भद्रकालीको अवस्थामा पनि विकल्पसंस्काररूप शङ्काहरू उत्पन्न हुन्छन् तर ती शङ्काहरू आफैँ नष्ट हुन्छन्। यमकालीको अवस्थामा स्वरूपगोपनात्मक शक्तिका कारण विकल्पसंस्काररूप शङ्काहरू उत्पन्न हुन्छन् र यदि साधकले शक्तिको सतत अनुसन्धानद्वारा ती शङ्काहरूलाई नष्ट गर्ने प्रयत्न गरेन भने ऊ पुनः संसारचक्रमा फस्ने सम्भावना रहन्छ तर भद्रकालीको अवस्थामा आरूढ साधकमा भने ती विकल्पसंस्काररूप शङ्काहरू आफैँ नष्ट हुन्छन्। यसप्रकार विकल्पसंस्कारलाई उत्थापन गर्ने भेदनव्यापार र पुनः ती विकल्पसंस्कारहरूलाई प्रशमन गर्ने द्रावणव्यापारमा संलग्न चितिशक्तिलाई भद्रकाली भनिन्छ।

**मार्तण्डकाली**

प्रमाणदशामा स्थित बारह इन्द्रिय (पञ्च ज्ञानेन्द्रिय, पञ्च कर्मेन्द्रिय, मन र बुद्धि) लाई तिनको आश्रयस्थल बनेर रहेको अहङ्कारपदमा विलीन गराई आफ्नो विश्वमय स्वरूपको प्रदर्शन गर्ने परप्रमातृरूप चितिशक्तिलाई मार्तण्डकाली भनिन्छ। यद्यपि यो अवस्था प्रमाणवर्ग अन्तर्गत संविद्देवीको अनाख्या अवस्था भएकाले यहाँ देवीको विश्वमय-विश्वोत्तीर्ण दुवै रूपको अवभासन हुन्छ तर विश्वमय स्वरूप स्फुटरूपमा देखापर्दछ।

**परमार्ककाली**

प्रमाणदशामा स्थित बारह इन्द्रियसमूहको आश्रयस्थल बनेर रहेको परमादित्यस्वरूप अहङ्कारलाई समेत आफ्नो चैतन्यस्वरूपमा लय गराउने भगवती कालीको स्वरूपविकासलाई परमार्ककाली भनिन्छ।

**कालाग्निरुद्रकाली**

परमादित्यस्वरूप अहङ्कारलाई समेत आफूमा लीन गराउने कालाग्निरुद्र नामक कल्पित प्रमाता पनि जुन पूर्णाहन्तास्वरूप चैतन्यमा विलीन हुन्छ त्यही महाचिदग्निलाई कालाग्निरुद्रकाली भनिन्छ। यस अवस्थामा समस्त भाववर्ग पूर्ण अहंविमर्शमा विलीन हुन्छ। सर्वत्र अहंस्वरूपको चमत्कार दृष्टिगोचर हुन थाल्छ। यस अवस्थामा प्रवेश गरेको योगीले समस्त भाववर्गलाई अहंस्वरूपमा एकाकार गर्दै उक्त अहन्तारूपी चमत्काररसमा निमग्न भैरवका रूपमा आफूलाई बोध गर्दछ।

**महाकालकाली**

कालाग्निरुद्रकालीको अवस्थामा समस्त भाववर्ग पूर्ण अहंपरामर्शस्वरूप महाकालमा विलीन हुन्छ। त्यस्तो महाकाल वा कालाग्निरुद्रकाली पनि आफ्नो स्वभावभूत जुन अकुलधाममा प्रविष्ट हुन्छ त्यही कालकलनाशून्य महाशून्यको अवस्था नै भगवती कालसङ्कर्षिणीको महाकालकाली स्वरूप हो।

**महाभैरवचण्डोग्रघोरकाली**

माथि वर्णन गरिएका समग्र स्वरूपको उत्पत्ति एवं लयस्थानका रूपमा विद्यमान अनाख्या धाम जो चण्ड अर्थात् प्रमेयचक्र, घोर अर्थात् प्रमाणचक्र र महाभैरव अर्थात् प्रमातृचक्र यी तीनैलाई आफैँबाट उत्पन्न एवं आफैँमा लय गर्दै क्रम, अक्रम तथा क्रमाक्रमरूपले तुरीयसत्ताका रूपमा विद्यमान छ त्यही मातृसद्भावरूपिणी कालसङ्कर्षिणी देवीलाई नै महाभैरवघोरचण्डकाली भनिन्छ।

यसअतिरिक्त महाकालीका अनेक रूपहरूको चर्चा तन्त्रशास्त्रमा पाइन्छ। महाकालसंहितामा महाकालीका नौवटा रूपको उल्लेख गरिएको छ। ती हुन् – आद्याकाली, दक्षिणकाली, भद्रकाली, श्मशानकाली, गुह्यकाली, कामकलाकाली, धनकाली, सिद्धिकाली र चण्डकाली। तोडलतन्त्रमा कालीका आठवटा भेद देखाइएको छ। ती हुन् –

दक्षिणकाली, सिद्धिकाली, गुह्यकाली, श्रीकाली, भद्रकाली, चामुण्डाकाली, श्मशानकाली र महाकाली ( कालीकल्पद्रुवल्लरी, पृ. ३२ मा उद्धृत) वास्तवमा एउटै महाशक्ति साधकहरूको कार्यसिद्धिका लागि विविध रूपमा अवतीर्ण हुन्छिन् । साधकहरूको भावना र अधिकारभेदका कारण महाशक्ति कालीका विविध रूपको कल्पना शास्त्रमा गरिए तापनि ती सम्पूर्ण रूपहरू वास्तवमा एउटै संवित्‌शक्तिका अनन्त विस्तार मात्र हुन्, तिनमा भेद देख्नु अज्ञानता सिबाय केही होइन ।

**कालीसाधनाक्रम**

कालीसाधना लगायत समस्त शक्तिसाधना तीन प्रकारका आचारहरूबाट सम्पन्न हुन्छ । ती तीन आचारहरू हुन् – दक्षिणाचार, वामाचार र कुलाचार । यी तीनवटा आचारहरू क्रमशः पशुभाव, वीरभाव र दिव्यभावका आधारमा व्यवस्थित भएका हुन् ।

**दक्षिणाचार**

श्रुतिस्मृति अनुकूलको आचार नै दक्षिणाचार हो । दक्षिणामूर्तिले सर्वप्रथम यस आचारअनुसार शक्तिसाधना गरेकाले यसको नाम दक्षिणाचार रहन गएको हो भन्ने वचन पाइन्छ । दक्षिणाचारलाई पश्वाचार पनि भनिन्छ । पशुभावमा स्थित साधकहरूको आचार भएकाले यसलाई पश्वाचार भनिएको हो । तन्त्रशास्त्रमा व्यक्तिलाई पशुभावापन्न बनाउने पाश आठ प्रकारको बताइएको छ । कुलार्णवतन्त्रमा भनिएको छ –

**घृणा शङ्का भयं लज्जा जुगुप्सा चेति पञ्चमी ।**
**कुलं शीलं तथा जातिरष्टौ पाशाः प्रकीर्तिताः** ॥ (१३।९०)

अर्थात् घृणा, शङ्का, भय, लज्जा, जुगुप्सा, कुल, शील र जाति यी आठ प्रकारका पाशहरू हुन् । यिनै पाशहरूले बाँधिएको अवस्थामा जीवले आफूलाई शिवभन्दा भिन्न ठान्छ । यिनै पाशहरूलाई साधनाद्वारा काट्तै शिव वा पराशक्तिका साथ आफ्नो अभिन्नता बोध गर्नु नै साधनाको चरम लक्ष्य हो । जबसम्म साधक पशुभावले बाँधिएको हुन्छ तबसम्म उसले पश्वाचारकै अवलम्बन गर्नु श्रेयस्कर हुन्छ । उदाहरणका लागि जेलमा रहेका कैदीहरूले जेलका नियमहरूको पालना गर्नु नै उनीहरूका लागि श्रेयस्कर हुन्छ अन्यथा उनीहरूले थप कष्ट भोग्नुपर्ने हुन जान्छ । जबसम्म साधकमा पशुभाव विद्यमान रहन्छ तबसम्म उसले पशुभावभन्दा भिन्न तरिकाले उपासना गर्नै सक्तैन । पशुभावरूपी पाशलाई नछिनालेसम्म शक्तिसाधनाको यात्रामा दोस्रो सिँढीका रूपमा रहेको वीरभाव र उक्त

भावअनुसार व्यवस्थित वामाचारमा उसले पाइला टेक्नै सक्तैन। अतः पशुभावमा रहेर साधना गर्दै जाँदा जब उसमा निहित पशुत्वको जालो नष्ट हुन्छ तब ऊ शक्तिसाधनाको यात्रामा वीर कहिन्छ। त्यतिखेर उसको आचार वीराचार वा वामाचार बन्न पुग्छ। अतः तन्त्रशास्त्रमा साधनाको प्रारम्भिक सोपानका रूपमा पशुभावलाई ग्रहण गरिएको छ। पशुभावमा स्थित साधकहरूको आचारका रूपमा व्यवस्थित दक्षिणाचार वा पश्वाचारमा साधकले सेतो वर्णको देवताको ध्यान, त्रिकाल सन्ध्या एवं देवपूजन, वेदपुराण आदि शास्त्रमा श्रद्धा, नित्य श्राद्ध, ब्रह्मचर्यको पालना, आत्मप्रशंसा र परनिन्दाको त्याग आदि आचारहरूको कट्टरतापूर्वक पालना गर्नुपर्ने उपदेश दिएको देखिन्छ (मेरुतन्त्र, ७५–१०)। दक्षिणाचार वा पश्वाचारका मूलतः दुईवटा भेद रहेका छन्–

१. सभावपश्वाचार
२. विभावपश्वाचार।

**सभावपश्वाचार**

सभावपश्वाचारमा पञ्चमकारको प्रयोग सर्वथा निषिद्ध मानिन्छ। कुलार्णवतन्त्रमा भनिएको छ –

**अनाघ्रेयमनालोक्यमस्पृश्यञ्चाप्यपेयकम्।**
**मद्यं मांसं पशूनान्तु कौलिकानां महाफलम्॥** (२।१२४)

अर्थात् सभाव पाशवकल्पका साधकहरूले मद्य र मांस सुँघ्न, हेर्न, स्पर्श गर्न र पिउन वा खान वर्जित छ। त्यही कुरा दिव्यभावमा स्थित कौल साधकका लागि भने महाफलप्रद मानिन्छ। सभावपाशवकल्पका साधकहरूका लागि मद्य वा सुराको दर्शनादि दोषनिवृत्तिको उपाय कुलार्णवतन्त्रमा यस्तो बताइएको छ –

**सुरादर्शनमात्रेण कुर्यात् सूर्यावलोकनम्।**
**तत्समाघ्राणमात्रेण प्राणायामत्रयं चरेत्॥**
**आजानुभ्यां भवेन्मग्नो जले चोपवसेदहः।**
**ऊर्ध्वं नाभेस्त्रिरात्रन्तुमद्यस्य स्पर्शने विधिः॥**
**सुरापाने कामकृते ज्वलन्तीं तां विनिक्षिपेत्।**
**मुखे तथा विनिर्दग्धे ततः शुद्धिमवाप्नुयात्॥** (२।१२७–१२९)

अर्थात् सुरा देखियो भने मात्रै पनि सूर्यको दर्शन गर्नुपर्छ, त्यसको गन्ध नाकमा पर्‍यो भने तीन पटक प्राणायाम गर्नुपर्छ तथा शरीरको घुँडादेखि तलको भाग पानीमा डुबाएर दिनभरि उभिनुपर्छ, सुराको स्पर्श गर्‍यो भने नाभिदेखि तलको भाग पानीमा डुबाएर उपवासपूर्वक तीन रात

उभिनुपर्छ, सुराको सेवन गरेमा सुरालाई उमालेर मुखमा कोचिदिनुपर्छ । सो उम्लिएको सुराले मुख डढेपछि मात्रै मद्यसेवनको दोष हट्तछ । यहाँ मद्य उपलक्षणका रूपमा आएको छ। मद्यका साथै मांस, मत्स्य, मुद्रा र मैथुनसमेत सभावपाशवकल्पका साधकहरूका लागि निषिद्ध ठहर्दछ। ब्रह्मचर्याश्रममा रहँदासम्म द्विजहरूले सभावपाशवकल्पबाट उपासना गरी गृहस्थाश्रममा प्रवेश गरेपछि शाक्त दीक्षा लिएर विभावपाशवकल्पबाट उपासना गर्नुपर्ने हुन्छ (ज.ब.रा., वि.सं. २०२०, पृ. ११२)। अतः ब्रह्मचर्याश्रममा रहँदासम्म द्विजहरूले वेदमाता गायत्रीको मात्रै उपासना गरे पुग्छ भन्ने कुरा स्पष्ट हुन्छ ।

**विभावपश्वाचार**

विभावपश्वाचारमा भने पञ्चमकारको अनुकल्पीय प्रयोगद्वारा उपासना गरिन्छ । वेदोक्त मार्गबाट मद्य, मांस आदिको प्रतिनिधिस्वरूप अनुकल्पीय द्रव्यको प्रयोग गरी इष्टदेवताको पूजा गर्नु नै विभावपश्वाचार हो (ज.ब.रा., वि.सं. २०४६, पृ. ९ )। विभावपश्वाचारमा खजूरीको रस, गाई र भैँसीको दूधमा चाकु र पानको पातको धुलो मिलाएर पकाएको झोल, घिउमा नुन हालेर पकाएको आमान्नको तरकारी मद्यको अनुकल्प हुन्छ। गहुँ, हलेदो, अदुवा, सेतो तिल, शरद्कालमा पाक्ने अन्नको बिउ, रातो अन्नको बिउ र कुभिन्डो मांसको अनुकल्प हुन्छ। पोलेको नरिवल, बेल, अमला वा हर्रो मत्स्यको अनुकल्प हुन्छ। नुन र पानी नहाली भुटेको अन्नको बिउ मुद्राको अनुकल्प हुन्छ। विभावपश्वाचारमा मैथुनको अनुकल्पीय बाह्य द्रव्य नहुने भएकाले आफ्नो सहस्रारचक्रमा शिवशक्तिको समन्वय सम्झेर शिवशक्तिको सामरस्यजन्य अमृतले परदेवतालाई तर्पण गर्नु मैथुनको अनुकल्प हो (ज.ब.रा., वि.सं. २०२०, पृ. ११४–११५)।

यसप्रकार पश्वाचार वा दक्षिणाचारमा द्वैतभावको प्राधान्य रहने भएकाले यस आचारको अवलम्बनद्वारा गरिने कालीको पूजाउपासना अपरापूजाको कोटीमा पर्दछ। पशुभावअनुसार पश्वाचार वा दक्षिणाचारको अवलम्बन गरी उपासना गर्दै गएपछि पशुभावका बन्धनहरू शिथिल बन्दै जान्छन् । साधक सदा प्रसन्न, सन्तुष्ट, निर्द्वन्द्व, मात्सर्यरहित, कुलसम्बन्धी ज्ञानमा तत्पर, शान्त, कालीभक्त, कुलज्ञानको चर्चा गर्दा आनन्दातिरेकका कारण रोमाञ्चित हुने, हर्षले गद्गद् स्वर हुने, खुसीको आँसु खस्ने आदि लक्षणले युक्त बन्न पुग्छ। यी लक्षणहरू उत्तम कौलिकका लक्षणहरू हुन् (कुलार्णवतन्त्र, ९।८४–८६)। यी लक्षणहरूले साधक वीरभावमा आरूढ

भएको जनाउँछन् । यसपछि उक्त साधकको साधना वीरभावमा व्यवस्थित वामाचारबाट प्रारम्भ हुन्छ ।

**वामाचार**

वीरभावमा आरूढ साधकहरूले अवलम्बन गर्ने आचारलाई नै वामाचार भनिन्छ । वाम अर्थात् श्रेष्ठ आचार भएकाले यसलाई वामाचार भनिएको हो । निरुक्तमा 'वाम' शब्दको अर्थ 'प्रशस्य' भन्ने दिइएको छ– अस्रेमा, अनेमा, अनेद्यः, अनवद्यः, अनभिशस्ताः, उक्थ्यः, सुनीथः, पाकः, वामः, वयुनमिति दश प्रशस्यनामानि (वाममार्ग का यथार्थ स्वरूप, कल्याण, शक्ति उपासना अङ्क, पृ. १६७ मा उद्धृत) । प्रशस्य भनेको के हो भन्ने प्रश्नको उत्तरमा भनिएको छ– **य एव हि प्रज्ञावन्तस्त एव हि प्रशस्या भवन्ति** (पूर्ववत्) अर्थात् जो प्रज्ञावान् छन् तिनीहरू नै प्रशस्य हुन्छन् । अतः प्रज्ञावान् प्रशस्य योगीलाई नै वाम भनिन्छ र उक्त योगीको आचारलाई नै वामाचार भनिन्छ । मेरुतन्त्रमा वामाचारको अधिकारीको लक्षण बताउने प्रसङ्गमा भनिएको छ –

**परद्रव्येषु योऽन्धश्च परस्त्रीषु नपुंसकः ।**
**परापवादे यो मूकः सर्वदा विजितेन्द्रियः ॥**
**तस्यैव ब्राह्मणस्यात्र वामे स्यादधिकारिता ।** ( १०।४५)

अर्थात् जो परद्रव्य, परस्त्री एवं परापवादबाट विमुख छ त्यस्तो निर्लोभी, रागवर्जित, संयमी, जितेन्द्रिय ब्राह्मण( ब्रह्मसाक्षात्कार गर्न समर्थ) व्यक्ति नै वाममार्गमा अधिकारी हुन्छ । वेदशास्त्रको अर्थ एवं तत्त्वलाई जान्ने, बुद्धिमान्, जितेन्द्रिय, तन्त्रको गूढ रहस्य एवं भावलाई तर्कशक्तिद्वारा मन्थन गरेर उद्धार गर्न (प्रकाश गर्न) सक्षम ब्राह्मण (ब्रह्मसाक्षात्कार गर्न समर्थ) नै वाममार्गमा अधिकारी हुन्छ । त्यसबाहेक अन्य व्यक्ति यस मार्गमा दुःखभागी हुन्छ भनिएको छ –

**ब्राह्मणो वेदशास्त्रार्थतत्त्वज्ञो बुद्धिमान् वशी ।**
**गूढतन्त्रार्थभावश्च निर्मथ्योद्धरणे क्षमः ॥**
**वाममार्गेऽधिकारी स्यादितरो दुःखभाग् भवेत् ।** (पूर्ववत्, भावचूडामणिबाट उद्धृत ) वामाचारअनुसार साधना गर्नका लागि दृढ भक्ति चाहिन्छ र त्यस्तो दृढ भक्तले नै यस मार्गमा सिद्धि प्राप्त गर्दछ । तन्त्रचिन्तामणिमा भनिएको छ –

**निन्दन्तु बान्धवाः सर्वे त्यजन्तु स्त्रीसुतादयः ॥**
**जना हसन्तु मां दृष्ट्वा राजानो दण्डयन्तु वा ।**
**रोगदारिद्र्यदुःखाद्यैः पीडितोऽप्यनिशं त्वहम् ॥**

**लक्ष्मीस्तिष्ठतु वा यातु न मुञ्चामि पथं त्विदम् ।**
**एवं यस्य दृढा भक्तिः स वामे सिद्धिमाप्नुयात् ॥** (१२।१७१–१७३)

अर्थात् चाहे बन्धुबान्धवहरूले निन्दा गरून्, चाहे पत्नी तथा छोराछोरीहरूले साथ छोडून्, चाहे मलाई देखेर मानिसहरू हाँसून्, चाहे राजाहरूले दण्ड दिऊन्, चाहे म सधैँ रोग, दारिद्रच, दुःख आदिले पीडित बनूँ, चाहे धन रहोस् वा नरहोस् तर म यस मार्गलाई छोड्दिनँ भन्ने दृढ भक्ति जसमा हुन्छ त्यही व्यक्तिले वामाचारमा सिद्धि प्राप्त गर्दछ ।

उपासनामा पञ्चमकार अर्थात् मद्य, मांस, मत्स्य, मुद्रा र मैथुनको उपयोग वीराचार अर्थात् वीरहरूले अवलम्बन गर्ने वामाचार हो र यो साधकका लागि साधनाको बीज हो । वीरभावमा पनि विभाववीर र सभाववीर गरी दुई प्रकारको भेद हुन्छ । विभाववीरहरूले मानसभावले पञ्चतत्त्वले अथवा पञ्चमकारको प्रतिनिधिका रूपमा अनुकल्पीय द्रव्यको प्रयोगद्वारा उपासना गर्दछन् । मानसभावले पञ्चतत्त्वको उपयोग गर्दा मांसका रूपमा पृथ्वीतत्त्व, मत्स्यका रूपमा जलतत्त्व, मद्यका रूपमा तेजतत्त्व, मुद्राका रूपमा वायुतत्त्व र मैथुनका रूपमा आकाशतत्त्वको उपयोग गरिन्छ । विभाववीरका लागि पञ्चमकारको अनुकल्पीय द्रव्य भने यसप्रकार रहेका छन् – गाईको दूध, पान, ताम्रकूट, गाँजा, ताड, अफिम, खजूरको चोप, धतुरो र भाँङ यति आठ थोक मद्यको अनुकल्प; नुन मिलाएको अदुवा, प्याज, तिल, गहुँ, मास र लसुन मासुको अनुकल्प; डढेको खाना मत्स्यको अनुकल्प; भुटेको चना वा भटमास मुद्राको अनुकल्प र हाँसको फुल मैथुनको अनुकल्प हुन्छ । कसैको मतमा गुरुले बताएबमोजिम तन्त्रोक्त मन्त्रोच्चारण गर्दै अपराजितापुष्प र करवीरपुष्पमा रक्तचन्दन र श्रीखण्ड मिसाएर भगलिङ्गामृत बनाई परदेवतालाई तर्पण गर्नु मैथुनको अनुकल्प हो (ज.ब.रा., वि.सं. २०२१, पृ. २८६–२८७) ।

सभाववीरले चाहिँ पञ्चमकारको प्रत्यक्ष प्रयोग गर्दछन् । वामाचारमा कस्ता व्यक्तिहरूको अधिकार रहन्छ भन्ने विषयमा माथि उल्लेख गरिएको विवरणबाट यो आचार अत्यन्त कठिन र मर्यादित आचार हो भन्ने कुरा स्पष्ट भइसकेको छ । अल्पज्ञताका कारण प्राकृतजन (अदीक्षित व्यक्ति)हरूले सोचेजस्तो स्वच्छन्दरूपले पञ्चमकारको प्रयोग यस आचारमा हुँदैन । पञ्चमकारको प्रयोग वामाचारमा केवल साधनाका अवसरमा गरिन्छ । कुलार्णवतन्त्रमा भनिएको छ –

**वृथापानन्तु देवेशि सुरापानं तदुच्यते ।**
**तन्महापातकं ज्ञेयं वेदादिषु निरुपितम् ॥**

अर्थात् साधनाकालमा बाहेक अन्य समयमा गरिने मद्यपान निषिद्ध सुरापान कहिन्छ। त्यस्तो मद्यपान महापातक हो भनेर वेदादि शास्त्रमा निरूपण गरिएको छ। श्रीमद्भागवत महापुराणमा भनिएको छ –

**लोके व्यवायामिषमद्यसेवा**
**नित्यास्तु जन्तोर्न हि तत्र चोदना।**
**व्यवस्थितिस्तेषु विवाहयज्ञ–**
**सुराग्रहैरासु निवृत्तिरिष्टा॥** (११ स्कन्ध, ५ अध्याय, ११ श्लोक)

अर्थात् संसारमा के देखिन्छ भने मैथुन, मांस र मद्यका प्रति प्राणीहरूको स्वाभाविक प्रवृत्ति रहन्छ। जुन वस्तुप्रति स्वाभाविक प्रवृत्ति हुन्छ त्यसमा प्रवृत्त गराउनका लागि कुनै विधिको आवश्यकता पर्दैन। यस्तो स्थितिमा विवाह, यज्ञ र सौत्रामणि यज्ञमा मैथुन, मांस र मद्यको जुन व्यवस्था बताइएको छ त्यो वास्तवमा उच्छृङ्खल प्रवृत्तिलाई नियन्त्रण गर्नका लागि र त्यसमा मर्यादा स्थापनाका लागि नै गरिएको हो। त्यसमा निवृत्ति नै श्रुतिको अभीष्ट हो। अतः वामाचारमा पञ्चमकारको सेवनको व्यवस्था सोही उद्देश्यमा आधारित रहेको छ त्यसैले कुलार्णवतन्त्रमा भनिएको छ –

**सेवेत स्वसुखार्थं यो मद्यादीनि स पातकी।**
**प्राशयेद्देवताप्रीत्यै स्वाभिलाषविवर्जितः॥**(५।८८)

अर्थात् जसले आफ्नो सुखका लागि मद्य आदि द्रव्यको सेवन गर्दछ त्यो पातकी हो। साधकले आफ्नो तृप्तिका लागि नभई देवताको प्रीतिका लागि मद्य, मांस आदि द्रव्यको सेवन गर्नुपर्दछ। कुलार्णवतन्त्रमै अगाडि भनिएको छ –

**मादिपञ्चकमीशानि देवताप्रीतये सुधीः।**
**यथाविधि निषेवेत तृष्णया चेत् स पातकी॥**(१०।६)

अर्थात् हे पार्वती ! बुद्धिमान् व्यक्तिले देवताप्रीतिका लागि शास्त्रोक्त विधिपूर्वक पञ्चमकारको सेवन गरोस्। यदि कुनै व्यक्ति तृष्णापूर्वक पञ्चमकारको सेवनमा प्रवृत्त हुन्छ भने त्यो पातकी कहिन्छ।

यसप्रकार पशुभावबाट मुक्त वीरभावमा स्थित साधकले शास्त्रोक्त विधिपूर्वक आफ्नो तृष्णापूर्तिका लागि नभई देवताप्रीतिका लागि पञ्चमकारको सेवनद्वारा साधना गर्दै जाँदा उसमा इष्टदेव र आफूबीच ऐक्यबोध हुन जान्छ र ऊ साधनाको अन्तिम सोपानस्वरूप दिव्यभावमा प्रवेश गर्दछ। वामाचारको अवलम्बनद्वारा गरिने कालीको उपासना परापरा कोटीको पूजा वा उपासना हो।

**कुलाचार**

सम्पूर्ण भेदप्रथालाई परिहार गर्न सक्षम निर्विकल्प दशामा आरूढ साधकमा जब आफू भन्ने भावसमेत हटेर दिव्यभावको उदय हुन्छ त्यस्तो निर्विकल्प दिव्यभावमा स्थित साधकको आचारलाई नै कुलाचार भनिन्छ। दिव्यभावमा स्थित साधकमा पूर्ण ज्ञानको उदय र राजाधिराजयोगसमेत सिद्ध भइसकेको हुन्छ त्यसैले त्यस्तो साधकले अपनाउने कुलाचारमा पञ्चमकारको प्रयोग प्राकृत रूपमा नभई अर्कै किसिमले अन्तर्यागद्वारा गरिन्छ। मद्यका विषयमा कुलार्णवतन्त्रमा लेखिएको छ –

**आमूलाधारमाब्रह्मरन्ध्रं गत्वा पुनः पुनः ।**
**चिच्चन्द्रकुण्डलीशक्तिसामरस्यसुखोदयः ॥**
**व्योमपङ्कजनिस्यन्दसुधापानरतो नरः ।**
**सुधापानमिदं प्रोक्तमितरे मद्यपायिनः** ॥(५।१०७–१०८)

अर्थात् मूलाधारचक्रमा रहेकी चैतन्यरूपिणी कुण्डलिनीशक्ति त्यहाँबाट जागृत भएर ब्रह्मरन्ध्रमा अवस्थित सहस्रारचक्रमा पुगी परमशिवका साथ समरसभावमा प्राप्त हुँदा त्यहाँबाट चुहिएको अमृतपान गर्ने व्यक्ति नै वास्तविक सुधापान गर्ने व्यक्ति हो अरू त मद्यपान गर्नेहरू हुन्। मांसका बारेमा आगमसारतन्त्रमा भनिएको छ –

**कामक्रोधसुलोभमोहपशुकांश्छित्वा विवेकासिना ।**
**मांसन्निर्विषयं परात्मसुखदं खादन्ति तेषां बुधाः ॥**
**ते विज्ञानपरा धरातलसुरास्ते पुण्यवन्तो नराः ।**
**नाश्नीयात् पशुमांसमात्मविमते हिंसां परं सज्जनः** ॥(आगमसारतन्त्र, ज.ब.रा., वि.सं. २०२०, पृ. १६ मा उद्धृत) अर्थात् विवेकी विद्वान् साधकहरू काम, क्रोध, लोभ र मोहरूपी पशुलाई विवेकरूपी तरवारले काटेर परम सुख प्रदान गर्ने निर्विषयरूप मासु खान्छन्। तिनीहरू नै परम रहस्यवेत्ता, पृथ्वीका वास्तविक देवता र पुण्यवान् हुन्। सज्जन व्यक्तिले आफ्नो तृप्तिका लागि प्रत्यक्ष पशुको मासु नखाओस्, त्यस्तो हिंसा नगरोस्। मांसकै विषयमा कुलार्णवतन्त्रमा भनिएको छ –

**पुण्यापुण्यपशुं हत्वा ज्ञानखड्गेन योगवित् ।**
**परे लयं नयेच्चित्तं पलाशी स निगद्यते** ॥(५।१०९)

अर्थात् योगवित् साधकले पुण्य र पापरूपी पशुलाई ज्ञानरूपी खड्गले काटेर चित्तलाई परम तत्त्वमा लीन गरोस्। त्यसो गर्ने व्यक्ति नै मांसभोजी भनेर चिनिन्छ। मत्स्यका विषयमा कुलार्णवतन्त्रमा लेखिएको छ–

**मनसा चेन्द्रियगणं संयम्यात्मनि योजयेत् ।**
**मत्स्याशी स भवेद् देवि शेषाः स्युः प्राणिहिंसकाः** ॥(५।११०)

अर्थात् बाह्य विषयमा रमाइरहेका चञ्चल इन्द्रियसमूहलाई मनले नियन्त्रणमा लिएर बाह्य विषयवृत्तिबाट विरत सो मनलाई आत्मामा लगाउनू । यसो गर्न सक्ने साधक नै मत्स्यभोजी हो, अरू त प्राणीको हिंसा गर्ने हुन् । त्यसैगरी मुद्राका विषयमा कुलार्णवतन्त्रमा लेखिएको छ–

**अप्रबुद्धाः पशोः शक्तिः प्रबुद्धाः कौलिकस्य च ।**
**शक्तिं तां सेवयेद् यस्तु स भवेत् शक्तिसेवकः** ॥(५।१११)

अर्थात् पशुभावमा स्थित साधकको शक्ति अप्रबुद्ध(सुषुप्त) अवस्थामा रहेको हुन्छ भने दिव्यभावमा स्थित कौल साधकको शक्ति प्रबुद्ध (जाग्रत) हुन्छ । जुन साधक यस्तो प्रबुद्ध शक्तिको सेवन गर्दछ त्यो नै शक्तिसेवक हो । मैथुनका विषयमा कुलार्णवतन्त्रमा भनिएको छ–

**पराशक्त्यात्ममिथुनसंयोगानन्दनिर्भरः ।**
**य आस्ते मैथुनं तत् स्यादपरे स्त्रीनिषेवकाः** ॥(५।११२)

अर्थात् पराशक्ति र आत्माको मिथुनभावस्वरूप संयोगसुखको शाश्वत आनन्दमा निमग्न हुनु नै वास्तविक मैथुन हो । त्यसअतिरिक्त दैहिक सुखोपलब्धियुक्त मैथुन त स्त्रीसेवन मात्रै हो ।

दिव्यभावमा स्थित साधकले पालना गर्ने कुलाचार परापूजाको कोटीमा पर्दछ जुन पराशक्ति कालसङ्कर्षिणीका साथ अद्वयबोध जगाउने बाह्य एवं आन्तर विषयमा आफ्नो चिन्मय स्वरूपलाई अभिन्नरूपले देख्ने उपासनापद्धति हो ।

### कालीउपासनाको आदर्श

परम शिवको स्वातन्त्र्यशक्तिलाई नै चितिशक्ति, संवित्, कालसङ्कर्षिणी काली आदि नामले सम्बोधन गरिन्छ । सोही चितिशक्तिलाई आगमशास्त्रहरूमा महाप्रतिभाशालिनी भासा नामले निर्देश गरिएको छ । विश्वसिद्धिको कारणस्वरूप स्वातन्त्र्यशक्ति नै सृष्टि, स्थिति, संहार, अनाख्या र भासारूप पञ्चकृत्यका रूपमा निरन्तर प्रकट भइरहेको छ ।

सृष्टिव्यापार वा सृष्टिचक्रमा पञ्चसिद्धको संज्ञाप्राप्त पञ्चमहाभूत र पञ्चसिद्धको शक्तिस्वरूप पञ्चतन्मात्रा गरी दशवटा कलाहरूको स्थिति रहन्छ ।

स्थितिव्यापार वा स्थितिचक्रमा बाईसवटा कलाहरू रहन्छन् । तीमध्ये सहस्रारमा चार युगनाथ र तिनका चार पत्नीहरू रहन्छन् भने हृदयस्थ षट्कोणमा साधिकार राजपुत्र र निरधिकार राजपुत्र रहन्छन् ।

वास्तवमा बुद्धि र पाँच कर्मेन्द्रिय साधिकार राजपुत्र हुन् भने मन र पाँच ज्ञानेन्द्रिय निरधिकार राजपुत्र हुन् (कविराज, ई.सं. १९९४, पृ. १०५)। हृदयस्थ षट्कोणको केन्द्रस्थानमा कुलेश्वर र कुलेश्वरी रहन्छन्। यसप्रकार स्थितिचक्रमा बाईस कलाहरूको अवस्थिति रहेको छ।

संहारचक्रमा एघारवटा कलाहरूको स्थिति रहन्छ। तिनै एघार कलालाई प्रस्तुत कालिकाकुलपञ्चशतक नामक ग्रन्थमा एघार संहारचक्रनायिका भनिएको छ (४ पटल, ४७–५९ श्लोक)। ती एघार संहारचक्रनायिकाहरूको शक्तिमान् तत्त्वलाई यहाँ एकादशवीरको संज्ञा दिइएको छ (पूर्ववत्, ४३–४६ श्लोक)।

अनाख्याचक्रमा तेह्र कलाको स्थिति रहन्छ। तिनै तेह्र कलालाई प्रस्तुत ग्रन्थमा द्वादशकाली र ती सबैको समष्टिस्वरूप त्रयोदशकालीको संज्ञा दिइएको छ। वास्तवमा त्रयोदशकाली भन्नु नै सृष्टि, स्थिति, संहार र अनाख्याक्रमकी जननी, सबैमा अनुस्यूत विश्वमय–विश्वोत्तीर्ण भासा नै हो।

सृष्टि, स्थिति, संहार, अनाख्या र भासा नामक पाँच चक्रलाई ‘पञ्चवाह महाक्रम’ भनिन्छ। सृष्टिदेखि अनाख्यासम्म चार चक्रको पूजालाई क्रमपूजा भनिन्छ भने पाँचौँ भासाचक्रको पूजालाई अक्रम–क्रमपूजा भनिन्छ। भासा वा परम स्वतन्त्र संवित् शक्तिमा नै सबैको पर्यवसान हुने भएकाले त्यो चितिशक्ति अखण्ड अद्वैतस्वरूप हो त्यसैले त्यो क्रमोत्तीर्ण छ तर सम्पूर्ण क्रमको जननी र सबै क्रममा अनुस्यूत भएर रहने भएकाले त्यो परम स्वातन्त्र्यशक्ति वा भासा क्रम पनि हो। सोही अक्रम एवं क्रमस्वरूप चिति, संवित् वा कालसङ्कर्षिणी कालीलाई सर्वत्र सदासर्वदा अविचलरूपले अनुभव गर्नु नै स्वात्मविमर्श वा जीवन्मुक्ति हो र त्यही नै कालीउपासनाको परम आदर्श पनि हो।

# कालिकाकुलपञ्चशतक ग्रन्थको सङ्क्षिप्त सार

**प्रथम पटल**

यस पटलको प्रारम्भ भगवती कालीको मङ्गलाचरण श्लोकबाट भएको छ। कालाग्निचक्रबाट उदाएकी, करोडौं सूर्य समान तेजले युक्त भएकी, सोम, सूर्य र अग्निस्वरूप इडा, पिङ्गला र सुषुम्णा नाडीरूप त्रिपथको मध्यगह्वरमा निवास गर्ने, चित्, चेत्य, चित्त, विषय र इन्द्रियलाई आफैँमा लय गर्ने, मातृसद्भावरूपले रहेकी यस्ती संवित्स्वरूप कालीलाई सर्वप्रथम नमस्कार गरिएको छ। दोस्रो श्लोकमा पनि भगवती कालीलाई नमस्कार गरिएको छ। त्यसपछि उत्तरपीठमा अवस्थित करवीर नामक श्मशानको वर्णन गरिएको छ जुन स्वयं भगवान् शिवबाट पनि पूजित एवं महाचैतन्यस्वरूप अग्निले सन्तप्त रहेको छ। योगी एवं मातृशक्तिहरूद्वारा सेवित उक्त श्मशान महान् सिद्धिप्रदायक स्थल रहेको छ जुन घोरभन्दा पनि घोर स्वरूप भएका भैरवहरूले घेरिएको छ। उक्त करवीर नामक श्मशानमा पीठेश्वरीहरू एवं सिद्धहरूले घेरिएकी, महान् आनन्दमा एकाकार भएकी, अत्यन्त तेजले युक्त भएकी, भैरवाष्टकले युक्त भैरवी निवास गर्दछिन्। त्यस्ती भैरवीको पाउमा परेर स्तुतिपूर्वक भैरवले कालिकाकुलशास्त्रको विषयमा जिज्ञासा प्रकट गरेका छन्। जिज्ञासा प्रकट गर्ने क्रममा भैरव भन्दछन् - "हे भैरवी ! योगिनीहरूको विश्वास प्राप्त गर्ने उपायका रूपमा रहेको अत्यन्त रहस्यमय एवं योगिनीहरूको वक्त्रपरम्पराबाट प्रवाहित ज्ञानधाराको रूपमा रहेको कुलाचारका विषयमा मलाई बताउनुहोस्। त्यसैगरी दुःखत्रयबाट मुक्ति दिलाउने र पुनः संसारचक्रमा फस्नु नपर्ने त्यस्तो दिव्य ज्ञानले युक्त कुलशास्त्रका विषयमा पनि मलाई उपदेश गर्नुहोस्"। त्यसपछि भैरवी भन्दछिन् - "हे महारुद्र ! आजसम्म कसैले पनि कालिकाक्रम( कालिकाकुलशास्त्रको अर्को पर्याय) का विषयमा जिज्ञासा प्रकट गरेको थिएन। यो कालिकाक्रम सिद्धहरूका लागि पनि परम दुर्बोध्य रहेको छ। यसको यथार्थ ज्ञान देवता, गन्धर्व, किन्नर, असुर, मुनि कसैलाई पनि भएको छैन। यो कालिकाक्रम मैले परम कारणस्वरूप शिवबाट प्राप्त गरेको हुँ। परम गोपनीय यो कुलशास्त्र मैले

ब्रह्मा, विष्णु, महेश्वर आदिलाई समेत गोप्य राखेको छ। यदि तिमी यो परम दुर्लभ गुप्त ज्ञान प्राप्त गर्न चाहन्छौ भने कुलागममा दीक्षा ग्रहण गर। योगिनीहरूको वक्त्रपरम्पराबाट प्रवाहित ज्ञानधाराका रूपमा रहेको यस कौलज्ञानले पिण्डस्थैर्यरूप सिद्धि[1] प्राप्त हुन्छ जुन सिद्धि पाएपछि साधक दिव्य शरीरले युक्त हुन्छ। पिण्डस्थैर्यरूप सिद्धिले धैर्यभावको प्राप्ति भई कालिकाज्ञान प्राप्त हुन्छ त्यसैले सम्पूर्ण प्रयत्नले कौलवीर्य पदमा आरूढ बन"। भैरवीको यसै उपदेशका साथ प्रथम पटल समाप्त भएको छ।

**द्वितीय पटल**

भैरवले धैर्यभाव एवं कौलज्ञानका विषयमा जिज्ञासा प्रकट गरेपछि भैरवी धैर्यभावका विषयमा बताउँछिन्। परं शुद्ध, व्यापक, शाश्वत, अज, हानादानविनिर्मुक्त, अव्यक्त, द्वैताद्वैतविवर्जित, सर्ववाङ्मयवर्जित, शून्याशून्यतर भावलाई नै यहाँ धैर्यभावको संज्ञा दिइएको छ। अतः पिण्ड वा शरीरमा स्थिरता ल्याउने वा आफूमा धैर्यभावको विकास गर्ने कुरामा यहाँ विशेष जोड दिइएको छ। भैरवले स्वरूपविज्ञानका विषयमा बताउन भैरवीलाई आग्रह गरेपछि भैरवी कौलज्ञानको सारभूत रहस्य बताउने प्रतिज्ञा गर्दछिन्। यो समग्र चराचर जगत् शून्य, निरालम्ब, निराधार, सनातन ब्रह्म वा परम शिवले ओतप्रोत छ। समग्र चराचर जगत् जसबाट प्रकट हुन्छ र जसमा नै पुनः लीन हुन्छ त्यही परम शिवको क्रियाशक्तिरूप अपरा शक्ति नै क्रमपद्धति हो त्यसैले कौलज्ञान वाणीको विषय हुन सक्दैन। योगिनीवक्त्रगम्य कौलज्ञान अकथ्य एवं अप्रमेय रहेको छ। परम शिवको स्वातन्त्र्यशक्ति नै जगत्का रूपमा आभासित हुन्छ। सूर्यको रश्मि सूर्यदेखि अभिन्न भए तापनि तथा अग्निको ज्वाला अग्निदेखि अभिन्न भए तापनि सूर्यको रश्मि वा अग्निको ज्वाला भनेर भिन्नवत् व्यवहार गरेझैँ परम शिवको स्वातन्त्र्यशक्ति शिवदेखि अभिन्न छ तर सोही स्वातन्त्र्यशक्ति नै स्वेच्छावश बाह्य जगत्का रूपमा उल्लसित हुन्छ र भेदका रूपमा अवभासित हुन्छ। अन्धकारस्वरूप रात्रिशक्ति र प्रकाशस्वरूप दिवाकरी शक्ति क्रमशः सृष्टि र संहारको रूपले रहेको छ। सृष्टिरूप सोम र संहाररूप सूर्यधामको मध्यमा वह्निरूप कुलपिण्डको अवस्थिति रहेको छ। त्यही कुलपिण्ड नै कौण्डलिनी परा कला हो। सो कुण्डलिनीशक्तिको

---

१ पिण्डस्थैर्यसिद्धिको उल्लेख तन्त्रालोकको विवेकव्याख्या (२९।१२७)मा गरिएको छ। तन्त्रालोकमाथि परमहंस मिश्रकृत नीरक्षीरविवेक हिन्दी टीकामा शरीरलाई वज्रवत् सुरक्षित राख्ने वा बलियो बनाउने उपायभूत सिद्धिका रूपमा उक्त सिद्धिलाई परिभाषित गरिएको छ।

माझमा सृष्टि, स्थिति र संहाररूप कृत्य सम्पन्न गर्ने, समग्र तत्त्वलाई आफूमा लीन गर्ने परम शक्ति रहेको छ। सोही परम शक्तिलाई कुलशास्त्रमा कुल भनिन्छ। कुलको उत्पत्तिस्थान निराधार, शून्याशून्यतर भाव एवं अभावले रहित रहेको छ। यो परम रहस्यमय कुल सम्पूर्ण शास्त्रहरूको सारका रूपमा रहेको छ। जसरी फूलमा गन्ध, तिलमा तेल सारभूत तत्त्वका रूपमा रहन्छ त्यसरी नै कुल सम्पूर्ण शास्त्रहरूको सारका रूपमा रहन्छ। यो कुलात्मक महाज्ञान स्वानुभूतिगम्य विषय हो। यो परम दुर्लभ ज्ञान जो पुण्यकर्मा छन् उनीहरूले नै प्राप्त गर्न सक्तछन्। संसारप्रति जसको वासना सम्पूर्णतया गलित भएको छ त्यस्तो साधकले नै कौलज्ञानलाई बुझ्दछ। साक्षात् शिव वा भैरवीको अनुग्रह नभएसम्म कौलज्ञानको प्राप्ति सम्भव छैन त्यसैले कुलशक्तिको आश्रय ग्रहण गर भनी भैरवीले भैरवलाई उपदेश दिएकी छिन्। त्यसपछि भैरवले कुलशास्त्रको गुरुपरम्परा, सृष्टि आदि चार वटा क्रम, मन्त्रोद्धार, पूजाक्रम आदि विषयमाथि प्रकाश पार्न भैरवीलाई आग्रह गरेका छन् र भैरवीले सृष्टि, स्थिति, संहाररूप तीनवटा क्रमको बीजरूप अनाख्याक्रम वा कालिकाक्रमको विषयमा सङ्क्षेपमा प्रकाश पारेकी छिन्। त्यसपछि सृष्टिक्रममा पूजित कौलिकी शक्तिको स्थूल एवं सूक्ष्म पूजाक्रम, संहारवर्णन्यास, पूजाद्रव्य, गुरुपङ्क्ति तथा योगिनीपूजाको सङ्केत गर्दै दोस्रो पटल समाप्त भएको छ।

**तृतीय पटल**

तृतीय पटलको प्रारम्भमा सत्य आदि युगक्रमले अवतीर्ण चार जना सिद्धहरू एवं सिद्धपत्नीहरूको वर्णन गरिएको छ। जसअनुसार सत्ययुगमा खगेन्द्रनाथ तथा उनकी पत्नी विज्ञाम्बा, त्रेतायुगमा कूर्मनाथ तथा उनकी पत्नी मङ्गलाम्बा, द्वापरयुगमा मेषनाथ तथा उनकी पत्नी काममङ्गला र कलियुगमा मत्स्येन्द्रनाथ र उनकी पत्नी कोङ्कणाम्बा अवतीर्ण भएको जानकारी प्राप्त हुन्छ। त्यसपछि कलियुगमा अवतीर्ण मत्स्येन्द्रनाथका बाह्र जना पुत्रहरूको उल्लेख गरिएको छ। जसअनुसार भट्ट, महेन्द्र, वल्कल, अहीन्द्र, गजेन्द्र र महीधर निरधिकार (ऊर्ध्वरेता) वर्गमा पर्दछन् भने अमर, वरदेव, चित्र, अलि, विन्ध्य र गुडिकनाथ साधिकार वर्गमा पर्दछन्। त्यसपछि निष्क्रियानन्दनाथ आदि चार जना सिद्ध एवं तिनका पत्नीहरूको उल्लेख गरिएको छ। जसअनुसार निष्क्रियानन्दनाथ एवं उनकी पत्नी ज्ञानदीप्ति, विद्यानन्द एवं उनकी पत्नी रक्ता, शक्त्यानन्द एवं उनकी पत्नी महानन्दा र शिवानन्द एवं उनकी पत्नी

समया पर्दछन् । त्यसपछि विश्वयोनि आदि गुरुपञ्चक तथा रेतयोनि आदि तिनका शक्तिहरूको उल्लेख गरिएको छ। जसअनुसार विश्वयोनि, जगद्योनि, भावयोनि, प्रजापतियोनि र कुलयोनि गुरुपञ्चकमा पर्दछन् भने तिनका पञ्चशक्तिमा रेतयोनि, बीजयोनि, सर्गयोनि, सृष्टियोनि र क्षोभयोनि पर्दछन् । त्यसपछि वटुक, गणेश, कुलेश्वर, कुलेश्वरी आदिको पूजाक्रमको वर्णन गर्दै सङ्कर्षिणी महाविद्या (मातृसद्भाव मन्त्र)को उद्धार गरिएको छ। उक्त महाविद्याको माहात्म्य कथन, सृष्टिक्रमले पूजित कालीको ध्यान र पूजाक्रमको वर्णन गर्दै उक्त सृष्टिक्रम अत्यन्त गोपनीय रहेको मन्तव्यका साथ तृतीय पटल समाप्त भएको छ।

**चतुर्थ पटल**

चतुर्थ पटलको प्रारम्भमा अवतारक्रमको निरूपण गर्ने प्रतिज्ञा गरिएको छ। त्यसपछि सृष्टि, अवतार (स्थिति) र संहार तत्त्वको निरूपण गरिएको छ। त्यस क्रममा एउटै परम तत्त्व बाह्र भेदले जगत्मा व्याप्त रहेको बताउँदै पञ्चमहाभूत, पञ्चज्ञानेन्द्रिय, मन र बुद्धि तत्त्वलाई द्वादश सिद्ध एवं पञ्चतन्मात्रा, पञ्चकर्मेन्द्रिय, अहङ्कार र प्रकृतिलाई सिद्धपत्नीका रूपमा उल्लेख गरिएको छ। यिनै चौबीस तत्त्वका रूपमा एउटै पराशक्तिको विस्तारलाई नै यहाँ अवतारको संज्ञा दिइएको छ। त्यसपछि सप्तदशाक्षरी कुलविद्याको उद्धार गर्दै उक्त विद्याको माहात्म्य र गोपनीयताको उल्लेख गरिएको छ। त्यसपछि संहारक्रमको निरूपण गर्ने प्रतिज्ञा गर्दै संहाररूप वीरेश्वरीको स्वरूपमाथि प्रकाश पारिएको छ। त्यसपछि एकादश वीर एवं एकादश चक्रनायिकाको उल्लेख गरिएको छ। त्यसपछि त्र्यक्षरी एवं एकादशाक्षरी संहारभैरवीविद्याको उद्धार गर्दै संहारभैरवीको पूजन एवं संहारक्रमको गोपनीयताको उल्लेख गरी चतुर्थ पटल समाप्त भएको छ।

**पञ्चम पटल**

यस पटलको प्रारम्भमा अनाख्याक्रमको निरूपण गर्ने प्रतिज्ञा गर्दै ब्रह्मस्वरूपिणी महाकालीको स्वरूपको चर्चा गरिएको छ। त्यसैगरी परमार्कस्वरूपिणी महाकालीको बाह्रवटा भेदको निरूपण गरिएको छ। ती बाह्रवटा भेद यसप्रकार छन् - सृष्टिकाली, स्थितिकाली, संहारकाली, रक्तकाली, सुकाली, यमकाली, मृत्युकाली, भद्रकाली, परमार्ककाली, मार्तण्डीकाली, कालाग्निरुद्रकाली र कालकाली। यसबाहेक माथि वर्णित सम्पूर्ण स्वरूपलाई आफैंभित्र लय गर्ने भगवती महाकालीको मूलस्वरूप

महाभैरवचण्डोग्रघोरकालीको पनि वर्णन गरिएको छ। तिनै कालसङ्कर्षिणी महाकालीको पूजाक्रम र सप्तदशाक्षरी महाविद्याको उद्धार गर्दै द्वादशकालीको मन्त्रोद्धार एवं तिनको पूजाक्रमको वर्णन यस पटलमा गरिएको छ।

**षष्ठ पटल**

यस पटलको प्रारम्भमा भैरवले भैरवीलाई समयपूरणीविद्याको उद्धार गर्न तथा कुलाचारको विषयमा बताउन र क्षेत्रपालको मन्त्र बताउन आग्रह गरेका छन्। भैरवको आग्रहबमोजिम भैरवीले कुलाचारको उपदेश गर्नुका साथै उक्त आचारको माहात्म्यमाथि प्रकाश पार्दै उक्त आचारलाई अत्यन्त गोप्य राख्न निर्देशन दिएकी छिन्। त्यसपछि समयपूरणीविद्याको उद्धार गरी त्यसको माहात्म्य बताएपछि क्षेत्रपालको मन्त्रको पनि उद्धार गरिएको छ र उक्त मन्त्रको माहात्म्यमाथि प्रकाश पारिएको छ।

**सप्तम पटल**

प्रस्तुत ग्रन्थको अन्तिम पटलका रूपमा रहेको यस सप्तम पटलको प्रारम्भमा भैरवले भैरवीलाई समग्र कालिकाकुलशास्त्रको सारभूत विषय बताउन आग्रह गरेका छन्। भैरवको आग्रहबमोजिम भैरवीले कुलज्ञानको सार बताउने प्रतिज्ञा गर्दै सर्वप्रथम परम कारणस्वरूप शिवको स्वरूपमाथि प्रकाश पारेकी छिन्। त्यसपछि परम कारणस्वरूप शिवकी समवायिनी कालिकाशक्तिको स्वरूपमाथि प्रकाश पारिएको छ। त्यसपछि अवतारक्रम अर्थात् स्थितिक्रमको सारमाथि प्रकाश पार्दै कालिकाक्रमको रहस्य एवं त्यसको गोपनीयताको वर्णन गरिएको छ। अन्त्यमा यस कालिकाकुल वा कालिकाक्रमशास्त्रको माहात्म्यमाथि प्रकाश पार्दै सप्तम पटलको समाप्तिका साथ यस ग्रन्थको समापन भएको छ।

**ग्रन्थको अनुवादका सम्बन्धमा**

प्रस्तुत कालिकाकुलपञ्चशतक नामक ग्रन्थलाई नेपाली भाषामा अनुवाद गरी यहाँ प्रकाशमा ल्याइएको छ। अनुवादका क्रममा ग्रन्थको भाव यथारूप झल्कियोस् भन्ने उद्देश्यले भावानुवादमा जोड दिइएको छ र अनुवादका क्रममा आएका तथा ग्रन्थमा रहेका विशिष्ट पारिभाषिक शब्दहरूलाई परिशिष्टमा स्थान दिई तिनको अर्थ र आशय स्पष्ट गर्ने प्रयत्न गरिएको छ। ग्रन्थमा मन्त्र, विद्या र न्यासको उद्धार गर्ने सन्दर्भमा आएका तिनीहरूको प्रतीक वर्णलाई अनुवाद नगरी केवल अमुक मन्त्र,

विद्या र न्यासको सङ्केत दिइएको छ। ग्रन्थमा उद्धार गरिएका मन्त्र, विद्या र न्यासको वास्तविक स्वरूप र रहस्य गुरुमुखबाट मात्र जान्न सकिने तथा अदीक्षित व्यक्तिहरूका अगाडि तिनीहरूलाई प्रकाश गर्नु शास्त्रविरुद्ध हुने भएकाले त्यसो गरिएको हो।

११. **उपसंहार**

यसप्रकार प्रस्तुत **कालिकाकुलपञ्चशतक** नामक ग्रन्थमा कालिकाकुल परम्पराकी मुख्य आराध्या भगवती कालसङ्कर्षिणीको सृष्टि, अवतार(स्थिति), संहार र अनाख्याक्रमको वर्णन गरिएको छ। प्रस्तुत ग्रन्थमा कुलमतले अवलम्बन गरेको सर्वं सर्वात्मकम् अर्थात् संसारका सबै नामरूपात्मक पदार्थ पूर्ण छन् भन्ने वैश्विक दृष्टिकोण वा शाम्भवज्ञानको सापेक्षमा भगवती कालसङ्कर्षिणी कालीको उपासनाक्रमको निरूपण गरिएको छ।

# प्रथमः पटलः
## (भावानुवादसहित)

**ॐ नमः श्रीमङ्गलायै**[1] **॥**
**यां**[2] **सान्तकाग्निकुहरोत्थितभास्वरूपाम्**[3] **।**
[4]**सोमार्कवह्नित्रिपथोदरमध्यसंस्थाम्**[5] **॥**
**चिच्चेत्यचित्तविषयाक्षविलीन**[6] **भावाम् ।**
**सद्भावभावविकलां**[7] **प्रणमामि**[8] **कालीम् ॥ १ ॥**
**स्वकलान्तःसुखाशक्तां कालान्तःकलनी**[9] **कलाम् ।**
**खकलां कमलारूढां नौमि श्रीकालिसंज्ञिताम् ॥२॥**

ॐ मङ्गलालाई नमस्कार छ। प्रलय वा संहारस्वरूप अग्निकुण्डबाट उठेको ज्योतिस्वरूप भएकी; सोम, सूर्य र अग्निस्वरूप इडा, पिङ्गला र सुषुम्णा नामक नाडीरूप मार्गको माझमा रहेकी; चित् (चेतना), चेत्य (चेतनाद्वारा ग्राहय विषय), चित्त (चेतनाको सङ्कुचित रूप) विषय र अक्ष (इन्द्रिगण) लाई आफूमा विलय गराउने स्वभाव भएकी; राम्रो वा नराम्रो कुनै पनि भावरूप कलाले रहित भएकी भगवती कालसङ्कर्षिणीलाई नमस्कार गर्दछु। आफ्नो कलास्वरूप भित्री सुखमा आशक्त रहेकी, काललाई आफूभित्र समाहित गर्ने कलाले युक्त भएकी अर्थात् कालसङ्कर्षिणी स्वरूप भएकी, आकाशस्वरूप भएकी अर्थात् साकार रूपमा अवभासित नहुने तर अस्तित्ववान् स्वरूप भएकी, ज्ञानशक्तिस्वरूप कमलमा आरूढ भएकी

---

१ 'ॐ नमः श्रीम' पाठ टुटेको–क ।
२ यां]संशोधित पाठ ; या– क,ख,ग ।
३ ..स्वरूपां] संशोधित पाठ ; स्वरूपा– क ; ..त्थितभास्वरूपा पाठ टुटेको– ख ; स्वरूपो– ग ।
४ सोमार्क पाठ टुटेको– ख ।
५ संस्था– क,ख ।
६ विलीन पाठ टुटेको– ख ।
७ सद्भावभावविकलां]संशोधित पाठ ; किकलां पाठ टुटेको– क ; स्वाभावभावकिकलां– ग ।
८ प्रण पाठ टुटेको– क ।
९ कलना– ख,ग ।

अर्थात् ज्ञानशक्तिकी अधिष्ठातृ भगवती श्रीकालीलाई नमस्कार गर्दछु ॥ १–२ ॥

**श्रीमदुत्तरपीठस्य श्मशानं[1] करवीरकम्[2] ।**
**पूजितं देवदेवेन शिवेन परमात्मना[3] ॥ ३ ॥**
**महाचित्यग्निसन्तप्तं महायोगिनिषेवितम् ।**
**महाभूतसमाकीर्णं महामातृभिः सेवितम् ॥ ४ ॥**
**[4]महायोगैश्च निचितं महासिद्धैर्नमस्कृतम् ।**
**महामटकसञ्जुष्टं महाफेत्कारनादितम् ॥ ५ ॥**
**महासिद्धिप्रदातारं महाभैरवसङ्कुलम् ।**
**महाघोरातिघोरोग्रं[5] महातेजोपबृंहितम् ॥ ६ ॥**

उत्तरपीठमा परमात्मा देवाधिदेव शिवद्वारा पूजित करवीर नामक श्मशान रहेको छ। उक्त श्मशान महाचैतन्यस्वरूप अग्निले सन्तप्त बनेको छ। सो श्मशान ठूलाठूला योगीहरू एवं मातृशक्तिहरूद्वारा सेवित छ। महान् योगबलद्वारा पुग्न सकिने उक्त श्मशान भूतप्रेत एवं महाभैरवहरूद्वारा घेरिएको छ र भयानक हाँसोको आवाजले भरिएको छ। महान् सिद्धिहरू प्रदान गर्ने सो करवीरश्मशान अत्यन्त डरलाग्दो तथा महान् तेजले युक्त छ ॥ ३–६ ॥

**तत्रस्था भैरवी भीमा स्थूलसूक्ष्मानुवर्तिनी ।**
**पीठेश्वरीभिः संयुक्ता सिद्धैश्च परिवारिता ॥ ७ ॥**
**महानन्दसमाविष्टा महाघोरोग्रनाशनी[6] ।**
**अतितेजःसुबृंहन्ती[7] ह्यतिशान्ता पराशिवा ॥ ८ ॥**

उक्त करवीर नामक श्मशानमा महान् आनन्दमा समाविष्ट भएकी, जसको दर्शनले भयङ्कर डर पनि शमन हुन्छ त्यस्तो अत्यन्त डरलाग्दो स्वरूप भएकी, अत्यन्त ठूलो तेजलाई धारण गर्ने तथा स्थूल एवं सूक्ष्म स्वरूप धारण गर्ने भएकी, पीठनायिकाहरूले सहित भएकी, सिद्धहरूद्वारा चारैतिरबाट घेरिएकी, शान्त स्वभाव भएका भक्तका दृष्टिमा अत्यन्त शान्त स्वरूप भएकी, परमकल्याणरूपिणी भैरवी निवास गर्दछिन् ॥ ७-८ ॥

---

१ नं अक्षर टुटेको– क।
२ करवी पाठ टुटेको– क।
३ परमात्मने– ख, ग।
४ महां– ग।
५ घोरोग्रं– ग।
६ नशिनी– ग।
७ जःसुबृं पाठ टुटेको– ख।

**अष्टाभिरष्टकैर्युक्ता भैरवाष्टकसंयुता ।**
**पादौ जग्राह देव्यास्तु भैरवो भैरवेश्वरः**[1] **॥ ९ ॥**
**प्रणम्य**[2] **शिरसा देवीं स्तुतिपूर्व वचोऽब्रवीत् ।**
**नमः शून्यातिशून्यस्थे नमश्चिदचिदुज्झिते ॥ १० ॥**
[3]**नमो विज्ञानविभवे नमः संहारकारिणि ।**
**नमो विश्वेशविभवे नमः** [4]**संसारतारिणि ॥ ११ ॥**
**नमो निराश्रयान्तस्थे नमः कालान्तकारिणि ।**
**नमः कुलेशि कौलेशि कौलिकानन्ददायिनि ॥ १२ ॥**
**अकुले कुलरूपस्थे रूपातीते नमोऽस्तु ते ।**
**एवं स्तुतिपदं कृत्वा भूयः स वाक्यमब्रवीत् ॥ १३ ॥**

चतुःषष्टियोगिनी तथा अष्टभैरवहरूले सहित भएकी त्यस्ती महाभैरवीलाई शिर झुकाएर प्रणाम गरी उनको चरणकमल समातेर भैरवले स्तुतिपूर्वक भने- "महाशून्यमा रहेकी, चेतन तथा जड दुवै पदले रहित भएकी, विशिष्ट ज्ञानस्वरूप ऐश्वर्यले सम्पन्न भएकी, संहारस्वरूप भएकी, सम्पूर्ण चराचर जगत्को नियन्ता वा मालिम्नीको रूपमा रहेकी, संसाररूप दुःखमा अल्झेकाहरूलाई उक्त दुःखबाट तार्ने, अनाश्रित पदको मध्यमा रहेकी, काललाई पनि अन्त्य गर्ने स्वभाव भएकी, कुलस्वरूप मूलधारचक्रकी अधिष्ठातृ, कौलज्ञानकी अधिष्ठातृ, कौलिक आनन्द प्रदान गर्ने, अकुल तथा कुलरूपमा रहेकी, रूपातीत स्वरूप भएकी हे देवी ! तपाईलाई नमस्कार गर्दछु" । यस्तो किसिमले भैरवीको स्तुति गरेपछि भैरवले पुनः भैरवीलाई कालिकाकुलाम्नायको उपदेश गर्न अनुरोध गरे ॥ ९-१३ ॥

**॥ श्रीभैरव उवाच ॥**
**देवि देवि महादेवि संसारभयनाशनि**[5] **।**
**श्रुतानि सर्वशास्त्राणि त्वया निगदितानि च ॥ १४ ॥**
**कुलाचारविधानं तु कौलाचारमनेकशः**[6] **।**
**योगिनीनां च विश्वासं निर्विकल्पं मया श्रुतम् ॥ १५ ॥**
**शान्तं घोरं तथा गूढं शाम्भवं शाक्तमाणवम् ।**
**निरन्तरं महादेवि प्रकटीकुरु भैरवि ॥ १६ ॥**

---

१ भैरवो भैरवेश्वरः पाठ टुटेको– ख ।
२ प्रणम्य पाठ टुटेको– ख ।
३ नमो विज्ञानवि पाठ टुटेको– ख ।
४ संसार पाठ टुटेको– ख ; संसा यी दुई वर्णको स्थान खाली राखिएको– ग ।
५ नाशनी– ग ।
६ कौला पाठ टुटेको– क ।

यत्र छद्मविश्वासं[1] यत्र गर्भं न विद्यते ।
विश्वासो लभ्यते येन तदुपायं वदस्व मे ॥ १७ ॥
मुखागमविधानेन वक्त्राद् वक्त्रक्रमेण तु ।
गुप्ताचारेण भावेन ह्यतिगुप्ततरेण[2] च ॥ १८ ॥
आदरात् कथय त्वं मे शास्त्रोपायेषु वर्जितम् ।
मुखकौलं मुखावस्थं चाराचारविवर्जितम् ॥ १९ ॥
यद् गुह्यं सर्वगुह्यानां यद् गुह्यं खेचरीकुले ।[3]
येन प्राप्तेन सहसा पुमान् सङ्कल्पवर्जितः ॥ २० ॥
प्राप्नोति सिद्धयो दिव्या[4] मध्यमोत्तमवर्जिताः[5] ।
अशोच्यो येन संसारे भवेत् त्रिदशपूजिते[6] ॥ २१ ॥
न[7] भूयो याति[8] गहने दुःखत्रयसमाकुले ।
येन च स्मृतमात्रेण सिद्धिर्भवति चोत्तमा ॥ २२ ॥
यत्र सा संस्थिता काली मृत्युकालान्तःपातिनी[9] ।
या पूज्या सर्वपीठेषु यस्यां सर्वं लयं ययौ ॥ २३ ॥
तां ममाख्याहि तत्त्वेन भवभङ्गनिसूदनि ।
कुलं तु कीदृशं ब्रूहि कस्मिन् स्थाने व्यवस्थितम् ॥ २४ ॥
तस्यावतारकान् देवि[10] युगादिप्रविभागशः ।
आगता सा कथं सृष्टिरवतारस्तु कीदृशः ॥ २५ ॥
[11]संहारस्तु तथा देवि क्रमेण कथयस्व मे ।
चतुर्धा कालिकाम्नायं मुखान्मुखगतं प्रिये ॥ २६ ॥
एतत् सर्वमशेषेण वद मेऽनुग्रहो यदि ।
यदद्यापि न विज्ञातं खेचरीभिः कदाचन ॥ २७ ॥
येन विज्ञातमात्रेण व्रजामि पदमव्ययम् ।

---

१ ंयत्र छद्मवशिवासं]संशोधित पाठ ; यत्र छद्म पाठ टुटेको– क ; यत्रच्छद्म पाठ– ख,ग ।
२ ह्यति पाठ टुटेको–क ; तरेण पाठ टुटेको–ख ।
३ ..द्गुह्यं सर्वगुह्यानां यद्गुह्यं पाठ टुटेको– ख ।
४ देव्या– क ; दिव्यो– ग ।
५ सिद्धयो दिव्या मध्यमोत्तम पाठ टुटेको– ख ।
६ ते अक्षर टुटेको–ख ।
७ न अक्षर टुटेको–ख ।
८ यान्ति–ग ।
९ मृत्युकालान्तपातिनी–क ; मृत्युकाकालान्तःपातिनी–ग ।
१० तस्यावतारकां देवि–क ।
११ संसार–क ।

**संसारभयभीतस्य त्राता नान्योऽस्ति भैरवि ॥ २८ ॥**
**त्वदृते संशयस्यास्य नान्यो[1] वै मोक्षणक्षमः ॥ २९ ॥**

श्रीभैरवले भने–

संसाररूपी भयलाई नाश गर्ने हे देवी ! हे महादेवी ! तपाइँले उपदेश गर्नु भएको सम्पूर्ण शास्त्रहरू मैले सुनें । कुलाचारको विधान तथा कौलाचार तपाइँबाट मैले अनेकपटक सुनेको छु । हे महादेवी ! योगिनीहरूको विश्वासस्वरूप निर्विकल्प, शान्त, घोर, गूढ, शाम्भव, शाक्त तथा आणव विषयक ज्ञान मलाई निरन्तर प्रकट गर्नुहोस् जहाँ छद्म, अविश्वास, गोप्य भन्ने चिज रहँदैन, जसबाट योगिनीहरूको विश्वास प्राप्त हुन्छ त्यो उपाय मलाई बताउनुहोस् । गुरुशिष्यक्रमले मौखिक उपदेशका माध्यमबाट गुप्तभन्दा पनि अति गुप्त रहस्याचार वा रहस्यक्रमले लोकमा प्रवाहित भएको एवं स्वानुभूतिगम्य संवित् शक्तिलाई साक्षात्कार गराउने यो कौलज्ञानको परम्परा शास्त्रीय उपायहरूबाट वर्जित छ एवं चार तथा आचारले रहित छ । मुख्यरूपले रहेको तथा मुखपरम्पराबाट जीवित यो कौलज्ञानपरम्परा मलाई बताउनुहोस् । संसाररूप कष्टलाई भङ्ग गर्ने एवं देवताहरूद्वारा पूजित हे देवी ! जुन सम्पूर्ण रहस्यहरूको पनि रहस्य हो, जुन खेचरीकुलमा समेत रहस्यका रूपमा रहेको छ, अति रहस्यमय जुन ज्ञान प्राप्त गर्नाले सङ्कल्पविना नै व्यक्तिले अधम, मध्यम तथा उत्तम भेदले रहित दिव्य सिद्धिहरू अनायास नै प्राप्त गर्दछ, जसको प्राप्तिले व्यक्ति संसारमा शोकरहित बन्छ, आधिभौतिक, आधिदैविक र आध्यात्मिक तीन प्रकारका दुःखले भरिएको यस संसारमा फेरि आउनु पर्दैन, जसको सम्झना मात्रले पनि उत्तम सिद्धि प्राप्त हुन्छ, जहाँ मृत्युरूप काललाई आफैँभित्र लवलीन गर्ने, सबै पीठहरूमा पूज्य, प्रलयकालमा सम्पूर्ण चराचर जगत् आफूभित्रै लीन गर्ने भगवती कालसङ्कर्षिणी रहेकी छिन् ती कालीका विषयमा मलाई बताउनुहोस् । त्यसैगरी हे देवी ! यदि मप्रति अनुग्रह गर्नु हुन्छ भने कुल कस्तो रहेको छ ? उक्त कुल कहाँ व्यवस्थित छ ? सत्य, त्रेता आदि युगविभागका क्रमले कुलका अवतारकहरू को को हुन् ? भगवती कालीको प्रादुर्भाव कसरी भयो ? मुखपरम्पराबाट प्राप्त सृष्टि, अवतार(स्थिति), संहार र अनाख्यारूप चार प्रकारको कालिकाम्नाय वा कालिकाकुलक्रमका विषयमा समग्ररूपले मलाई बताउनुहोस् । संसाररूप भयबाट त्रस्त व्यक्तिको रक्षा गर्ने तथा त्यस्तो व्यक्तिको संशयलाई निवारण गर्न सक्ने तपाइंबाहेक अरू कोही पनि छैन त्यसैले हे भैरवी ! खेचरीगणले पनि अहिलेसम्म नपाएको त्यो ज्ञान जुन ज्ञान प्राप्त गर्नाले म अव्ययपदमा

---

१ नान्या–ग ।

पुग्छु, कालिकाम्नाय विषयक त्यस्तो ज्ञान मलाई समग्ररूपले बताउनुहोस् ॥ १४-२९ ॥

**श्रीभैरव्युवाच ॥**

**कष्टं कष्टं महारुद्र प्रश्ने प्रश्नेषु चोत्तमम्[१] ।**
**अतिघोरातिघोरं तु प्रश्नमुक्तं त्वया हर ॥ ३० ॥**
**त्वदृतेऽनुग्रहं कस्य बुद्धिकौशल्यभाविता[२] ॥**
**न केनचिदहं[३] रुद्र पृष्टश्च कालिकाक्रमम् ॥ ३१ ॥**
**दुर्बोधं सर्वसिद्धानां व्योमेशीनां महेश्वर ।**
**तत् क्रमेण प्रवक्ष्यामि मुखपारम्परागतम्[४] ॥ ३२ ॥**
**यन्न देवैर्नगन्धर्वैर्नासुरैर्मुनिभिस्तथा ।**
**न खेचरीभिः सिद्धैश्च[५] न ज्ञातं परमार्थतः ॥ ३३ ॥**
**अदृष्टविग्रहाच्छान्ताच्छिवात्[६] परमकारणात् ।**
**अशरीरादिदं वाक्यं श्रुतं मे कालिकाक्रमम् ॥ ३४ ॥**
**तदहं कथयिष्यामि अकथ्यं परमेश्वर ।**
**या सा व्योमेश्वरी घोरा कौलमार्गावलम्बिनी[७] ॥ ३५ ॥**
**शिवमार्गे स्थिता सा तु[८] तालुमार्गार्द्धलाञ्छिता[९] ।**
**नासादेहे प्रविष्टा सा मध्यहृच्चक्रवर्तिनी ॥ ३६ ॥**
**तया च श्रूयते शब्दं स्फोटं कृत्वा अनाहतम् ।**
**विदार्य कर्णौ तत्रस्थं श्रुतिमार्गमुखावहम्[१०] ॥ ३७ ॥**
**श्रुत्वा रसातलं याता यत्र हाटक ईश्वरः ।**
**तत्र चक्रे प्रविष्टाहं कौलज्ञानमनुत्तमम् ॥ ३८ ॥**
**तद् वक्त्राद् देवदेवस्य कुलकौलं[११] विनिर्गतम् ।**
**अशेषक्रमसद्भावं कालिकाख्यं चतुर्विधम् ॥ ३९ ॥**

---

१ चोत्तमम्]संशोधित पाठ ; चोत्तमं–क,ख ; चोत्तमः–ग ।
२ भावता–ख,ग ।
३ केनचिदहं]संशोधित पाठ ; केचिदहं–क ; ह अक्षर टुटेको–ख ; ह अक्षरको ठाउँ खाली राखिएको–ग ।
४ पारंपारागतं–ख ।
५ खेचरीभिस्सिद्धैश्च–ख ।
६ च्छान्ता पाठ टुटेको–क ।
७ ..लमा पाठ टुटेको–क ।
८ सान्त–ग ।
९ लांच्छिता–ग ।
१० सुखावहं–क,ग ।
११ कुलकौलाद्–क ।

**मुखान्मुखं सञ्चरन्तं वामेशीनां महेश्वर ।**
**तदकथ्यं महादेव ज्ञातं मे निखिलं हर ॥ ४० ॥**

श्रीभैरवीले भनिन्–

हे महारुद्र ! हे हर ! तिमीले प्रश्नहरूमा साह्रै उत्तम तर कठिनभन्दा पनि कठिन, घोरभन्दा पनि घोर प्रश्न सोध्यौ । हे रुद्र ! तिमीबाहेक म अरू कसलाई अनुग्रह गरूँ र ? तिमीबाहेक अरू कसमा यस्तो बुद्धिकौशल्यभाविता छ र ? तिमीबाहेक अरू कसैले पनि मलाई कालिकाक्रमका विषयमा सोधेको छैन । हे महेश्वर ! सिद्धहरूका लागि पनि दुर्बोध, व्योमेशीहरूको मुखपरम्पराबाट आएको यो ज्ञान त्यही क्रमले म तिमीलाई बताउँछु । देवता, गन्धर्व, असुर, मुनि, खेचरीगण तथा सिद्धहरूले पनि पारमार्थिक रूपले नजानेको यो कालिकाक्रमरूप ज्ञान दृष्टविग्रह नभएका अर्थात् मन्त्ररूप शरीर भएका, शान्त, परम कारणस्वरूप अशरीरी शिवबाट मैले सुनेको (पाएको) हुँ । अदीक्षित वा अनधिकारी व्यक्तिहरूलाई भन्न नहुने त्यही कालिकाक्रम म तिमीलाई बताउँनेछु । भयानक स्वरूप भएकी तथा कौलमार्गलाई अवलम्बन गर्ने व्योमेश्वरी जो शिवमार्गमा रहेकी छिन् तथा तालुमार्गमा अर्धलाञ्छित छिन् तिनै व्योमरूप चितिशक्ति प्राणरूपमा देहमा प्रविष्ट भएकी तथा हृदयचक्रको माझमा रहेकी छिन् । तिनै कुण्डलिनीरूप शक्तिका माध्यमबाट स्फोट हुँदा अनाहत नाद सुनिन्छ । सो अनाहत नाद सुनेर म पातालाधिपति हाटकेश्वर भएको ठाउँमा गएँ र चक्रमा प्रवेश गरेँ । तिनै हाटकेश्वरको मुखबाट निस्किएको, वामेशीहरूको मुखपरम्पराबाट प्रवाहित हुने, सृष्टि, स्थिति (अवतार), संहार र अनाख्यारूप क्रमचतुष्टयले युक्त अकथ्य, अप्रकाश्य वा गोपनीय कालिकाक्रमसद्भावरूप त्यो अद्वितीय कुल एवं कौलज्ञान मैले सम्पूर्ण जानेँ । हे भैरव ! मुखपरम्पराबाट सञ्चरणशील उक्त समग्र कालिकाक्रमसद्भाव मैले जसरी प्राप्त गरेँ म तिमीलाई त्यसैगरी बताउँछु, सुन ॥ ३०–४० ॥

**कथयामि श्रृणु त्वं हि यथाहं प्राप्तवत्यहम्[१] ।**
**अशेषकालिकाभावं सञ्चरन्तं मुखान्मुखम् ॥ ४१ ॥**
**अकथ्यं च महादेव किमर्थं कथयामि ते ।**
**कथ्यमानेन देवेश मृत्युपाशवशं गतिः ॥ ४२ ॥**
**मृत्युपाशवशं गच्छेत्किमर्थं कथयामि ते ।**
**भक्तस्त्वं मम नित्यं हि त्वं च हृन्मुखक्षालकः ॥ ४३ ॥**
**त्वमेव वल्लभो देव त्वमेवान्धकनाशनः ।**
**त्वं प्रभुः सर्वसिद्धानां ब्रह्मविष्ण्वीश्वरादीनाम्[१] ॥ ४४ ॥**

---

१ प्राप्तवत्यहं]संशोधित पाठ ; प्राप्तवानहं–क,ख,ग ।

**त्वद्विनाशे समुत्पन्ने सर्वमेव प्रणश्यति ।**
**त्वत्सकाशादिदं विश्वं पुनर्नष्टं त्वदिच्छया[२] ॥ ४५ ॥**
**मयैतद् गोपितं[३] कौलं ब्रह्मविष्ण्वीश्वरादिषु ।**
**यदि त्वदिच्छा देवेश दीक्षां भज कुलागमे ॥ ४६ ॥**

हे महादेव ! यो कालिकाक्रमसद्भावरूप कौलज्ञान अदीक्षितहरूका अगाडि अकथ्य वा अप्रकाश्य रहेको छ किनभने अदीक्षितहरूलाई यो ज्ञान प्रकाशित गरियो भने अदीक्षित व्यक्ति कालको पाशमा पर्दछ त्यसैले विना दीक्षा यो ज्ञान म तिमीलाई किन बताऊँ ? हे देव ! तिमी मेरा भक्त हौ, तिम्रो मुख र हृदय सधैँ शुद्ध छ, तिमी नै स्वामी हौ, तिमी नै अज्ञानको अन्धकारलाई नाश गर्नेवाला हौ, तिमी सम्पूर्ण सिद्धहरू एवं ब्रह्मा, विष्णु, ईश्वर आदिका प्रभु हौ । तिम्रो मनमा विनाशको सङ्कल्प जागृत हुँदा सम्पूर्ण सृष्टिको विनाश हुन्छ, तिमीबाट नै यो संसारको उत्पत्ति हुन्छ र तिम्रै इच्छाले नष्ट पनि हुन्छ । मैले यो ज्ञान ब्रह्मा, विष्णु, ईश्वर आदिलाई गोप्य राखेको छु । यदि तिमीलाई कुलमार्गमा रुचि छ र कौलज्ञान प्राप्त गर्न चाहन्छौ भने कुलागममा दीक्षा ग्रहण गर । कुलागममा दीक्षा ग्रहण गर्नाले मात्रै पनि उक्त व्यक्ति कौलज्ञानमा आरूढ बन्छ त्यसैले उत्तरपीठमा जाऊ जहाँ मुखपरम्पराबाट प्रवाहित कुलागमसम्बन्धी ज्ञानपरम्परा रहेको छ ॥ ४१–४६ ॥

**येन दीक्षितमात्रेण कौलज्ञानारूढो[४] भवेत् ।**
**गच्छ श्रीउत्तरं[५] पीठं यत्र चास्ति मुखागमम् ॥ ४७ ॥**
**तदाज्ञावर्तमानस्य भविष्यति फलप्रदम् ।**
**कालान्तरं तत्र गतमन्यत्काले प्रवर्तिते ॥ ४८ ॥**
**तदा क्रमागतं ज्ञानं निःशेषं[६] कालिकाक्रमम्[७] ।**
**कालिकाक्रमपूर्वं तु सारं कौलकुलोत्तरम् ॥ ४९ ॥**
**अनस्तमितयत्सारं कौलज्ञानं महाद्भुतम् ।**
**मुखकौलं मुखज्ञानं निःशेषं कुलसम्भवम्[८] ॥ ५० ॥**
**योगिनीवक्त्रमार्गेण[१] सञ्चरत्येव भैरव ।**

---

१ ..दीनाम्]संशोधित पाठ ; दशां–क,ख,ग ।
२ नष्टं त्वदिच्छया पाठ मसी खुइलिएर नदेखिने भएको–क ।
३ मयैतद् गोपितं पाठ मसी खुइलिएर नदेखिने भएको–क ।
४ नारूढो पाठ मसी खुइलिएर नबुझिने भएको–क ।
५ गच्छ श्रीउत्तरं पाठ मसी खुइलिएर नबुझिने भएको–क ।
६ क्रमागतं ज्ञानं निः पाठ मसी खुइलिएर नबुझिने भएको–क ।
७ क्रमम् पाठ मसी खुइलिएर नबुझिने भएको–क ।
८ निःशेषं कुलसम्भवम् पाठ मसी खुइलिएर नबुझिने भएको–क ।

**कौलज्ञानेन देवेश पिण्डस्थैर्यं भविष्यति ॥ ५१ ॥**
**स्थैर्यं पिण्डगतं देव वच्मि ते श्रृणु यत्नतः ।**
**स्थैर्यभूतो भवान् देव[२] धैर्यत्वमवलम्बते[३] ॥ ५२ ॥**
**पिण्डस्थैर्येऽपि सम्प्राप्ते दिव्यकायो नरो भवेत् ।**
**पिण्डस्थैर्यं सदा धैर्यं साश्रयं च भवेच्छिव ॥ ५३ ॥**
**धैर्यत्वात् कालिकाज्ञानं चञ्चलत्वविवर्जितम्[४] ।**
**अव्ययं निश्चलं भावं येन व्याप्तमिदं सदा[५] ॥ ५४ ॥**
**धैर्यत्वं कौलिकं ज्ञानं पदमन्यत्रवर्जितम् ।**
**तस्मात् सर्वप्रयत्नेन कौलवीर्यारूढो[६] भव ॥ ५५ ॥**

इति श्रीमदुत्तरपीठोद्भूते श्रीश्रीनाथावतारिते श्रीकालिकाकुले पञ्चशते प्रथमः पटलः ॥

त्यहाँ गएको केही कालपछि उक्त उत्तरपीठबाट आज्ञा प्राप्त गर्ने साधकको फलिफाप हुन्छ । त्यतिखेर कहिल्यै अन्त्य नहुने, साररूप, महान् अद्भुत, क्रमपरम्पराबाट प्राप्त कालिकाक्रमकुल नामक कौलज्ञान योगिनीवक्त्ररूप मार्गको माध्यमबाट कुलागममा दीक्षित साधकमा सञ्चार हुन्छ र उक्त कौलज्ञानले पिण्डस्थैर्यरूप सिद्धि प्राप्त हुन्छ । पिण्डस्थैर्यरूप सिद्धि प्राप्त भएपछि उक्त साधकले धैर्यको अवलम्बन गर्दछ र उक्त सिद्धिको प्राप्तिबाट साधक दिव्यकाय बन्दछ त्यसैले सधैँ पिण्ड(शरीर)मा स्थिरता ल्याउनुपर्छ र धैर्यभावरूप आश्रयले युक्त हुनुपर्दछ । धैर्यभावबाट साधकको चित्तमा चञ्चलत्वहीन, अविकारी, निश्चल कालिकाज्ञानको आविर्भाव हुन्छ । यो धैर्यभावरूप कौलिक ज्ञान अन्य मार्ग वा आम्नायमा पाइँदैन त्यसैले सम्पूर्ण प्रयत्नद्वारा कुलवीरको भाव अर्थात् कौलवीर्यपदमा आरूढ बन ॥ ४७-५५ ॥

उत्तरपीठमा उद्भव भएको श्रीनाथद्वारा अवतारित **कालिकाकुलपञ्चशतक** नामक ग्रन्थमा तन्त्राचार्य माधवप्रसाद लामिछानेद्वारा नेपाली भाषानुवादसहित सम्पादित पहिलो पटल पूर्ण भयो ।

---

१ योगिनी पाठ अस्पष्ट–क ।
२ वान् देव पाठ टुटेको–क ; भवां देव–ख ।
३ लम्बसे–क,ख ।
४ पदमन्यत्रवर्जितम्–ग ।
५ यो हरफ छैन–ग ।
६ कालवीर्यारूहो–ग ।

# द्वितीयः पटलः

**॥ श्रीभैरव उवाच ॥**
**श्रुतोऽयं तव वक्त्राब्जनिर्गतः शास्त्रसङ्ग्रहः ।**
**दुर्बोधं दुस्तरं चैव नैव जानामि भैरवि ॥ १ ॥**
**कीदृशं धैर्यभावं तु कौलज्ञानस्य निश्चयः[1] ।**
**येनाहं नैव जानामि निःशेषं कल्पनापहम् ॥ २ ॥**

श्रीभैरवले भने–

हे भैरवी ! मैले तपाईंको मुखारविन्दबाट कौलज्ञानको निश्चयस्वरूप शास्त्रसङ्ग्रह सुनेँ तथापि दुर्बोध, दुस्तर, कल्पनारहित एवं निःशेष धैर्यभाव कस्तो हो ? त्यो मैले जानेको छैन त्यसैले मलाई त्यसको उपदेश गर्नुहोस् ॥ १-२ ॥

**॥ श्रीभैरव्युवाच ॥**
**साधु साधु महादेव कौलज्ञानस्य भाजन[2] ।**
**वक्ष्यामि कौलभावं तु श्रृणुष्वेकमना हर ॥ ३ ॥**
**यत् तद् ब्रह्म परं शुद्धं व्योमव्यापी निरामयम् ।**
**निस्तत्त्वं तत्त्वगहनं शाश्वतं च निरञ्जनम् ॥ ४ ॥**
**हानादानविनिर्मुक्तं हेयोपादेयवर्जितम् ।**
**अव्यक्तं पुरुषातीतमजं च परमं ध्रुवम् ॥ ५ ॥**
**निःस्वभावस्वभावं च द्वैताद्वैतविवर्जितम् ।**
**न चोच्चार्यं न लेख्यं च गमागमविवर्जितम् ॥ ६ ॥**
**क्षराक्षरविनिर्मुक्तं स्वरवर्णपदोज्झितम् ।**
**निःसङ्गं[3] निरहङ्कारं सर्ववाङ्मयवर्जितम्[4] ॥ ७ ॥**
**न ह्रस्वं न च वा दीर्घं न स्थूलं न कृशं तथा ।**
**न वेद्यं नैव चोच्चार्यं न मन्त्रं मन्त्रसंयुतम् ॥ ८ ॥**
**न ब्रह्मा न च वै विष्णुर्न रुद्रो नेश्वरः शिवः ।**
**न सन्धिः सर्वरी[5] नैव न दिनं पर्व नैव च ॥ ९ ॥**

---

१ निश्चयं–ख ।
२ भाजनः–ख ।
३ निःषङ्ग–ख ।
४ ..ङ्म अक्षर टुटेको–क ।
५ सर्वरी पाठ टुटेको–क ।

**न चोर्ध्वं न च वा मध्यं न चाधः ककुभो न च ।**
**ऊर्ध्वशून्यमधःशून्यं मध्यशून्यं तृतीयकम् ॥ १० ॥**
**शून्याशून्यतरं सर्वं जायते[1] धैर्यसंज्ञितम्[2] ।**
**ईदृशं[3] धैर्यमासाद्य स्वरूपं कथयाम्यहम् ॥ ११ ॥**

श्रीभैरवीले भनिन्–

हे महादेव ! हे कौलज्ञानका अधिकारी ! हे हर ! तिमीले राम्रो कुरा गऱ्यौ । धैर्यरूप कौलभाव के हो भन्ने कुरा म बताउँछु , एकाग्रचित्त भएर सुन । परम शुद्ध, आकाशझैँ व्यापक, निरामय, जहाँ कुनै तत्त्व शेष रहँदैन त्यस्तो निस्तत्त्व, सारभूत, गम्भीर, शाश्वत, निरञ्जन, त्याग र ग्रहणको विषयबाट निर्मुक्त, हेय र उपादेयको भावले वर्जित, अव्यक्त, पुरुषातीत, अज, परम सत्य, द्वैत तथा अद्वैतभावले वर्जित, निःस्वभावस्वभाववाला, उच्चारण गर्न नसकिने अर्थात् अर्धमात्रामा स्थित, लेख्न नसकिने, आवागमनरूप संसारचक्रबाट वर्जित, क्षर तथा अक्षरबाट निर्मुक्त, स्वर, वर्ण तथा पदले रहित, सङ्गरहित, अहङ्कारहीन, सम्पूर्ण वाङ्मयले वर्जित, ह्रस्व, दीर्घ, मोटो, दुब्लो आदि भावले रहित, जान्न नसकिने तत्त्व नै धैर्य हो । त्यो धैर्य नामक तत्त्व न मन्त्र हो, न त्यो मन्त्रले युक्त छ, न त्यो तत्त्व ब्रह्मा, विष्णु, रुद्र र ईश्वर नै हो । त्यो न दिन हो, न रात हो, न पर्व हो, न सन्धि हो, न माथि हो, न तल हो, न बीच हो, न दिशा हो । अधःशून्य, ऊर्ध्वशून्य र मध्यशून्य, शून्यभन्दा पनि शून्यतर त्यो तत्त्व धैर्य नामले जानिन्छ । (यहाँ शून्यको तात्पर्य बौद्धमार्गीहरूको झैँ शून्य नभई आकाशझैँ शून्यस्वरूप भन्न खोजिएको हो । जसरी आकाश रूप र आकारहीन शून्यस्वरूपवाला छ तर अस्तित्ववान् छ त्यसरी नै उपर्युक्त धैर्यसंज्ञक तत्त्व पनि आकाशझैँ शून्यस्वरूपवाला छ । यस्तो प्रकारको धैर्य नामक तत्त्वलाई जानेर म अब स्वरूपविज्ञान बताउँछु ॥ ३-११ ॥

**॥ श्रीभैरव उवाच ॥**
**वन्दे श्रीनाथपादाब्जौ शिरसा धारयामि यौ ।**
**निर्मुक्तगिरिसम्बन्धां वन्दे[4] तां कुलकेशरीम्[5] ॥ १२ ॥**
**पुनः पृच्छामि तत् सर्वमाद्यं प्रश्नमनुत्तमम् ।**

---

१ ..यते पाठ टुटेको–क ।
२ धै अक्षर टुटेको, ज्ञितम् पाठ मसी उडेकाले नबुझिने भएको–क ।
३ ई अक्षर मसी उडेकाले नबुझिने भएको–क ।
४ वदे–ग ।
५ श अक्षर टुटेको–क ।

**वद त्वं परमेशानि यद्यस्ति मदनुग्रहः ॥ १३ ॥**
**यद्यहं कुलकौलार्थी योग्यो देवि कुलागमे ।**
**तदा स्वरूपविज्ञानं वद मे सुरसुन्दरि ॥ १४ ॥**

श्रीभैरवले भने–

श्रीनाथका ती चरणकमललाई म शिरले वन्दना गर्दछु जसलाई मैले आफ्नो हृदयमा धारण गरेको छु। त्यसैगरी पर्वत (हिमालय) सँग जसको निर्मुक्त सम्बन्ध रहेको छ ती कुलकेशरी माता पार्वतीलाई पनि नमस्कार गर्दछु। हे भैरवी ! यदि म कुलागममा योग्य कुलकौलार्थी हुँ र यदि मलाई अनुग्रह गर्नु हुन्छ भने फेरि पनि म स्वरूपविज्ञानको विषयसँग सम्बद्ध सबैभन्दा उत्तम, सबैभन्दा मुख्य र पहिलो प्रश्न सोध्छु, हे सुरसुन्दरी ! मलाई त्यो उपदेश गर्नुहोस् ॥ १२-१४ ॥

**॥ श्रीभैरव्युवाच ॥**

**श्रृणुष्वेदं रहस्यं यद् गोपयेद् भुजगाङ्गद ।**
**अद्‌भुतं कथयिष्यामि सारभूतं परन्तप ॥ १५ ॥**
**कौलज्ञानार्णवस्यैवमर्हस्त्वं हि कपालधृक् ।**
**सर्वेन्द्रियनिराधारं सर्ववाङ्मयवर्जितम् ॥ १६ ॥**
**सर्वास्तमितभावेन वच्मि तत् किं प्रयोजनम् ।**
**प्राह तत् भगवानेषः[१] परमात्मा सनातनः ॥ १७ ॥**
**न शक्यः सर्वथा देव प्रश्नं चोत्तरनिर्णयम् ।**
**तमो[२] हुतात्मविज्ञानं[३] साकारो यत्र लीयते ॥ १८ ॥**
**तन्मध्यवर्तिन्यपरा विज्ञेया क्रमपद्धतिः ।**
**शून्यं सर्वं निरालम्बमिदं[४] विश्वं चराचरम् ॥ १९ ॥**
**निराधारमिदं सम्यग्ज्ञेयं ब्रह्म सनातन ।**
**तेन प्रोतमिदं सर्वमवतारकरं तव ॥ २० ॥**
**सम्यग्ज्ञानमिदं देव कथं वाचाऽवधार्यते ।**
**तत्रान्तर्गर्भगं कौलं कौलाश्च कुलनिर्णयः ॥ २१ ॥**
**कौलं नाम महाज्ञानं योगेशीनां मुखे स्थितम् ।**
**अकथ्यमप्रमेयं च कलनाकालवर्जितम् ॥ २२ ॥**
**तत् सामर्थ्यं स्वरूपेण अव्यक्तं व्यक्तमिष्यते ।**
**यथा मरीचिनिचयो भानोराकाशसंस्थितः ॥ २३ ॥**

---

१ भगवामेष–ख ; भगवतामेष–क ।
२ नमो–ग ।
३ भूतात्मविज्ञानं–ग ।
४ निरालम्बं मिदं–क ।

दृश्यते व्यक्तभेदेन तथा ज्वालाऽग्निना[1] हर ।
सा च तद्धर्मिणी शुद्धा खमूर्तिः सा परा कला ॥ २४ ॥
सा द्वैताद्वैतमायाता परमानन्दरूपिणी ।
तस्या व्यक्तिः[2] समुत्पन्ना स्वेच्छया परमेश्वर ॥ २५ ॥
ऊर्ध्वाधो[3] व्याप्तिभेदेन तमो ज्योतिर्व्यवस्थितम् ।
तमश्च सर्वरी ज्ञेया ज्योतिरुक्ता दिवाकरी ॥ २६ ॥
ज्योतिःसंहारकी शक्तिस्तमः[4] सृष्टिमयी स्थितिः ।
तमः सोमस्तु[5] विज्ञेयो ज्योतिर्भानोस्तु[6] सम्भवः ॥ २७ ॥
अर्कस्थः स[7] च वह्निश्च शशिगर्भः कला स्मृतः ।
सृष्टिसंहारयोर्मध्ये कुलपिण्डं तदुच्यते ॥ २८ ॥
ऊर्ध्वे सृष्टिं विजानीयादधः[8] संहार उच्यते ।
उभयोर्गर्भवह्नित्वं कुलपिण्डं तदुच्यते ॥ २९ ॥
कुलं कौण्डलिनी ज्ञेया कौण्डली सा पराकला ।
तत्र मध्ये पराशक्तिः स्थितिजन्मलयङ्करी ॥ ३० ॥
सा एव परमा शक्तिस्तत्त्वग्रसनलोलुपा[9] ।
अशरीरा शरीरस्था स्वभावान्तरगर्भिणी ॥ ३१ ॥
अकुला तु कुलं याता कौलिकानन्ददा सदा ।
सा शक्तिः कुलसंज्ञेति शास्त्रेऽस्मिन् सम्प्रगीयते ॥ ३२ ॥
एतत् कुलमशेषेण वेदितव्यं कुलेश्वर ।
स्थानं तस्य निराधारमकुलं शून्यसंज्ञितम् ॥ ३३ ॥
शून्याशून्यतरं देव भावाभावपदोज्झितम् ।
स्थानं कुलस्य चोत्पत्तिं विदुर्वीरेन्दुनायकः ॥ ३४ ॥
एतद्रहस्यं परमं कुलं ज्ञातं न केनचित् ।
शैवाद् वाह्यमिदं देव [10]पञ्चस्रोतोविवर्जितम् ॥ ३५ ॥[11]

---

१ ला अक्षर टुटेको–क ।
२ व्यक्ति–क ।
३ ऊर्ध्वा टुटेको–क ।
४ शक्तिः तमः–क ।
५ सोमस्तु टुटेको–क ।
६ ज्योतिभानोस्तु–ख,ग ।
७ अर्क्कस्थस्स–ख ।
८ या अक्षर टुटेको–क ।
९ तत्वग्रसनलोलया–ख ।
१० पञ्चश्रोत्र–ख,ग ।
११ ..दं देव देखि ५१ श्लोकको कालिसद्भावं सम्मको पाठ अनुपलब्ध–क ।

**दशाष्टदशभेदस्य शैवस्य परमेश्वर ।**
**अन्तर्लीनमिदं ज्ञानं न ज्ञातं त्रिदशेश्वरैः ॥ ३६ ॥**
**सर्वत्र संस्थितं देव सुगूढं कुलमुत्तमम् ।**
**पुष्पे गन्ध इवाशक्तं तैलं यद्वत्तिलादिषु ॥ ३७ ॥**
**तथैव सर्वशास्त्राणां कुलमन्तः प्रतिष्ठितम् ।**[1]
**कुलात्मकं महाज्ञानं लोकयात्राविवर्जितम् ॥ ३८ ॥**
**स्वात्मसंवित्तिविषयं प्राणायामविवर्जितम् ।**
**लभन्ते पुण्यकर्माणो ज्ञानं परमदुर्लभम् ॥ ३९ ॥**
**यस्य जन्मसहस्राणि क्षयं यान्ति कुलेश्वर ।**
**संसारवासना घोरा निःशेषा गलिता यदा ॥ ४० ॥**
**तदा सौशुद्धदेहात्मा विन्दति ज्ञानमुत्तमम् ।**
**यावन्नानुग्रहो देव भैरवेण स्वयं कृतः ॥ ४१ ॥**
**अथवा परया शक्त्या शक्तिपातेन वा पुनः ।**
**तावत् प्राप्तिः कुतस्तस्य कुलज्ञानं**[2] **त्रिलोचन ॥ ४२ ॥**
**कुलात् कौले प्रधानत्वे कौलात् क्रमचतुष्टयम् ।**
**तस्मात् सर्वप्रयत्नेन कुलमादौ श्रियै शिव ॥ ४३ ॥**

श्रीभैरवीले भनिन्–

शरीरमा सर्परूपी गहना धारण गर्ने हे परन्तप ! हे कपालधृक् ! तिमी कौलज्ञानरूपी सागरमा डुबुल्की मार्न योग्य छौ त्यसैले सम्पूर्ण इन्द्रियरूपी आधारले हीन अर्थात् इन्द्रियद्वारा अग्राह्य, सम्पूर्ण वाङ्मयले वर्जित अर्थात् शास्त्रद्वारा व्यक्त गर्न नसकिने सनातन परमात्माले बताउनु भएको तर सर्वथा उहाँले पनि यस सम्बन्धी प्रश्नको निर्णयात्मक उत्तर दिन असमर्थ हुनुभएको त्यस्तो सारभूत अद्भुत रहस्य एवं त्यसको प्रयोजन सम्पूर्ण रूपले म तिमीलाई बताउँछु । अन्धकार, अग्नि, साकारस्वरूप सम्पूर्ण चराचर विश्व जहाँ लय हुन्छ त्यस्तो कालको मध्यवर्ती अपराशक्ति नै क्रम हो भनेर जान्नू । सनातन ब्रह्म शून्य, पूर्ण, निरालम्ब, निराधार, सबैको अवतारक हो भनेर राम्ररी बुझ्नू । यो सम्पूर्ण चराचर विश्व सोही ब्रह्मले ओतप्रोत भएको छ । सोही ब्रह्ममा नै कौलज्ञान, कुलसम्बन्धी निर्णय र कौलहरू अन्तर्गर्भित हुन्छन् । योगिनीहरूको मुखमा रहेको, अकथ्य, अप्रमेय, कला र कालबाट वर्जित कौल नामक यस्तो महाज्ञानलाई वाणीले कसरी धारण गर्न सक्छ ? तैपनि हे देव ! म तिमीलाई त्यो ज्ञान

---

१ पुष्पे गन्धस्तिले तैलं देहे जीवो जलेऽमृतम् ।
तथैव सर्वशास्त्राणां कुलमन्तः प्रतिष्ठितम् ॥ (तन्त्रालोक, ३५।३४) ।

२ कुलज्ञाने–ख,ग ।

उपदेश गर्छु, सुन। सोही ब्रह्मको सामर्थ्यस्वरूप शक्तिका कारणले नै अव्यक्त रूपमा रहेको वस्तुजगत् व्यक्त देखिन्छ। आकाशमा रहेको सूर्यको किरणसमूह तथा अग्निको ज्वाला क्रमश: सूर्य र अग्निबाट अभिन्न भए तापनि भेदरूपले व्यक्त देखिन्छ त्यसरी नै ब्रह्मको शक्ति पनि ब्रह्मबाट अभिन्न भए तापनि जगत्का रूपमा उल्लसित हुँदा भेदरूपले व्यक्त हुन्छ। ती शुद्ध, धर्मी, शून्यस्वरूपवाला परमानन्दरूपिणी पराकला द्वैताद्वैतरूपमा परमेश्वरको स्वेच्छाले अभिव्यक्त हुन्छिन्। तमस् अर्थात् अन्धकार तल रहेको छ भने ज्योति माथि रहेको छ। तमस् वा रात्रिको प्रतीक चन्द्रमा हो भने ज्योति वा दिनको प्रतीक सूर्य हो। ज्योति वा सूर्य संहारक शक्ति हो भने तमस् वा चन्द्रमा सृष्टिमय स्थिति हो त्यो परम कारणस्वरूप शिव वा ब्रह्म सूर्यका रूपमा रहेको छ भने वह्नि तथा चन्द्रमा शिवस्वरूप सूर्यका कला हुन् भनेर बुझ्नू। सृष्टि (चन्द्रमा) र संहार (अग्नि) को बीचमा रहेको त्यो तेजस्तत्त्व(सूर्य)लाई कुलपिण्ड भनिन्छ। कुललाई कौण्डलिनी भनेर जान्नू तथा त्यही कौण्डली वा कौण्डलिनी पराकला हुन्। कुलपिण्डको मध्यमा रहेकी कौण्डली वा कौण्डलिनी पराकला सृष्टि, स्थिति र लयको कारण हुन्। सम्पूर्ण तत्त्वलाई आफूभित्र लीन गर्ने स्वभाव भएकी सोही परमा शक्ति शरीररूप दृष्टविग्रह नभएकी, चेतनाका रूपमा शरीरमा रहेकी तथा आफ्नो वास्तविक स्वरूपलाई भित्र लुकाएर राख्ने स्वभावले युक्त छिन्। कुलरूपमा व्यक्त भएकी अकुलरूप तिनै पराशक्ति सधैँ कौलिक आनन्द प्रदान गर्ने शक्ति हुन् जसलाई कालिकाकुलशास्त्रमा कुल नामले गान गरिन्छ। हे कुलेश्वर! उक्त कुलस्वरूप शक्तिलाई सम्पूर्णरूपले जान्नुपर्दछ। उक्त कुलको उत्पत्तिस्थान निराधार, अकुल, शून्य, शून्यभन्दा पनि शून्य, भाव र अभावले रहित पद हो भनेर बुझ्नू। यो परम रहस्य कुललाई कसैले पनि जानेको छैन। यो कुलज्ञान दश शिवागम तथा अष्टादश रुद्रागममा अन्तर्लीन भएको ज्ञान हो। यो ज्ञान देवताहरूले पनि प्राप्त गरेका छैनन्। जसरी फूलमा सुगन्ध अनि तिल, तोरी आदिमा तेल सारका रूपमा रहेको हुन्छ त्यसरी नै यो अत्यन्त रहस्यमय उत्तम कुलज्ञान सम्पूर्ण शास्त्रहरूमा तिनीहरूको सारभूत तत्त्वको रूपमा रहेको छ। यो कुलात्मक महाज्ञान स्वानुभूतिगम्य विषय हो, यो ज्ञान लोकयात्राले वर्जित छ अर्थात् यसको ज्ञानले आवागमनरूप लोकयात्राबाट मुक्ति मिल्छ। प्राणायाम आदि योगप्रक्रियाले रहित यो परम दुर्लभ ज्ञान पुण्यकर्म गर्नेहरूले प्राप्त गर्दछन्। जसका हजारौँ जन्महरू क्षय भएका छन् र घोर संसारवासना सम्पूर्णरूपले गलित भएको छ त्यस्तो अत्यन्त शुद्ध देहधारी पुरुषले नै यो उत्तम ज्ञान प्राप्त गर्दछ। जबसम्म स्वयं भैरव अथवा

पराशक्तिद्वारा शक्तिपातका माध्यमबाट साधकलाई अनुग्रह हुँदैन तबसम्म उसलाई कुलज्ञानको प्राप्ति कहाँ हुन्छ ? अर्थात् त्यस्तो साधकलाई कुलज्ञानको प्राप्ति सम्भव छैन। कुलभन्दा कौलमा प्रकृतिको भाव रहँदा उक्त प्रकृतिरूप कौलबाट सृष्टि, स्थिति, संहार र अनाख्यारूप क्रमचतुष्टयको विस्तार हुन्छ त्यसैले सर्वप्रथम सम्पूर्ण प्रयत्नद्वारा कुलको आश्रय ग्रहण गर्नू ॥ १५-४३ ॥

**॥ श्रीभैरव उवाच ॥**

**श्रुतं मे कुलशास्त्रस्य निर्णयं परमेश्वरि ।**
**ज्ञानचक्षुस्त्वया देवि वद चैतत् स्फुटं मम ॥ ४४ ॥**
**अशेषसंशयस्यास्य छेत्त्री[1] त्वं परमेश्वरि ।**
**अद्यापि नैव जानामि गूढं वक्त्रागमे स्थितम् ॥ ४५ ॥**
**पारम्पर्यक्रमं सम्यगायातं सुरसुन्दरि ।**
**वक्त्राद् वक्त्रक्रमेणैव रहस्यं परमाद्भुतम् ॥ ४६ ॥**
**सृष्टिकर्तृंश्च नाथांश्च पत्नीस्तेषां[2] च भैरवि ।**
**युगादिप्रविभागेन[3] चतुर्थे कलिसंज्ञिते[4] ॥ ४७ ॥**
**विस्तरं वद देवेशि क्रीडनं परमेश्वरि[5] ।**
**सृष्टिप्रयोगसंयोगमवतारं तथैव च ॥ ४८ ॥**
**संहारं वद मे देवि तथा कालिक्रमं परम् ।**
**मन्त्रोद्धारं सुनिपुणं पूजां तेषां क्रमागताम् ॥ ४९ ॥**
**कालिकाकुलशास्त्रस्य कुलाम्नायस्य निश्चयम् ।**
**प्रसादाद् ब्रूहि सर्वं मेऽनुग्रहं कुरु भैरवि ॥ ५० ॥**

श्रीभैरवले भने–

हे परमेश्वरि ! मैले कुलशास्त्रको निर्णय सुनेँ। मेरो ज्ञानचक्षु तिमीले खोलिदियौ। तिमी सम्पूर्ण संशयलाई नाश गर्दछ्यौ। अद्यापि वक्त्रागममा रहेको गूढ कुलज्ञान मैले जानेको छैन त्यसैले मुखपरम्पराबाट व्यवस्थित ढङ्गले आएको परम अद्भुत रहस्यमय क्रमपरम्परा, युगादि विभागले चौथो कलियुगको समेत कुलशास्त्रका प्रवर्तक नाथगुरुहरू तथा गुरुपत्नीहरूको बारेमा बताऊ। त्यसका साथै सृष्टि, अवतार (स्थिति), संहार र अनाख्याक्रम (कालिकाक्रम)रूप लीला एवं मन्त्रोद्धार, सृष्टि, स्थिति

---

१ च्छेत्ता–ख ।
२ पत्नी तेषां– ।
३ न अक्षर अस्पष्ट–ख ; न अक्षर हुनुपर्ने स्थान खाली रहेको–ग ।
४ कालिसंज्ञिते–ख,ग ।
५ पारमेश्वरि–ख,ग ।

आदि क्रमअनुरूप पूजाविधि, कालिकाकुलशास्त्र वा कालिकाकुलाम्नायको निश्चयसम्बन्धी सबै विषयहरू बताऊ र मलाई अनुग्रह गर ॥ ४४-५० ॥

**॥ श्रीभैरव्युवाच ॥**

**श्रृणु रुद्र महाप्राज्ञ भक्तस्त्वं मम नित्यशः ।**
**वच्मि ते कालिसद्भावं पारम्पर्यक्रमोदितम् ॥ ५१ ॥**
**[१]ब्रह्मविष्णिवन्द्ररुद्राणामीश्वरादिदिवौकसाम् ।**
**सुदूरमपि देवेश भाव्यते कालिकाक्रमः ॥ ५२ ॥[२]**
**न ज्ञातं तैस्तथा[३] देव भवपाशनिकृन्तनम्[४] ।**
**महामायाख्यजालेन वेष्टितास्ते स्थिता यतः ॥ ५३ ॥**
**तदेकाग्रमना भूत्वा श्रृणु सङ्क्षेपतोऽधुना ।**
**या सा शक्तिः पराशून्या शिवस्य वशवर्तिनी ॥ ५४ ॥**
**सर्वगा शान्तरूपा च[५] निराचारेऽतिकीर्तिता ।**
**बीजव्याप्तिप्रभेदेन साऽऽनन्त्येनोपचर्यते ॥ ५५ ॥**
**सैवैका[६] कोटिभेदेन सर्वं व्याप्यानुसंस्थिता[७] ।**
**लोलीभूतपराशक्तिरविसोमकलोदयम् ॥ ५६ ॥**
**प्रकाशानन्दयोरन्तरेकाकारतया स्थिता ॥**
**पारम्पर्यक्रमायाता वर्णभेदव्यवस्थिता ॥ ५७ ॥[८]**
**अद्वैता द्वैतसंस्था[९] तु सामरस्यपदप्रदा[१०] ।**
**तदाम्नायमिदं[११] रुद्र सारभूतं त्रिलोचन ॥ ५८ ॥**
**तच्च देव कुलाम्नायमशेषक्रमसन्ततिः ।**
**सृष्टिक्रमस्तु प्रथमो[१२] द्वितीयश्चावतारकः ॥ ५९ ॥**
**संहारस्तु[१३] तृतीयः स्याद् वक्त्राद् वक्त्रे[१] चतुर्थकः ।**

---

१ ब्रह्मा–क ।
२ ..क्रमदेखि श्लोक ६१ सम्मको पाठ अनुपलब्ध–ख ।
३ तत्तथा–ग ।
४ भवपाश–ग ।
५ वि–ग ।
६ सैवेका–ग ।
७ घषव्याप्यानुसंस्थिता–क ; ..व्याध्यानुसंस्थिता–ग ।
८ ..देखि व्यवस्थितासम्मको पाठ अनुपलब्ध–ग ।
९ द्वैतयःस्था–ग ।
१० सामरस्यपदप्रभा–ग ।
११ तदाम्नाय इदं–क ; मा.ग तदाम्नाय..दं–ग ।
१२ प्रथ टुटेको–क ।
१३ संसारस्तु–क ।

**खेचरीहृदयाब्जस्थं पारम्पर्यक्रमोदितम् ॥ ६० ॥**
**व्योमेशी[2] बिन्दुभावस्थं खेचरीभिरनिन्दितम् ।**
**तस्यानुक्रमयोगेन क्रमास्त्रीणीति[3] संस्थिताः[4] ॥ ६१ ॥**

श्रीभैरवीले भनिन्–

हे रुद्र ! हे महाप्राज्ञ ! तिमी सधैँभरि मेरा भक्त हौ त्यसैले पारम्पर्यक्रमबाट आएको यो कालिकासद्भाव म तिमीलाई बताउँछु । ब्रह्मा, विष्णु, इन्द्र, रुद्र, ईश्वर आदि देवताहरूद्वारा पनि कालिकाक्रमको भावना गरिन्छ । महामायाजालले बाँधिएका हुनाले तिनीहरूले संसाररूपी पाशलाई चुँडाल्ने उपाय जानेका छैनन् । उक्त कालिकाक्रम म सङ्क्षेपमा भन्छु, एकाग्रचित्त भएर सुन । शिवकी अभिन्न परम शून्यस्वरूप स्वातन्त्र्यशक्ति सर्वव्यापक, शान्त, निराचारमा प्रसिद्ध छिन् । समस्त चराचर जगत्मा अद्वितीयरूपले रहेकी तिनै शिवकी स्वातन्त्र्यशक्ति बीज तथा व्याप्तिका भेदले अनन्त रूप धारण गर्दछिन् र त्यसै अनुसार अनन्तरूपले उनको उपासनारूप व्यवहार गरिन्छ । उक्त शक्ति करोडौं भेदले समस्त चराचर जगत्लाई ढाकेर रहेकी छिन् अर्थात् तिनी सबैमा व्याप्त छिन् । सृष्टिकार्यमा आतुर सो पराशक्तिबाट रवि र सोमरूप कलाको उदय हुन्छ । सो पराशक्ति प्रकाश र आनन्दभित्र एकाकाररूपले रहेकी छिन् । पारम्पर्यक्रमले आएकी तिनी मातृका वर्णका रूपमा रहेकी छिन् । अद्वैत भएर पनि द्वैतभावमा रहेकी तिनी सामरस्यपद प्रदान गर्ने शक्ति हुन् त्यसैले सोही पराशक्ति कालिकाको मार्ग नै सारभूत मार्ग हो । त्यही कुलाम्नाय नै सम्पूर्ण क्रमसन्तति हो जसमा प्रथम क्रमलाई सृष्टिक्रम भनिन्छ भने द्वितीय क्रमलाई अवतारक्रम वा स्थितिक्रम भनिन्छ । त्यसैगरी तृतीयक्रमलाई संहारक्रम भनिन्छ । चतुर्थक्रम साक्षात् गुरुमुखबाट शिष्यमा सङ्क्रान्त हुने, पारम्पर्यक्रमबाट उदित भएको, खेचरीगणको हृदयकमलमा रहेको, व्योमेशीरूप बिन्दुभावमा रहेको, खेचरीगणद्वारा अनिन्दित अनाख्याक्रम वा कालिकाक्रम हो । अन्य तीनवटा क्रमहरू सोही अनाख्याक्रमरूप चतुर्थक्रमको अनुक्रमयोगले रहेका छन् । ॥ ५१-६१ ॥

**क्रमास्तु[5] कौलसंस्थास्तु[6] कौलः स्याच्च कुलाकुलम् ।**

---

१ स्यात्वक्त्राद्वक्त्रे–क ; मा.ग स्यात् वक्त्राद्वक्त्रे–ग ।
२ व्यामनी–ग ।
३ क्रमात्स्त्रीपि–ग ।
४ समस्थिताः–ग ।
५ क्रमाश्च–ग ।
६ कौलसंस्था तु–क,ग ।

तस्योपाधिक्रमं यच्च तद् ब्रवीमि ह्यशेषतः ॥ ६२ ॥
तत् प्रवक्ष्याम्यहं रुद्र स्थिरचित्तः[1] श्रृणुष्व मे ।
श्रीपीठे मध्यमे वाऽथ कामरूपेऽथवा हर ॥ ६३ ॥
काश्मीरे डाहले वाऽथ कौलगिर्यां च गौडके ।
एषु स्थानेषु देवेश श्मशाने मातृमण्डले ॥ ६४॥
सुसमे भूप्रदेशे तु निम्नोन्नतविवर्जिते ।
दर्पणोदरसङ्काशे तुषकेशास्थिवर्जिते ॥ ६५ ॥
महोदकेन संलिप्ते कुङ्कुमोदकसंयुते ।
पुष्पप्रकरसङ्कीर्णे नानाधूपसमन्विते ॥ ६६ ॥
गुरुरानन्दितो[2] भूत्वा योगेशी वाऽथ भैरव ।
सुधीरा निर्विकल्पाश्च अद्वैताचारपारगाः ॥ ६७ ॥
कुलागमविधानज्ञाः सर्वागमरताः[3] सदा[4] ।
निस्त्रिंशाचारसंयुक्ताः[5] प्रपञ्चरहिता यदि ॥ ६८ ॥
आचार्यो वाऽथ देवेश दूतीयुक्तो[6] महामतिः ।
कुलवित्साधकैर्युक्तः[7] क्रमविज्ञानपारगः ॥ ६९ ॥
चिन्तयेत् परमां शक्तिं स्थूलसूक्ष्मानुवर्तिनीम् ।
सूक्ष्मां[8] कुलस्वरूपस्थां स्थूलां बाह्योदितां स्थिताम् ॥ ७० ॥
विश्वरूपां महालक्ष्मीं विश्वग्रासैकलम्पटाम् ।
कालाग्निचक्रादुदितां तडित्कोटिसमप्रभाम् ॥ ७१ ॥
त्रिधामधाममध्यस्थां धामाधरपदे स्थिताम् ।
षडङ्गयोगनिर्मुक्तां स्वयोगानुचरां सदा[9] ॥ ७२ ॥
सर्वास्तमिततेजस्कां केवलां योगवर्तिनीम् ।
तामेव बाह्ये देवेशीं सूक्ष्मां स्थूलेन भैरवीम् ॥ ७३ ॥
सूक्ष्मां कुलस्वरूपस्थां स्थूलां बाह्योदितां स्थिताम् ।
पूजयेन्मानसैः [10]पुष्पैर्भक्ष्यभोज्यैरनेकशः ॥ ७४ ॥

---

१ स्थिर..नु–ग ।
२ तो अक्षर केरमेट भएको–ख, मा.ग गुरुनानन्दिनो–ग ।
३ स्तर्व्वागमरताः–क ; स अक्षर केरमेट भएको–ख ।
४ स केरमेट भएको–ख ।
५ निःस्त्रिंशाचारसंयुक्ताः–क ।
६ दूतीयुक्ता–ग ।
७ ध अक्षर केरमेट भएको–क ; ..लविंसाधकैर्युक्तः–ग ।
८ शूक्ष्मा–क,ख ।
९ मदां–क ।
१० पुष्पैःर्भक्ष्य–क ।

**मांसैश्च पानकैर्दिव्यैः पशुभिश्चोत्तमाधमैः ।**
**मान्दारकुसुमैश्चैव नानाधूपैः सुगन्धिभिः[1] ॥ ७५ ॥**
**एतद्यागपदं चिन्त्यं शोभनं कुलगोचरे ।**
**दक्षिणाभिमुखो भूत्वा खटिकाकरसंयुतः ॥ ७६ ॥**
**तत्रालिखेत् परां देवीं शुष्कां शुष्काननां शिवाम् ।**
**द्विभुजामेकवक्त्रां च मांसशोणितवर्जिताम् ॥ ७७ ॥**
**स्नाय्वस्थिकृष्णवपुषीं नरान्त्रादिप्रियां सदा[2] ।**
**रुद्रमुण्डासनारूढां मुण्डद्वयपदार्पिताम् ॥ ७८ ॥**
**वामके वैष्णवं मुण्डं सव्ये मुण्डं विरिञ्चिजम् ।**
**प्रत्यालीढे च चरणे[3] स्थिता साद्या प्रपूरणी ॥ ७९ ॥**
**अघोरा घोरदंष्ट्रा तु महाफेत्कारनादिनी ।**
**ऊर्ध्वकेशी त्रिनेत्रा च महापात्रधरी शिवा ॥ ८० ॥**
**शुष्कस्तना कृशोदरी शिशुकर्णावलम्बिनी ।**
**महाह्याभरणा रौद्रा मुण्डमालाविभूषिता ॥ ८१ ॥**
**एवं रूपधरां लिख्य मातृकां तत्र पूजयेत् ।**
**पश्चात् सम्पूजयेत् तां तु यथाविभवविस्तरैः ॥ ८२ ॥**

क्रमहरू कौलसंस्था हुन् भने कौलचाहिँ कुलाकुलरूप द्वैताद्वैतभाव हो । अब म कुलाकुलरूप कौलको उपाधिक्रमसम्बन्धी उपदेश गर्छु त्यसलाई एकाग्रचित्त भएर सुन ।

सबैभन्दा माझमा रहेको श्रीपीठ, कामरूपपीठ, काश्मीरपीठ, डाहलपीठ, कौलगिरिपीठ, गौडपीठ यी पीठस्थानहरूमा, श्मशानमा, मातृकामण्डलमा, उबडखाबड नभएको ऐनाजस्तै सम्म परेको, भुस, रौँ, हाड आदि नभएको, महोदकले लिपिएको, कुङ्कुमजलले युक्त, फूलका थुङ्गाहरूले सजाइएको, विभिन्न किसिमका धूपहरूको सुगन्धले युक्त भएको स्थानमा अत्यन्त आनन्दित भावले युक्त भएर गुरु, योगिनी एवं अत्यन्त धीर स्वभाव भएका, निर्विकल्पभावमा आरूढ भएका, अद्वैताचारमा पारङ्गत भएका, बलियुक्त आचारमा लागेका, प्रपञ्चले रहित भएका कुलसाधकहरू तथा त्यस्ता कुलसाधकहरूले युक्त, दूतीले सहित भएका अत्यन्त बुद्धिमान्, कुलसाधनालाई राम्ररी जान्ने, क्रमविज्ञानमा पारङ्गत भएका आचार्यले स्थूल एवं सूक्ष्मस्वरूप धारण गर्ने भएकी पराशक्ति जो सूक्ष्म रूप धारण गर्दा कुलस्वरूपमा रहेकी छिन् भने स्थूल रूप धारण गर्दा बाह्य जगत्का

---

१ सुगन्धि पाठ टुटेको–क ।
२ दा केरमेट भएको–ख ; सपछाडिको स्थान खाली रहेको–ग ।
३ कर केरमेट भएको–ख ; ..रणे–ग ।

रूपमा रहेकी छिन् त्यस्ती विश्वरूप भएकी अनन्त ऐश्वर्यले युक्त विश्वलाई ग्रास गर्ने अर्थात् आफूमा लीन गर्ने संहारलीलामा तत्परताका साथ लागेकी भगवतीको पूजा गर्नू । कालाग्निकुण्डबाट उदाएकी, करोडौं बिजुलीको झैं आभा भएकी, त्रिधाम अर्थात् सोम, सूर्य र अग्निरूप त्रिधामको माझमा रहेकी, आधारधाम (मूलाधार चक्र) मा रहेकी, षडङ्गयोगबाट मुक्त, सधैं आफ्नो योगको पालना गर्ने, तमस् अर्थात् अन्धकारस्वरूप भएकी, केवल वा अद्वितीय स्वरूप भएकी भैरवीलाई ध्यानपूर्वक चिन्तन गर्नू तथा मानसोपचारले एवं अनेक प्रकारका फलफूल, मद्य, मासु, दिव्य पेय पदार्थहरू, पशुबलि, मान्दार फूलहरू, विभिन्न किसिमका सुगन्धी धूपहरूले पूजा गर्नू । माथि वर्णन गरिएको यागपद (यागधाम) को चिन्तन वा निर्धारण कुलनक्षत्रमा गर्नू र दुवै कानको बाहिरी भागमा हात राखेर क्षमायाचनाको भावले युक्त साधकले दक्षिणाभिमुख भएर सो यागधाममा शुष्क मुख भएकी, एक मुख तथा दुई हातले युक्त शरीर भएकी, मासु र रगत नभएको शुष्क कङ्कालस्वरूप भएकी, नसा र हाडमात्र भएको कालो वर्णकी, मान्छेको आन्द्रालाई प्रिय मानेर आफ्नो गलामा बेरेकी, रुद्रको शिरमा बसेकी तथा बायाँ पाउ विष्णुको शिरमा तथा दायाँ पाउ ब्रह्माको शिरमा राखेकी, देब्रे खुट्टा अगाडि र दायाँ खुट्टा पछाडि हुने गरी प्रत्यालीढ आसनमा रहेकी, समस्त कामना पूर्ति गर्ने, आद्याशक्ति, अघोर स्वरूप भएकी, तीखा डरलाग्दा दाँत भएकी, डरलाग्दो आवाज निकाल्ने, माथि फर्केको कपाल भएकी, तीनवटा आँखा भएकी, महापात्र (कपाल) धारण गर्ने, कल्याणमूर्ति, शुष्क स्तन भएकी, पातलो कम्मर भएकी, विशाल सर्पलाई घाँटीको गहना बनाएकी, रौद्र स्वरूपकी, मुण्डमालाले विभूषित भएकी यस्ती मातृदेवीको चित्र बनाएर सो चित्रमा विभिन्न किसिमका पूजासामग्रीहरूले तिनको पूजा गर्नू ॥ ६२–८२ ॥

**चक्रं तु कारयेत् तत्र पानगोष्ठ्यां[1] परस्परम् ।**
**ततो वर्णांश्च संयोज्य योगेश्यङ्गेषु भैरव ॥ ८३ ॥**
**आचार्येणातिसुधिना यथा वच्मि तथा श्रृणु ।**
**संहारमादितः कृत्वा विन्यसेद् वर्णमातृकाम् ॥ ८४ ॥**
**वीरेशाख्यं शिखायां च मूर्द्धान्ते सुरसुन्दरि ।**
**नीरं च पार्थिवं तुर्यं चित्रभानुं[2] शिरोरुहे ॥ ८५ ॥**
**षोडशान्तं च शिरसि जादिढान्तास्थिभूषणे ।**
**द्विजिह्वमूर्ध्वनयने प्रज्ञा वामे उ मध्यके ॥ ८६ ॥**

---

१ पानगोष्ठ्या–ख,ग ।
२ चित्रभानुंमध्ये त्र र नु वर्ण केरमेट भएको–क ।

आत्मतत्त्वं नासिकायां त्रिपत्रं[1] वक्त्रमण्डले ।
पूर्णा[2] तृतीयं द्विरदं[3] दंष्ट्रयोरुभयोरपि ॥ ८७ ॥
भीषणं चावमार्गे तु अश्वार्णं[4] वामकर्णके ।
तथात्र भूषणे योज्ये चन्द्रार्ककृतकुण्डले ॥ ८८ ॥
दक्षिणे श्रवणे[5] चापं कृतान्तं भूषणं न्यसेत् ।
चापं शिरयुतं[6] कण्ठे योजनीयं कपालधृक् ॥ ८९ ॥
क्रूरान्तं दक्षिणे स्कन्धे वर्णान्तं वामतो न्यसेत् ।
स्यन्दनान्तं[7] नरान्त्रेषु[8] कालान्तं भुजगे न्यसेत् ॥ ९० ॥
मर्माद्यं च स्तने वामे समीरान्तं तु दक्षिणे ।
पक्षेशं दक्षिणे बाहौ वामे न्यस्य द्विपं हर ॥ ९१ ॥
ऊर्ध्वरावं वामकरे तस्याद्यं[9] दक्षिणे करे ।
पात्रे चैकादशान्तस्थं शक्त्याद्यं हृदये न्यसेत् ॥ ९२ ॥
वर्गान्तं सानुनासं च वामदक्षिणपार्श्वयोः ।
पक्षीशस्याद्यगं जीवे नाभिस्थं दारिताननम्[10] ॥ ९३ ॥
नितम्बे[11] चामृतार्णं तु वाग्भवान्तं च योनिगम् ।
तुर्यान्तं गुह्यसंस्थाने योज्यं भस्मविलेपन[12] ॥ ९४ ॥
नपुंसकाद्यौ द्वौ वर्णौ ऊरुसव्यापसव्यके ।
सृष्टिस्थं दक्षिणं जानु[13] तदन्तं वामतो न्यसेत् ॥ ९५ ॥
नपुंसकान्तौ द्वौ वर्णौ पादौ दक्षिणवामगौ ।
प्रणवं विष्णुमुण्डे तु वामपादासनं विदुः ॥ ९६ ॥
चन्द्राश्चतुर्दशं देव ब्रह्ममुण्डे नियोजयेत् ।
द्विजिह्वान्तं रुद्रमुण्डे काल्या आसनमुत्तमम् ॥ ९७ ॥

---

१ त्रिपत्रं]संशोधित पाठ ; त्रिपञ्च–क,ग ; त्रिपंच–ख ।
२ सामान्य केरमेट भएको–क ।
३ तृतीयं द्विरदं]संशोधित पाठ ; तृतीयद्विदशं–क, ख, ग ।
४ अश्वान्तं–क ।
५ व अक्षर टुटेको–क ।
६ शिरयुतं]संशोधित पाठ ; शरयुतं–क, ख, ग ।
७ स्यन्दनार्ण्णं–ख ; स्यन्दनार्णं–ग ।
८ नरान्त्रेषुं]संशोधित पाठ ; षु अक्षर टुटेको–क ; नरान्तेषु–ख, ग ।
९ द्यं अक्षर टुटेको–क ।
१० दारिताननौ–क ।
११ नि अक्षरको अगाडिको भाग अलिकति टुटेको–क ।
१२ भस्मविलेपने–क ।
१३ जा अक्षरको अगाडिको भाग अलिकति टुटेको–क ।

**एवं न्यस्य महादेव शुष्कायां मातृकां शुभाम् ।**
**पश्चात् पूजा प्रकर्तव्या नानाकारा सुसिद्धिदा ॥ ९८ ॥**
**पायसैः कृशरैर्मिश्रैर्मोदकैर्लोपिकादिभिः ।**
**पानकानि विचित्राणि मांसानि विविधानि च ॥ ९९ ॥**
**महातैलेन दीपाँश्च कन्दलस्थान् प्रदापयेत् ।**
**पुष्पाणि सुविचित्राणि पशूनष्टविधानपि ॥ १०० ॥**
**एवं यष्ट्वा तु देवेशीं वित्तशाठ्यविवर्जितम् ।**
**पश्चात् सन्तोषयेद् भक्त्या गुरुं परमकारणम् ॥ १०१ ॥**
**योगिनीमथ देवेश तत् पङ्क्तिं दक्षयेत् तथा ।**
**एवं विधानं तत् कृत्वा कौलिकः सफलो भवेत्[1] ॥ १०२ ॥**

इति श्रीमदुत्तरपीठोद्भूते श्रीश्रीनाथावतारिते श्रीकालिकाकुले पञ्चशते द्वितीयः पटलः ॥

पानगोष्ठीको आयोजना गरी उक्त पानगोष्ठीमा चक्रपूजनको समेत आयोजना गर्नू । त्यसपछि उक्त चित्ररूप मातृकाको विभिन्न अङ्गमा बुद्धिमान् आचार्यले संहारमातृकान्यास गर्नू । (यसपछि श्लोक ९७ सम्म संहारमातृकान्यासको उद्धार गरिएको छ) । यसरी संहारमातृकान्यास गरिसकेपछि उपर्युक्त शुष्कस्वरूपकी मातृकाको पूजा गर्नू । पूजाका क्रममा खीर, लड्डु, विभिन्न किसिमका पेय पदार्थहरू, विविध किसिमका पशुपंक्षीका मासुका परिकारहरू, महातैलमा बालिएको दियो, विभिन्न प्रकारका फूलहरू, आठप्रकारका पशुपंक्षीहरू बलिका रूपमा देवीलाई समर्पण गरेर पूजा गरेपछि गुरुलाई भक्तिपूर्वक दानदक्षिणा दिई सन्तुष्ट गराउनू । त्यसैगरी योगिनी, भैरव, गणेश आदिको पङ्क्तिलाई पनि विधिपूर्वक पूजा आराधना गर्नू । यी सबै विधिविधानपूर्वक पूजा आराधना गरेमा अवश्य पनि कौलिकको जन्म सफल हुनेछ ॥ ८३–१०२ ॥

उत्तरपीठमा उद्भव भएको श्रीनाथद्वारा अवतारित **कालिकाकुलपञ्चशतक** नामक ग्रन्थमा तन्त्राचार्य माधवप्रसाद लामिछानेद्वारा नेपाली भाषानुवादसहित सम्पादित दोस्रो पटल पूर्ण भयो ।

---

१ सफलो भवेत्]संशोधित पाठ ; सफलं भवेत–क ; सफलम्भवेत्–ख; सहलम्भयेत्–ग ।

## तृतीयः पटलः

**॥ श्रीभैरव्युवाच ॥**
**श्रृणु भैरवराजेन्द्र कथयामि महाद्भुतम् ।**
**यन्न कस्य चिदाख्यातं सिद्धानां खेचरीषु वा ॥ १ ॥**
**तव स्नेहात् प्रवक्ष्यामि सिद्धक्रमचतुष्टयम्[१] ।**
**अनाख्येया[२] परानिष्ठा ज्ञात्वा मोक्षप्रदायिका ॥ २ ॥**
**प्रथमः क्रमपूर्वस्तु सिद्धपूर्वो द्वितीयकः ।**
**संहारस्तु तृतीयः स्यादनाख्येयश्चतुर्थकः ॥ ३ ॥**
**एतेषां[३] क्रम राजानां सिद्धसंज्ञां[४] वदामि ते ।**
**पश्चान्मन्त्रं महाभीमं विद्यां सङ्कर्षिणीं तथा ॥ ४ ॥**

श्रीभैरवीले भनिन्–

हे भैरवराज ! अब म एउटा महान् अद्भुत कुरो बताउँछु जुन कुरो अहिलेसम्म सिद्ध, खेचरीगण तथा योगिनीहरू कसैलाई पनि बताएको छैन । तिम्रो स्नेहले चार प्रकारको सिद्धक्रम बताउँछु। ती चार प्रकारका सिद्धक्रमहरूमध्ये पहिलो क्रमपूर्व, दोस्रो सिद्धपूर्व, तेस्रो संहार र चौथो अनाख्येयक्रम रहेका छन् । अनाख्येयक्रमरूप जुन परानिष्ठा हो त्यो मोक्ष प्रदान गर्नेवाला छ । ती चारवटा सिद्धक्रमहरूमध्ये पहिलो जुन क्रमपूर्वनामक सिद्धक्रम छ त्यसमा युगैपिच्छे अवतारकका रूपमा रहेका सिद्धहरूको उल्लेख गर्नेछु र त्यसपछि सिद्धपूर्वनामक क्रमको उल्लेख गर्नेछु । त्यसपछि महाभीममन्त्र तथा सङ्कर्षिणीविद्याको उपदेश तिमीलाई गर्नेछु ॥ १–४ ॥

**आद्ये युगे[५] यथा यातं त्रेतायां द्वापरे तथा ।**
**चतुर्थे तु महाघोरे समासाच्छृणु[६] भैरव ॥ ५ ॥**
**खगेन्द्रनाथो विज्ञाम्बा[७] समायातौ कृते युगे ।**

---

१ क्र अक्षर टुटेको–क ।
२ अनाख्य या–ग ।
३ एते टुटेको–क ।
४ संज्ञा–क ।
५ युग–ग ।
६ समासा पाठ पूरै टुटेको तथा च्छृणु भै पाठको माथिल्लो भाग टुटेको–क ।
७ विज्ञांवा–ग ; विज्जाम्बा–तन्त्रालोक ।

**द्वितीये कूर्मनाथस्तु मङ्गलाम्बासमन्वितः ॥ ६ ॥**
**तृतीये मेषनाथस्तु काममङ्गलया सह ।**
**चतुर्थे[1] मीननाथस्तु कोङ्कणाम्बासमायुतः[2] ॥ ७ ॥**
**तस्य च क्रीडमानस्य सञ्जाता द्वादशात्मजाः ।**
**तेषां नामानि वक्ष्यामि यथाम्नायः कुलेश्वर ॥ ८ ॥**
**भट्टोऽमरो महेन्द्रश्च वरदो वाऽथ वल्कलः ।**
**चित्रश्चैव अहीन्द्रश्च अलिश्चैव गजेन्द्रकः ॥ ९ ॥**
**विन्ध्यो महीधरश्चैव गुडिको द्वादशः स्मृतः ।**
**एषा परम्परा याता[3] सिद्धानां त्रिदशेश्वर ॥ १० ॥**
**अथान्यच्श्रृणु[4] सङ्क्षेपाद् दुर्विज्ञेयं महेश्वर ।**
**एभ्यः षडूर्ध्वरेतस्काः साधिकारास्तथापरे ॥ ११ ॥**
**तेषां च[5] प्रविभागं तु[6] कथयामि वृषध्वज ।**
**भट्टो महेन्द्रनाथश्च वल्कलश्च तृतीयकः ॥ १२ ॥**
**अहीन्द्रश्च गजेन्द्रश्च षष्ठश्चैव महीधरः ।**
**एतेऽधिकाररहिताः कथिताः सुरसत्तम ॥ १३ ॥**
**अमरो वरदेवश्च चित्रोऽलिर्विन्ध्यसंज्ञकः ।**
**गुडिकः पादनाथस्तु षष्ठश्च परिकीर्तितः ॥ १४ ॥**
**एते षट्काधिकारास्तु[7] कथिता भैरवेश्वर ।**
**निष्क्रियानन्दनाथस्तु[8] ज्ञानदीप्त्या सहैकतः ॥ १५ ॥**
**विद्यानन्दश्च रक्ता च द्वितीयं कथितं तव ।**
**शक्त्यानन्दो[9] महानन्दा[10] तृतीयं सिद्धपूजितम् ॥ १६ ॥**
**शिवानन्दस्तथा ज्ञेया समया तच्चतुर्थकम् ।[11]**

---

१ चतु टुटेको–क ।
२ कुंकुणाम्बा–तन्त्रालोक ।
३ यातं–क ।
४ अथान्यच्छृणु]संशोधित पाठ ; अथान्यं श्रृणु–क,ख,ग ।
५ तेषां तु–ख,ग ।
६ च–ख ।
७ पछिल्लो का अक्षर लेख्न छुटेको–क ।
८ निष्क्रियानन्दनाथश्च–ख,ग ।
९ शक्त्यानन्दो]संशोधित पाठ ; शक्त्यानन्दं–क,ख,ग ।
१० महानन्दा]संशोधित पाठ ; महानन्दं–क,ख,ग ।
११ यो पाठ श्रीतन्त्रालोकको विवेक टीकामा देवीपञ्चशतिकबाट उद्धृत गरिएको पाठमा आधारित छ । शिवानन्दो महानन्दा समयातं चतुर्थक–क ; शिवानन्दो महानन्दा समायातं चतुर्थकं–ख ; शिवानन्दो महानन्दा समायातं चतुर्थकम्–ग ।

**खगेन्द्राद्यादि सिद्धानां कथिता गुरुसन्ततिः ॥ १७ ॥**
**एतद्धि[1] कुलशास्त्रस्य रहस्यं शिवनिर्मितम् ।**
**न कस्यचिन्मयाख्यातं त्वदृते परमेश्वर ॥ १८ ॥**

हे भैरव ! पहिलो सत्ययुग, दोस्रो त्रेतायुग, तेस्रो द्वापरयुग र चौथो महाघोरस्वरूप कलियुगमा अवतीर्ण भएका कुलाम्नायका अवतारक सिद्धहरूको सङ्क्षेपमा उल्लेख गर्छु, सुन । कृतयुग अर्थात् सत्ययुगमा खगेन्द्रनाथ तथा उनकी पत्नी विज्ञाम्बाको अवतार भयो । दोस्रो त्रेतायुगमा कूर्मनाथ तथा उनकी पत्नी मङ्गलाम्बाको अवतार भयो । तेस्रो द्वापरयुगमा काममङ्गलाका साथमा मेषनाथले अवतार लिए । चौथो कलियुगमा कोङ्कणाम्बाका साथमा मीननाथको अवतार भयो । कलियुगमा अवतार लिन पुगेका मीननाथ आफ्नी पत्नी कोङ्कणाम्बाका साथ सांसारिक क्रीडामा मग्न रहँदा उनका बाह्रजना पुत्रहरू उत्पन्न भए । मीननाथ र कोङ्कणाम्बाका ती बाह्रजना पुत्रहरूको नाम कुलाम्नायअनुसार यसप्रकार रहेको छ - १. भट्ट २. अमर ३. महेन्द्र ४. वरद ५. वल्कल ६. चित्र ७. अहीन्द्र ८. अलि ९. गजेन्द्र १०. विन्ध्य ११. महीधर १२. गुडिक । ती बाहजनामध्ये छजना ऊर्ध्वरेता अर्थात् कुलपरम्परामा अधिकारहीन छन् भने अन्य छजनाचाहिँ साधिकार रहेका छन् । भट्ट, महेन्द्र, वल्कल, अहीन्द्र, गजेन्द्र र महीधर यी छजना कुलपरम्परामा अधिकार नभएका ऊर्ध्वरेता हुन् भने अमर, वरदेव, चित्र, अलि, विन्ध्य र गुडिक यी छजना कुलपरम्परामा अधिकारले युक्त रहेका छन् । निष्क्रियानन्दनाथ तथा उनकी पत्नी ज्ञानदीप्ति, विद्यानन्दनाथ तथा उनकी पत्नी रक्ता, शक्त्यानन्दनाथ तथा उनकी पत्नी महानन्दा एवं शिवानन्द तथा उनकी पत्नी समया खगेन्द्रनाथ आदि सिद्धौघ परम्पराका गुरु एवं गुरुपत्नीहरू हुन् । शिवद्वारा निर्मित यो कुलशास्त्रको रहस्य हे परमेश्वर ! मैले तिमीबाहेक अरू कसैलाई बताएको छैन ॥ ५- १८ ॥

**तथान्यच्श्रृणु[2] सङ्क्षेपाद् दुर्विज्ञेयं महेश्वर ।**
**विश्वयोनिं जगद्योनिं भावयोनिं[3] प्रजापतिम् ॥ १९ ॥**
**पञ्चमं कुलयोनिं च पत्नीस्तेषां श्रृणुष्व च ।**
**रेतयोनिर्बीजयोनिः सर्गः[4] सृष्टिस्तथैव[5] च ॥ २० ॥**

---

१ एतद्धिः–क ।
२ तथान्यच्छ्णु]संशोधित पाठ ; तथान्यं श्रृणु–क,ख,ग ।
३ भावयोनिं]संशोधित पाठ ; वयोनिं–क,ख,ग ।
४ सर्गः]संशोधित पाठ ;सृज–क,ख,ग ।
५ सृष्टिः]संशोधित पाठ ; सृष्टिं तथैव–क,ख,ग ।

**पञ्चमं क्षोभयोनिश्च[1] क्षेत्ररूपेण आगताः ।**
**क्षेत्रञ्च क्षेत्रपालश्च शिशुत्वाद् वटुकः स्मृतः ॥ २१ ॥**
**भूतानि भूतपत्नीश्च[2] दिङ्मात्रीमपि योगिनीम् ।**
**क्षेत्रपालेन बल्यर्थं यजेत् तत् परमेश्वर[3] ॥ २२ ॥**

हे महेश्वर ! जान्न ज्यादै कठिन अर्को कुरो सङ्क्षेपमा सुन । विश्वयोनि, जगद्योनि, भावयोनि, प्रजापतियोनि र कुलयोनि यी पाँच गुरुहरू हुन् तथा रेतयोनि, बीजयोनि, सर्गयोनि, सृष्टियोनि र क्षोभयोनि यी पाँच माथि बताइएका गुरुपञ्चकका क्षेत्ररूपले वा शक्तिका रूपले आएका हुन् । शिशु भएकाले क्षेत्रपाल बटुक (बटुकभैरव) का रूपमा चिनिन्छन् । बलिप्रदानका लागि ती क्षेत्रपाल वा बटुकभैरव, क्षेत्ररूप शक्तिपञ्चक, चतुर्थपटलमा वर्णन गरिने सिद्धरूप महाभूतहरू, ती सिद्धरूप महाभूतका पत्नीरूप कहिएका तन्मात्राहरू, दिङ्मातृ एवं योगिनीलाई पूजा गर्नू ॥ १९-२२ ॥

**कुलेश्वरः कुलेश्वर्या गणेशो गुरुसन्ततिः ।**
**शवरी कुलदूती च खचक्रं शक्तिपुष्करम् ॥ २३ ॥**
**एतानि पूजयेद् देव मन्त्रेणाद्यक्षरेण[4] च ।**
**कन्दचक्रान्तरे[5] स्थाने पूजयेत्परमेश्वर ॥ २४ ॥**
**अथवा बाह्यतो देव द्विपञ्चदलके कजे ।**
**प्रपूज्या योनयः पञ्च मध्ये कालान्तकारिणी ॥ २५ ॥**
**द्वितीये पञ्चके देव पत्नीस्तेषां प्रपूजयेत् ।**
**सिद्धा द्वाराग्रगाः पूज्या ये चान्ये गुरुसन्ततिः ॥ २६ ॥**
**मण्डलं[6] रक्तवर्णाभं सुसमं सुमनोरमम्[7] ।**
**नान्येन रजसा[8] कार्यं[9] विलोमान्मरणं भवेत् ॥ २७ ॥**

कुलेश्वरीका साथ कुलेश्वर, गणेश, गुरुसन्तति, शवरी, कुलदूती, खचक्र, शक्तिपुष्करहरूलाई आद्यक्षर बीजमन्त्रले कन्दचक्रको भित्री स्थानमा आभ्यन्तरिक पूजा गर्नू अथवा पाँच पत्रवाला दुईवटा कमलमा बाह्य पूजा

---

१ नि अक्षर पूरै टुटेको तथा ञ्चको अगाडिको भाग अलिकति टुटेको–क ।
२ भूतपत्नीश्च]संशोधित पाठ ; भूतपत्नीञ्च–क ; भूतपत्नीं च–ख,ग ।
३ तत्पर टुटेको–क ।
४ मन्त्रेणाद्यक्षरेण च–क,ख ।
५ न्द अक्षर टुटेको–क ।
६ वण्डलं–क ।
७ सुमनोहरम् लेखी र अक्षरका पछाडि म थपिएको छ र सुमनोरमम् बनाउन खोजेको स्पष्ट देखिन्छ तर ह मेटिएको छैन, हको मुनि..लेखिएको–ग ।
८ रक्त–क ।
९ कार्यो–ग ।

गर्नू। विश्वयोनि आदि गुरुपञ्चकलाई प्रथम पाँच पत्रवाला कमलका पातहरूमा तथा काललाई आफूभित्र लवलीन गर्ने कालीलाई मध्यकर्णिकामा पूजा गर्नू। दोस्रो पाँच पत्रवाला कमलमा गुरुपञ्चकका पत्नी कहिएका क्षेत्ररूप रेतयोनि आदिको पूजा गर्नू। खगेन्द्र आदि सिद्ध एवं अन्य गुरुसन्ततिको पूजा द्वारको अग्रभागमा गर्नू। पूजाका लागि बनाइने मण्डल रक्तचन्दन वा सिन्दूरले बनाइएको रातो रङको अत्यन्त मनोहर हुनुपर्दछ। रातो रङका अतिरिक्त अन्य रङले बनाएमा वा विधिमा बताएभन्दा उल्टो पर्न गएमा मरण हुन्छ ॥ २३–२७ ॥

**अत्र मन्त्रं[1] प्रवक्ष्यामि श्रृणु खेचक्रनन्दन ।[2]**
**उद्धरिष्यामि देवेश योगिनीविग्रहाच्छिवात्[3] ॥ २८ ॥**
**अमृतार्णं तु[4] ब्रह्मार्णं[5] त्रिपिण्डं ब्रह्मसत्परम् ।**
**सा देवी स शिवश्चैव[6] विश्वं तस्यान्यविस्तरः[7] ॥ २९ ॥**
**ग्रन्थकोटिसहस्राणामेतत् सारं विचिन्तयेत्[8] ।**
**प्रभावोऽस्य[9] न शक्येत वक्तुं कल्पायुतैरपि[10] ॥ ३० ॥**
**इदं तु निष्कलं[11] व्याप्तिः[12] सकलं कथ्यते पुनः[13] ।**
**हृदयार्णं च[14] गुह्यार्णं[15] द्वावेतौ शिरसोऽन्ततः[16] ॥ ३१ ॥**
**योजनीयो महादेव वामस्थकर्णभूषणे ।**
**वामजानुयुतं देव दद्याच्छिरसि शेखर[17] ॥ ३२ ॥**

---

१ अ न मं तं–ग ।
२ अत्र पछाडिका अक्षरहरू मसी उडेकाले नबुझिने भएको–ख ।
३ वाको पछाडि चिह्न दिएर सोही हरफको सीधा देब्रेपट्टि त् लेखिएको–ग ।
४ अमृतार्णवं तु–ग ।
५ ब्रह्माण्डं–ख ; ब्रह्मांडं–ग ।
६ शिवश्चैव] संशोधित पाठ ; शिवस्तन, स्तको मुनि ..लेखिएको–ग ।
७ विश्वं तस्यान्यविस्तरः]संशोधित पाठ ; विश्व तस्यान्यविस्तरः–क ; विश्वन्तस्यान्यविस्तरः–ख,ग ।
८ मेतत्यारम्वि..र्भवेत्, भवेत्का मुनि...लेखिएको–ग ।
९ प्रभावोऽस्य– तन्त्रालोक ।
१० कल्पशतैरपि– तन्त्रालोक ।
११ निःकला–क ।
१२ व्याप्तिः]संशोधित पाठ ; व्याप्ति–क,ख,ग ।
१३ भ्रमःका मुनि...लेखिएको–ग ।
१४ च अक्षर पछि थपिएको देखिन्छ–क ; हृदयार्णन्तु–ख; हृदयार्णं तु–ग ।
१५ गुह्यान्तं–क ।
१६ शिरसान्ततः–ग ।
१७ दद्याच्छिरसि शेखर]संशोधित पाठ ; दद्याच्छिर शेषर–क ; दद्याच्छिरशेखर–ख,ग ।

एतद् बीजयुगं चादौ मध्ये संज्ञां[1] प्रकल्पयेत् ।
पश्चात् पादेति देवेश सिद्धानां गुरुसन्ततौ ॥ ३३ ॥
यथा योनौ द्वियोनीषु मन्त्रमेतत् प्रकीर्त्तितम्[2] ।
अस्याः परतरं किञ्चिन्नास्ति सत्यं कुलागमे ॥ ३४ ॥
दक्षवाहुस्थितं वर्णं महानादेनसंयुतम् ।
तस्याधः शिरसोऽन्तःस्थं महायोनिमहायुतम् ॥ ३५ ॥
वामजानुशिरःक्रान्तं प्रोद्धरेत् पिण्डनायकम् ।
अनेन ज्ञातमात्रेण योगयुक्तचा महेश्वर ॥ ३६ ॥
वशीकरोति[3] वीरेन्द्रो ब्रह्मादीन् योगिनीस्तथा[4] ।
अथान्यच्चश्रृणु देवेश बीजं बीजवरोत्तमम् ॥ ३७ ॥
सव्यश्रवणपाणिस्थं हृदयं नाभिसंयुतम्[5] ।
केवलं वामपार्श्वस्थं वामकर्णं समुद्धरेत् ॥ ३८ ॥
अधःस्थाद्योजयेद् देव कपालार्णं तृतीयकम् ।
नारान्त्रं वामपादाधो हरिमुण्डेनसंयुतम् ॥ ३९ ॥
जीवार्णं[6] योनिबीजेन संयुक्तं[7] सप्तमं हर ।
गुह्यं[8] शिरोरुहाद्यस्थं दक्षिणोरु समुद्धरेत् ॥ ४० ॥
रन्ध्रसंज्ञा महाविद्या शुष्का विग्रहकोद्धृता[9] ।
दुर्लभा त्रिदशेशानां सिद्धानां खेचरीषु च ॥ ४१ ॥
अस्याः संस्मरणादेव मेरुतुल्यो गुरुर्भवेत् ।
भस्मसाद्याति सद्यैव पापं यत् पूर्वसञ्चितम् ॥ ४२ ॥
अनया ज्ञातया देव कालिकाकुलजातया ।
सप्तसप्ततिकोटीनां विद्यानां[10] परमार्थतः ॥ ४३ ॥
अधीता तेन देवेश किमन्यैर्विस्तरेण वा ।
एवमेव हि या विद्या पूज्यते पूजकेन तु ॥ ४४ ॥

---

१ संज्ञा–ग ।
२ मन्त्रमेतत् प्रकीर्त्तितं–क ; मन्त्रमेततत्प्रकीर्त्तितं–ख ।
३ वशीकारोति–ख,ग ।
४ ब्रह्मादीनयोगिनीस्तथा–क ।
५ तम् टुटेको–क ।
६ जीवान्तं–क ।
७ युक्तं टुटेको–क ।
८ गुहं–ख ।
९ ह अक्षर लेखिएको छैन–क ।
१० पहिले लेख्न छुटेको र पछि सोही स्थानमाथि देवनागरी लिपिमा थपिएको–ख ।

**भाववीर्यप्रदातृत्वं नाभवेयुश्च सिद्धिदाः ।**
**नानया च विना किञ्चित् किमन्यैर्विस्तरैः शिव ॥ ४५ ॥**

अब म योगिनीको विग्रहस्वरूप शिववक्त्रबाट मन्त्रको उद्धार गर्नेछु तसर्थ हे खेचरनन्दन ! त्यसलाई सुन । (यसपछि श्लोक २९क मा शीघ्र विद्या प्रदान गर्ने त्र्यक्षर मन्त्रको उद्धार गरिएको छ) । उक्त मन्त्र स्वयं देवी, शिव वा विश्व हो । अन्य सम्पूर्ण विस्तार सोही मन्त्रको स्वरूप हो । यस मन्त्रलाई करोडौं ग्रन्थहरूको सारका रूपमा चिन्तन गर्नुपर्छ । यस मन्त्रको प्रभाव दशौं हजार कल्पमा पनि बताएर सकिँदैन । (यसपछि श्लोक ४० सम्म सिद्धौघ गुरुपरम्पराका सिद्ध गुरुहरूको पूजाका लागि उपयोगी मन्त्र एवं त्यसको माहात्म्य तथा रन्ध्रविद्यानामक नवाक्षरीविद्याको उद्धार गरिएको छ ) । यो रन्ध्रसंज्ञक नवाक्षरी महाविद्या देवता, सिद्ध एवं खेचरीगणहरूका लागि पनि दुर्लभ रहेको छ । यस विद्याको स्मरणमात्रले पनि साधकले मेरुतुल्य गुरुत्व प्राप्त गर्दछ । उसका पूर्वसञ्चित सम्पूर्ण पापहरू नष्ट हुन्छन् । कालिकाकुल परम्पराभित्रको यो विद्या जान्नाले साढे सात करोड मन्त्र वा विद्याको ज्ञान पाए सरह हुन्छ । यसभन्दा बढी के भन्नू ? यदि पूजकले यस विद्याको पूजा गर्‍यो भने विभिन्न किसिमका सिद्धिहरू प्राप्त हुन्छन् तथा भावनाबल प्रदान गर्ने सामर्थ्य उत्पन्न हुन्छ । पूजकले यस विद्याको पूजन गर्‍यो भने यस विद्याबाट सबै कुराको प्राप्ति हुन्छ, यस विना केही पनि हुँदैन, यसभन्दा बढी के भन्नू ? ॥ २८-४५ ॥

**इयं देव महाविद्या पूज्यते पूजकेन च[1] ।**
**नानाविधानि द्रव्याणि कुलमार्गस्थितानि च ॥ ४६ ॥**
**नानाकाराणि मांसानि खजलस्थलजानि च ।**
**शिवानि माल्यपुष्पाणि नानाधूपानि भैरव ॥ ४७ ॥**
**भक्ष्यभोज्यानि सर्वाणि[2] फलमूलानि यानि च ।**
**वृन्तैश्च[3] शालिपुष्पैश्च भवेद् दीपान् प्रदापयेत् ॥ ४८ ॥**
**नरतैलेन दीपाँश्च[4] कन्दलस्थान् तु[5] वीरराट् ।**
**सर्वं निवेदयेदेवं यत्किञ्चिद् द्रव्यसम्भवम् ॥ ४९ ॥**
**कालीति विग्रहमन्यद्[1] विश्वरूपं समन्ततः ।**

---

१ पूजकेन चेत्–ख,ग ; के अक्षर निर्धारित स्थानभन्दा केही अगाडि छ, पछि थपिएको जस्तो बुझिन्छ–ख ।
२ सर्वाणि पाठ नभएको–क ।
३ वृत्तैश्च–ख,ग ।
४ दीपाश्च–ग ।
५ कन्दलस्था तु–ख,ग ।

**पूर्णेन्दुसकलाकाराममृतोर्मितरङ्गिणीम्[२] ॥ ५० ॥**
**सृष्टिरूपां च विश्वस्मिंश्चित्कलानन्दरूपिणीम्[३] ।**
**ध्यायेत परमेशानीं[४] खेचरत्वथसिद्धिदाम् ॥ ५१ ॥**
**एषः[५] सृष्टिक्रमो नाम कथितः कालिकाकुले ।**
**एतद्रहस्यं परमं नाख्येयं प्राकृते जने ॥ ५२ ॥**
**देयं कुलोद्भवानां च वीराणामुन्नतात्मनाम् ।**
**अन्यथा यो ददात्येव मम द्रोहः स भैरव[६] ॥ ५३ ॥**

इति श्रीमदुत्तरपीठोद्भूते श्रीश्रीनाथावतारिते श्रीकालिकाकुले पञ्चशते तृतीयः पटलः ॥

पूर्णिमाको चन्द्रमाझैँ स्वरूप भएकी, चैतन्यस्वरूप अमृतसागरमा उर्लेकी तरङ्गस्वरूप भएकी, संसारमा सृष्टिका रूपमा विलसित, चित् एवं आनन्दरूप कलाले युक्त भएकी, खेचरत्व सिद्धि प्रदान गर्ने त्यस्ती विश्वरूपिणी कालीको ध्यान गर्नू तथा कुलमार्गमा उपयोगी मानिएका द्रव्यहरू, जलचर, थलचर र खेचर जीवजन्तु तथा पंक्षीको मासुका विभिन्न परिकारहरू, सुन्दर फूलमालाहरू, नाना प्रकारका धूपहरू, खाद्यपदार्थहरू, शालिपुष्पहरू, वृन्तहरू आदिद्वारा कालीको पूजा गर्नू । महातैलद्वारा बत्तीहरू बाल्नू तथा जेजति द्रव्यहरू सम्भव हुन्छ सबै कालीलाई समर्पण गर्नू । उपर्युक्त आराधनाक्रमलाई कालिकाकुलपरम्परामा सृष्टिक्रम भनिन्छ । यो परम रहस्यक्रम कालिकाकुलपरम्परामा दीक्षित नभएका प्राकृतजन (दीक्षापूर्वक संस्कारसम्पन्न नभएका)हरूलाई बताउनु हुँदैन । कालिकाकुलपरम्परामा दीक्षित भएका, वीरभावमा आरूढ भएका, उन्नत एवं उदात्त चरित्र भएकाहरूलाई मात्र यो परम रहस्यक्रम दिनुपर्छ । अन्यथापूर्वक कसैले यो रहस्यक्रम अनधिकारी व्यक्तिलाई दिन्छ भने हे भैरव ! उक्त कार्य मप्रतिको द्रोह हो ॥ ४६–५३ ॥

॥ उत्तरपीठमा उद्भव भएको श्रीनाथद्वारा अवतारित **कालिकाकुलपञ्चशतक** नामक ग्रन्थमा तन्त्राचार्य माधवप्रसाद लामिछानेद्वारा नेपाली भाषानुवादसहित सम्पादित तेस्रो पटल पूर्ण भयो ॥

---

१ विग्रहं मन्येद्–क ; विग्रहं मन्यद्–ख,ग ।
२ ममृतोस्मि,स्मिकोमुनि..दिइएको छ–ग ।
३ विश्वेस्मिंश्चत्कलानन्दरूपिणीं–क ; विश्वेस्मिंश्चत्कलानन्दरूपिणीं–ख ।
४ ध्यायेत्परमेशानीं–ख,ग ।
५ एषः]संशोधित पाठ ; एष–क,ख,ग ।
६ भैरवः–क,ख ।

# चतुर्थः पटलः

**॥ श्रीभैरव्युवाच ॥**
**अथ भैरवराजेन्द्र कथयामि समासतः ।**
**श्रृणु चान्यत् पदार्थं तु[1] अवतारं क्रमस्थितम् ॥ १ ॥**
**सारेऽस्मिन्[2] कुलसद्भावे[3] यथा ज्ञास्यसि तत् पदम् ।**
**तथा ते कथयिष्यामि ज्ञानं परमदुर्लभम् ॥ २ ॥**

श्रीभैरवीले भनिन्–

भैरवहरूमा श्रेष्ठ हे भैरवराज ! अब म पहिलो सृष्टिक्रमपछि दोस्रो अवतारक्रम सङ्क्षेपमा बताउँछु, सुन। साररूप कालिकाकुलसद्भावमा शाम्भव पदरूप परम दुर्लभ ज्ञान तिमी जसरी ग्रहण गर्न सक्छौ म त्यसरी नै तिमीलाई बताउनेछु ॥ १–२ ॥

**ऊर्ध्वे तु संस्थिता सृष्टिः परमानन्दरूपिणी ।**
**पीयूषवृष्टिं वर्षन्ती शाम्भवी परमा[4] कला ॥ ३ ॥**
**अधः संहार[5] विज्ञेयो महानर्चिःकृतान्तकः[6] ।**
**घोरो ज्वालावलीयुक्तो[7] दुर्धर्षो ज्योतिषां निधिः ॥ ४ ॥**
**तयोर्मध्ये परं तेज उभयानन्दसुन्दरम्[8] ।**
**अवतारः स विज्ञेय उभाभ्यां व्यापकः शिवः ॥ ५ ॥**
**परस्परसमाविष्टौ[9] चन्द्रेऽग्निष्टीटिभे शशी[10] ॥**
**चन्द्रं[11] सृष्टिं विजानीयादग्निः[12] संहार उच्यते ॥ ६ ॥**

---

१ परार्थन्तु–ख ; परार्थं तु–ग ।
२ न अक्षर टुटेको–क ।
३ कु अक्षर टुटेको–क ।
४ रमा पाठ टुटेको–क ।
५ मंदार–ग ।
६ ज्ञेयो महानर्चिःकृतान्तकः पाठ मसी उडेकाले नबुझिने भएको–ख ।
७ घोरोज्वालावलीयुक्तो]संशोधित पाठ ; घोराज्वालावलीमुक्तो–क,ख,ग ।
८ सुन्दर–ग ।
९ परस्परं पाठ मसी उडेकाले नबुझिने भएको–ख ।
१० रवि कीटितौ–क ; रन्द्रे (चन्दं) रविकोटिभौ–ग ।
११ चन्द्र–क ; चन्द्रःभन्दा अगाडि एउटा दण्ड दिइएको छ, त्यसभन्दा अगाडि दुईवटा जति अक्षर अट्ने ठाउँ खाली राखिएको–ग ।
१२ सृष्टिं–क,ख ।

**अवतारो रविः प्रोक्तो[1] मध्यस्थः[2] परमेश्वर[3] ।**
**मनस्तत्त्वं भवेत् सृष्टिरहङ्कृत् क्षय[4] उच्यते ॥ ७ ॥**
**धीतत्त्वमवतारश्च[5] तेजः संव्यापकं परम् ।**
**तं[6] रविं विद्धि सर्वज्ञ हृदयं कुलकौलिकम् ॥ ८ ॥**

माथि परम आनन्दस्वरूप सृष्टि रहेको छ जो अमृतको वर्षा गराउँदो चन्द्रमाका रूपमा स्थित परम शाम्भव कला हो। तल अत्यन्त तेजले युक्त, प्रकाशको भण्डारस्वरूप, हेर्न अत्यन्त कठिन, घोर ज्वालाको पङ्क्तिले युक्त, सृष्ट जगत्लाई नाश गर्ने संहार रहेको छ जो अग्निका रूपमा स्थित छ। सृष्टि र संहारका बीचमा आनन्द एवं सुन्दर स्वरूपवाला परम तेज रहेको छ जो सूर्यका रूपमा स्थित छ। सृष्टि र संहारका अपेक्षामा व्यापक एवं कल्याणस्वरूप सूर्यतत्त्व अवतार भनेर जान्नुपर्छ। चन्द्रमामा अग्नि र अग्निमा चन्द्रमा परस्पर समाविष्ट छन्। चन्द्रमालाई सृष्टि र अग्निलाई संहार भनेर जान्नू। ती दुईका बीचमा रहेको रवि अवतार (स्थिति) का रूपमा शास्त्रमा बताइएको छ। मन सृष्टि हो, अहङ्कार संहार हो भने बुद्धि व्यापक परम तेजस्वरूप अवतार हो जसलाई सर्वज्ञ, हृदयस्वरूप कुलकौलिक रवि भनेर जान्नू ॥ ३-८ ॥

**तच्छृणवाद्यावतारं च[7] यथार्थं गिरिजाधव[8] ।**
**यन्न कस्यचिदाख्यातं तव स्नेहाद् वदाम्यहम् ॥ ९ ॥**
**एको द्वादशभिर्भेदैः संसृतं परमेश्वर ।**
**भेदैर्द्वादशभिर्येन[9] व्याप्तं सर्वमिदं[10] जगत् ॥ १० ॥**
**तेषु सिद्धक्रमेणैव[11] संस्थितं सचराचरम् ।**

---

१ रविं प्रोक्ते–ग ।
२ मधस्थं, मधको मुनि... चिह्न दिइएको छ र सोही हरफको दाहिनेपट्टि कोष्ठकमा ध्ये लेखिएको–ग ।
३ श्वर अक्षर केरमेट भएकाले नबुझिने भएको–क ।
४ भवेसृष्टिरहकृष्ण–ग ।
५ पीतत्वमवतारस्तु, पीको मुनि.. चिह्न दिइएको छ र सोही हरफको देब्रेपट्टि खाली ठाउँमा धी लेखिएको छ–ग ।
६ त–ग ।
७ तत्सृण्वाद्यावतारञ्च–ग ।
८ ≠ गिरिजाधव पाठको अन्त्यमा युग्मदण्डको प्रयोग गरिएको–ख ; गिरिजावच, यहाँ पनि पाठको अन्त्यमा युग्मदण्डको प्रयोग गरिएको–ग ।
९ भेदैर्द्वादशभिर्योत–ग ।
१० सर्वमिदं, दंको मुनि.. चिह्न दिइएको–ग ।
११ तस्मिन् सिद्धिक्रमेणैव–क ; तस्मिन्सिद्धक्रमेणैव–ख,ग ।

**येषु कृत्वावतारं च यत्किञ्चिद् वाङ्मयं जगत् ॥ ११ ॥**
**तेनोद्धृतं महाभागं सिद्धपत्नीसमाकुलम् ।**
**सिद्धांश्च[1] सिद्धपत्नीश्च अवतारकुलक्रमम् ॥ १२ ॥**
**आम्नायं कुलसन्तत्याः कथयामि वृषासन ।**
**मन्त्रं चैव तथा[2] विद्यां पूजां सत् कौलिकीं[3] शुभाम् ॥ १३ ॥**
**समासान्नान्यमनसा[4] श्रृणु विज्ञानसुन्दर ।**
**मेदिनी वरुणं चैव तेजसं मारुतं[5] तथा ॥ १४ ॥**
**नभः श्रवणसंस्थं तु त्वचस्थं चक्षुषं तथा ।**
**जिह्वाख्यं घ्राणकं चैव मनाख्यं बुद्धिकं तथा ॥ १५ ॥**
**एते द्वादशसिद्धाश्च पत्नीस्तेषां[6] श्रृणुष्व मे ।**
**गन्धिनी रसिनी चैव रूपिणी स्पर्शिणी तथा ॥ १६ ॥**
**शब्दाख्या वाक्करानाख्या पादिनी पायुसंज्ञिका ।**
**उपस्थिनी अहङ्कारी प्रकृतिर्द्वादशी मता ॥ १७ ॥**
**इमास्ता[7] अवतारस्य[8] पूजनीयाः प्रयत्नतः ।**
**अत्र मन्त्रं प्रवक्ष्यामि कुलाम्नायोदितं शिव ॥ १८ ॥**

हे पार्वतीवल्लभ ! त्यो आदि अवतारक्रम जुन अहिलेसम्म कसैलाई पनि बताएको छैन्, तिम्रो स्नेहले म यथार्थरूपले बताउँदैछु, सुन। हे परमेश्वर ! एउटै परम तत्त्व बाह्रवटा भेदले संसारमा फैलिएको छ र तिनै बाह्रवटा भेदले यो संसार व्याप्त छ। तिनै बाह्रवटा भेदमा अवतीर्ण भएर यो सम्पूर्ण नामरूपात्मक जगत् तिनै बाह्रवटा भेदहरूमा सिद्धक्रमले रहेको छ। त्यसैले हे महाभाग ! सिद्ध एवं सिद्धपत्नीहरू, तिनीहरूको समूह र अवतारक्रम पनि यहाँ उद्धार गरिएको हो। साँढेलाई आसन बनाएर बस्नु भएका हे प्रभु ! कुलसन्ततिमार्ग (कालिकाकुलाम्नाय), तदुपयोगी मन्त्र, विद्या, कल्याणकारक कौलिकी पूजा सङ्क्षेपमा बताउँछु त्यसैले हे विज्ञानसुन्दर ! एकाग्रचित्तले सुन। पृथिवी, जल, तेज, वायु, आकाश, श्रोत्र, त्वक् (छाला), चक्षु, जिह्वा, घ्राण (नाक), मन र बुद्धि यी बाह्र सिद्धहरू हुन्

---

१ सिद्धाश्च–ग।
२ मन्त्रश्चैव तथा–ख ; मन्त्रदैवतया–ग।
३ सत्कौलिकां–ख।
४ समासामान्यमनसा, माको मुनि ..चिह्न दिइएको छ र सोही हरफको दाहिनेपट्टि कोष्ठकमा (न्ना) लेखिएको–ग।
५ वरुणं–क।
६ पत्नी तेषां–ख,ग।
७ इमास्ता पाठ केरमेट भएको–क।
८ अ अक्षर केरमेट भएको–क।

भने पञ्चतन्मात्रा, पञ्चकर्मेन्द्रिय एवं अहङ्कार (री) र प्रकृति यी बाह्र सिद्धपत्नीहरू हुन् । कालिकाकुलाम्नायसम्मत अवतारक्रमका यी देवीहरूको यत्नपूर्वक पूजा गर्नुपर्छ । हे शिव ! अब यहाँ कुलाम्नायमा प्रकट भएको मन्त्र भन्छु ॥ ९–१८ ॥

**हृदयं चैव गुह्यस्थं शिरोरुह तथान्तिमम् ।**
**वामकर्णाद् भूषणस्थं लाञ्छितं[1] वामजानुकम्[2] ॥ १९ ॥**
**वामजानुयुते कुर्यादेते पिण्डाक्षरे हर ।**
**आदावेते ततः संज्ञा पश्चात् पादप्रकल्पना ॥ २० ॥**
**एतदेव विधानं तु सिद्धानां दूतिशालिनाम् ।**
**विद्यां च कथयिष्यामि[3] मुखपारम्परागताम्[4] ॥ २१ ॥**
**हृदयस्थं[5] नितम्बस्थं सव्यश्रवणभूषणम् ।**
**वामोरुस्थमधो न्यस्य वामजानुस्थसंयुतम् ॥ २२ ॥**
**प्रोद्धृतं प्रथमं पिण्डं विद्याबीजमनुत्तमम्[6] ।**
**भूषणं सव्यकर्णस्य हृदयं नाभिसंयुतम् ॥ २३ ॥**
**वामपार्श्वगतं चैव वामकर्णं च भैरव ।**
**कपालमालिकान्तस्थं योज्यमस्य महात्मनः ॥ २४ ॥**
**मध्यस्कन्धं केवलं च कण्ठं केवलमुद्धरेत् ।**
**भुजङ्गार्णं[7] सनाभिस्थं नितम्बं केवलं हर ॥ २५ ॥**
**वामस्कन्धं च देवेश सव्यदंष्ट्रासमायुतम्[8] ।**
**योगेश्वरि[9] पदं पश्चाद् गुह्यं पश्चात् समुद्धरेत् ॥ २६ ॥**
**दक्षदंष्ट्रासमायुक्तं उद्धृतं परमेश्वर ।**
**कुलेन[10] संयुता[11] विद्या प्रोक्ता सप्तदशाक्षरा ॥ २७ ॥**
**उद्धृता देवदेवेन शिवेन परमात्मना ।**
**नैतस्याः सदृशी विद्या विद्यते भुवनोदरे ॥ २८ ॥**

---

१ छितं पाठ टुटेको–क ।
२ वा अक्षर टुटेका–के ।
३ कथयि पाठ टुटेको–क ।
४ पारंपरागतं–क ।
५ हृदयंस्थं–ख ।
६ त्तमम् पाठ टुटेको–क ।
७ भुजङ्गान्तं–क ।
८ समामुतं–क ।
९ योगेश्वरे–ख,ग ।
१० कुलेन]संशोधित पाठ ; कुलास्तु–क,ख,ग ।
११ संयुतां–ख,ग ।

**अनुग्रहं यदा प्राप्तं कदाचित् कल्मषक्षयात् ।**
**तदियं शक्तिपातेन प्राप्यते पुण्यकर्मभिः ॥ २९ ॥**
**द्वादशादित्यरूपेण स्थिता सा परमा कला ।**
**द्वादशारे तु हृच्चक्रे पूजनीया सुरेश्वरी[1] ॥ ३० ॥**
**अथवा बाह्यतो देव द्वादशारे तु चक्रके ।**
**राजवर्तेन रजसा रञ्जयेत् परमेश्वर ॥ ३१ ॥**
**सिद्धांश्च सिद्धपत्नीश्च[2] उदरस्थाः प्रपूजयेत् ।**
**मध्ये तां कालिकां देवीं[3] विद्यां सप्तदशाक्षराम् ॥ ३२ ॥**
**पूजयेद् विविधैः पुष्पैर्भक्ष्यभोज्यान्नपानकैः ।**
**मांसैर्नानाविधैश्चापि धूपैर्बहुविधैस्तथा ॥ ३३ ॥**
**फलमूलामिषैश्चैव तर्पयेत् परमेश्वर ।**
**सिद्धपत्नी पुनर्देव्याः पश्चात् पादेति योजयेत् ॥ ३४ ॥**
**एषः[4] सङ्क्षेपतः प्रोक्तः सोऽवतारक्रमागमः[5] ।**
**गोपनीयः सदा देव न दद्याद्यस्यकस्यचित् ॥ ३५ ॥**
**अन्यथा मृत्युभाक् स स्यादित्याज्ञा पारमेश्वरी ।**
**अथातः सम्प्रवक्ष्यामि घोररूपं महाद्भुतम्[6] ॥ ३६ ॥**

(यसपछि श्लोक २७ सम्म द्वादश सिद्धहरूको मन्त्र र सत्र अक्षरले युक्त कुलविद्या(मातृसद्भावमन्त्र)को उद्धार गरिएको छ )। यो सत्र अक्षरले युक्त कुलविद्या स्वयं परमात्मा शिवद्वारा उद्धार गरिएको हो। योजस्तो विद्या संसारमा अर्को कुनै छैन। पुण्यकर्मका कारण कुनै बखत चित्तमा रहेको कल्मष क्षय भएपछि शक्तिपातद्वारा भगवान्को अनुग्रह भयो भने यो विद्या प्राप्त गरिन्छ। ती परमा कला बाह्र आदित्यका रूपमा रहेकी छिन्। ती भगवती सुरेश्वरीको पूजा बाह्र दल भएको कमलले युक्त अन्तर हृदयचक्रमा वा बाह्र दलले युक्त बाह्य पद्मचक्रमा गर्नुपर्दछ। सो बाह्य बाह्र दलयुक्त पद्मचक्रलाई रातो राजवर्तले रङाउनू। बाह्रवटा कमलपत्रमा सिद्धहरूलाई पूजा गर्नू तथा पत्रहरूको माझमा सिद्धपत्नीहरूको पूजा गर्नू। यति गरिसकेपछि सप्तदशाक्षरीविद्यास्वरूप कालिकालाई द्वादशदलयुक्त कमलचक्रको मध्यकर्णिकामा विविध किसिमका फूलहरू, भक्ष्यभोज्यान्न,

१ सुरेश्वरी]संशोधित पाठ ; सुरेश्वरि–क,ख,ग ।
२ सिद्धपत्नींश्च–क ।
३ कौलिकीं देवीं–ख ; कौलिकीदेवीं–ग ।
४ एषः]संशोधित पाठ ; एष–क,ख,ग ।
५ सोवतारक्रमाशयः–ग ।
६ द्भुतम् पाठ टुटेको–क ।

पेयद्रव्य, नाना किसिमका मासुका परिकारहरू, विभिन्न किसिमका धूपहरू, फलफूल, आमिषान्नद्वारा पूजा गरी भगवती कालीलाई तृप्त पार्नू। यो अवतारक्रम सङ्क्षेपमा भनियो। यो क्रम जो पायो त्यसलाई दिनु हुँदैन, यसलाई अत्यन्त गोप्य राख्नुपर्छ अन्यथा त्यो मृत्युभागी बनोस् भन्ने परमेश्वरीको आज्ञा रहेको छ। अब म बाह्यसृष्टि विनाशका लागि अत्यन्त घोररूप, महान् अद्भुत संहारक्रम बताउनेछु ॥ १९–३६ ॥

**बाह्यसृष्टिविनाशार्थं[1] संहारे परमेश्वर ।**
**ब्रह्मविष्णिवन्द्ररुद्राणां क्षणात् संहारकारकम् ॥ ३७ ॥**
**तच्छ्रृणुष्व समासेन योगिनीकुलनन्दन ।**
**या सा वीरेश्वरी[2] देव[3] घोरा घोरतरा परा ॥ ३८ ॥**
**अघोरा सा महादेव भेदत्रयतया स्थिता ।**
**योगेश्वरी[4] महारौद्री[5] भीषणा चातिभीषणा ॥ ३९ ॥**
**नववर्णा महाक्रूरा पुनः सा द्वादशाक्षरा[6] ।**
**कालाग्निकुहरोत्था सा विद्युत्कोटिसमप्रभा[7] ॥ ४० ॥**
**ग्रसते सर्वतत्त्वानि बिन्दूर्ध्वव्यापिनी हर ।**
**बिन्दुमार्गे[8] प्रबुद्धा सा सृष्टिस्थितिविनाशिनी ॥ ४१ ॥**
**सूर्यसोमावुभौ मध्ये ग्रसतेऽग्निस्वरूपिणी ।**
**एषा भैरवमध्यस्था भैरवीरवसंयुता ॥ ४२ ॥**

अब म बाह्यसृष्टि विनाशका लागि अत्यन्त घोररूप, महान् अद्भुत संहारक्रम बताउनेछु। हे योगिनीकुलनन्दन! त्यो संहारक्रम सङ्क्षेपमा बताउँछु, सुन। हे देव! हे महादेव! घोर, घोरतर र अघोररूपकी जो पराशक्ति वीरेश्वरी हुन् ती सृष्टि, स्थिति र संहारस्वरूप चन्द्र, सूर्य र अग्निरूप तीन भेदले रहेकी छिन्। महारौद्रस्वरूप भएकी, अत्यन्त डरलाग्दो रूप भएकी, अत्यन्त भीषण स्वरूप भएकी, महाक्रूर स्वरूप भएकी, प्रलयकुण्डबाट उठेकी, करोडौं सूर्यसमान तेजले युक्त भएकी ती योगेश्वरी नवाक्षरी विद्यास्वरूप एवं पुनः द्वादशाक्षरी विद्यास्वरूपकी छिन्। हे हर!

---

१ वा अक्षर टुटेको–क ; बाह्यसृष्टिविनाशार्थ–ग ।
२ श्वरी पाठ टुटेको–क ।
३ दे अक्षर टुटेको–क ।
४ योगेश्वरी]संशोधित पाठ ; योगेश्वरा–क,ख,ग ।
५ महारौद्री]संशोधित पाठ ; महारौद्रा–क,ख,ग ।
६ द्वादशा पाठ टुटेको–क ।
७ म अक्षर लेख्न छुटेको–क ।
८ वित्तमार्ग्गे–क ।

बिन्दुभन्दा माथि रहेकी ती वीरेश्वरीले सम्पूर्ण तत्त्वहरूलाई ग्रास गर्छिन् अर्थात् सम्पूर्ण चराचर जगत्लाई संहारदशामा आफूभित्र नै लीन गर्छिन्। सृष्टि र स्थितिको चक्रलाई विनाश गर्ने वा संहारदशामा आफूभित्र नै लीन गर्ने ती वीरेश्वरी बिन्दुमार्गमा प्रबुद्ध हुन्छिन्। सूर्य, अग्नि र चन्द्रस्वरूप त्रिधामको मध्यमा प्रलयाग्निस्वरूपले रहेकी ती वीरेश्वरी सृष्टिस्वरूप चन्द्रमा र अवतार (स्थिति) स्वरूप सूर्य दुवैलाई ग्रास गर्छिन्। भैरवको माझमा रहेकी वीरेश्वरी भैरवीनादले युक्त छिन् ॥ ३७–४२ ॥

**नामभेदेन वक्ष्यामि वीरानेकादशान् श्रृणु।**
**अघोरं प्रथमं नाम महाघोरं[1] द्वितीयकम् ॥ ४३ ॥**
**तृतीयं घोरघोरोग्रं चतुर्थं घोरघर्घरम्[2]।**
**पञ्चमं भीमवपुषं षष्ठं घोरपराक्रमम् ॥ ४४ ॥**
**सप्तमं चण्डचण्डेशं चण्डतेजस्तथाष्टमम्।**
**नवमं रौद्ररौद्रं तु दशमं रुद्रपिङ्गलम् ॥ ४५ ॥**
**एकादशं महावीरं रुद्राश्चैकादशः स्मृताः।**
**एभ्यः परतरं नास्ति विश्वेऽस्मिन् सचराचरे ॥ ४६ ॥**

अब म एकादश वीरहरूको नाम बताउँछु, सुन। ती एकादश वीरहरू हुन्- १. अघोर २. महाघोर ३. घोरघोरोग्र ४. घोरघर्घर ५. भीमवपुष ६. घोरपराक्रम ७. चण्डचण्डेश ८. चण्डतेज, ९. रुद्ररौद्र १०. रुद्रपिङ्गल ११. महावीर। यी एकादश वीरहरूभन्दा परतर यस संसारमा कोही छैन ॥ ४३- ४६ ॥

**संहारकरणे शाक्ते भैरवो भैरवीप्रिये।**
**एतद्वीर्यात् समुत्पन्ना भैरव्यो[3] या महेश्वर ॥ ४७ ॥**
**तासां नामानि वक्ष्यामि संहारचक्रनायिकाः।**
**महाभूतेति च पदं महाभक्षपदं तथा ॥ ४८ ॥**
**भक्षिणीति तथा देव्याः प्रथमा चक्रनायिका।**
**महाभवान्तेति पदं महाभक्षमतः परम् ॥ ४९ ॥**
**भक्षिणीति पदं पश्चाद् द्वितीया चक्रनायिका।**
**महाकालकलावृत्तिमुद्धरेच्च महापदम् ॥ ५० ॥**
**भक्षभक्षिणि च तथा तृतीया दुर्जया परा।**
**महारक्तेश्वरिपदं[4] महारक्तपदं तथा[1] ॥ ५१ ॥**

---

१ महोरं–ग।
२ घोरर्घर्घरं–ख।
३ भैरव्या–ख।
४ क्ते अक्षर केरमेट भएको–ग।

**महाभक्षभक्षिणीति चतुर्थी[2] चक्रनायिका[3] ।**
**महाकरालि संलिख्यानीन्द्रियाणि पदं महा[4] ॥ ५२ ॥**
**भक्षभक्षिणि[5] देवेश पञ्चमी चक्रनायिका ।**
**महाचण्डाक्षिविषया महाभक्षपदं ततः ॥ ५३ ॥**
**भक्षिणीति[6] पदं चान्ते षष्ठी सा चक्रनायिका ।**
**महोच्छुष्मप्रभोद्धार्या महाद्वारपदं तथा[7] ॥ ५४ ॥**
**भक्षभक्षिणी[8] तत्रान्ते[9] सप्तमी परिकीर्तिता ।**
**महाकालरात्रिपदं रुद्ररौद्रमहा[10] ततः ॥ ५५ ॥**
**भक्षभक्षिणिसंज्ञा च देवी ज्ञेया ततोऽष्टमी ।**
**महाचण्डेश्वरिपदं चण्डकर्मा[11] महा तथा ॥ ५६ ॥**
**भक्षभक्षिणि चैवान्ते नवमी त्रिदशेश्वर ।**
**महा...भैरवि[12] वीरनायकसंयुता[13] ॥ ५७ ॥**
**महाभक्षभक्षिणी च दशमी परिकीर्तिता ।**
**महावीरपदं सर्वग्रासवर्णपदं महा ॥ ५८ ॥**
**भक्षभक्षिणि च पदं[14] प्रोक्ता देव दशाधिका ।**
**आभिः सर्वमिदं विश्वं[15] संहृतं विश्वसंहृतौ ॥ ५९ ॥**

विश्वसंहाररूप भैरवीको प्रिय कार्यमा तत्पर रहने भैरवीहरू यिनै एकादश रुद्रहरूको तेजबाट उत्पन्न भएका हुन्। अब म संहारकार्यमा तत्पर रहने ती एकादश चक्रनायिकाहरूको नाम बताउँछु। ती एकादश

---

१ महारक्तं तथा पदं–क ; महारक्तपदंदेखि पञ्चमपटलको ५८ श्लोकसम्मको अनुपलब्ध–ख ।
२ र्थी अक्षर टुटेका–के ।
३ मा.क चक्र पाठ टुटेको–क ।
४ तथा–ग ।
५ भक्षभक्षिणि–ग ।
६ क्षणीति पाठ टुटेको–क ।
७ महा–क ।
८ अभक्षभक्षिणि–ग ।
९ चान्ते–ग ।
१० द्ररौ अक्षर टुटेको–क ।
११ चण्डकर्म–क, चण्डेकर्म–ग ।
१२ महाभन्दा पछाडि तीन अक्षर टुटेको–क ; महाभन्दा पछाडि तीन अक्षरको स्थान खाली राखिएको–ग ।
१३ संयुतं–क ।
१४ पलं–ग ।
१५ विश्व–ग ।

चक्रनायिकाहरू हुन्- १. महाभूतमहाभक्षभक्षिणी २. महाभवमहाभक्षभक्षिणी ३. महाकालकलामहाभक्षभक्षिणी ४. महारक्तेश्वरिमहारक्तमहाभक्षभक्षिणी ५. महाकरालिमहाभक्षभक्षिणी ६. महाचण्डाक्षविषयामहाभक्षभक्षिणी ७. महोच्छुष्मप्रभामहाद्वारभक्षभक्षिणी ८. महाकालरात्रि–रुद्र–रौद्र–महाभक्षभक्षिणी ९. महाचण्डेश्वरी–चण्डकर्मा–महाभक्षभक्षिणी १०. महाभैरवीवीरनायकमहाभक्षभक्षिणी ११. महावीरसर्वग्रासवर्णमहाभक्षभक्षिणी । यिनै संहारचक्रनायिकाले विश्वको संहार अवस्थामा समस्त चराचर जगत्लाई आफूभित्रै लीन गराउँछन् ॥ ४७-५९ ॥

**अत्र मन्त्रं प्रवक्ष्यामि श्रृणु भैरवनायक ।**
**समासेन यथाकथ्यं कथयामि वृषासन ॥ ६० ॥**
**हृदयं वामचक्षुस्थं वामजानुकसंस्थितम् ।**
**देव्या नादं तथा देव कपालं प्रथमं हर ॥ ६१ ॥**

हे भैरवनायक ! हे वृषासन ! अब म यहाँ सङ्क्षेपमा जति बताउन मिल्छ वा प्रकाश गर्न सकिन्छ त्यति एउटा मन्त्र बताउँछु, सुन । (यसपछि तीन अक्षरवाला मन्त्रको उद्धार गरिएको छ ) । उक्त मन्त्र एकादश वीरहरू तथा एकादश चक्रनायिकाहरूको नामको अगाडि तथा पछाडि प्रयोग गर्नुपर्छ ॥ ६०–६१ ॥

**हतोऽसौ ब्रह्मदण्डेन मन्त्र एषस्त्रिधाक्षरः[१] ।**
**आद्यन्ते सम्प्रयोक्तव्यौ वीराणां भैरवीषु च ॥ ६२ ॥**
**अथान्यामुद्धरिष्यामि[२] विद्यां संहारभैरवीम् ।**
**त्र्यक्षरं प्रोद्धरेदादौ[३] तथान्यच्चश्रृणु[४] भैरव ॥ ६३ ॥**
**दक्षबाहुस्थितं वर्णं नादोऽस्याधो व्यवस्थितम्[५] ।**
**शिरोरुहान्तःसंस्थं तु महायोनिसमायुतम् ॥ ६४ ॥[६]**
**वामजानुयुतं[७] देव[८] प्रोद्धरेद् बीजनायकम् ।**
**भूषणं दक्षकर्णस्य हृदयं नाभिसंयुतम् ॥ ६५ ॥[९]**

---

१ राषस्त्रिधाक्षरः–ग ।
२ अथाभ्यां उद्धरिष्यामि–ग ।
३ तूद्धरेदादौ–ग ।
४ न्य अक्षर लेख्न छुटेको–क ।
५ व्यवस्थितः–क ।
६ यो पूरै हरफ मसी उडेकाले नबुझिने भएको–क ।
७ मसी उडेकाले नबुझिने भएको–क ।
८ दे अक्षर मसी उडेकाले नबुझिने भएको–क ।
९ नाभिसंयुतम्देखि घोररूपंसम्मको पाठ मसी उडेकाले नबुझिने भएको–क ।

**वामपार्श्वस्थितं वर्णं वामकर्णमथोद्धरेत्[1] ।**
**कपालान्तःसमारूढं घोररूपं भयानकम् ॥ ६६ ॥**
**विष्णुमुण्डसमासीनं मन्त्रान्तं[2] च महेश्वर ।**
**जीवं योनिसमायुक्तं गुह्यार्णं गिरिजाधव ॥ ६७ ॥** [3]
**शिरोरूहाद्यसंयुक्तमतोऽन्यत् सुरवन्दित[4] ।**
**दक्षिणोरुसमासन्नं वर्णं[5] तच्च नपुंसकम् ॥ ६८ ॥**
**एषा विद्या[6] महाविद्या विद्याविद्येश्वरेश्वरी ।**
**नाम चाख्या न चोच्चार्या संहारकरणी यतः ॥ ६९ ॥**[7]

अब म संहारभैरवीविद्याको उद्धार गर्नेछु । उक्त संहारभैरवीविद्याको प्रारम्भमा माथि उद्धार गरिएको त्र्यक्षर (तीन अक्षरवाला) मन्त्रको उद्धार गर्नुपर्छ । (यसपछि श्लोक ६८ सम्म संहारभैरवीविद्याको उद्धार गरिएको छ) । यो संहारभैरवीविद्या महाविद्या हो, विद्येश्वरीहरूको पनि विद्येश्वरी विद्या हो । कालिकाकुलपरम्परामा दीक्षा ग्रहण नगरेकाहरूका अगाडि यो महाविद्याको नाम लिनु र यसको उच्चारण गर्नु हुँदैन ॥ ६२–६९ ॥

**पूजयेद् बिन्दुमार्गोर्ध्वं महातेजस्वरूपिणीम्[8] ।**
**भावाभावेषु सर्वेषु संहारे चक्रनायिकाम् ॥ ७० ॥**
**महातेजोवतीं दीप्तां बिन्दूर्ध्वपदगामिनीम् ।**
**तत्र पूज्या प्रयत्नेन स्वसंवेदनतत्परैः ॥ ७१ ॥**[9]
**अथवा[10] छुरिकां[11] स्थाप्य कर्तरीं वा सुदारुणाम् ।**
**महामुकुटपृष्ठे[12] तु पूज्या संहारभैरवी ॥ ७२ ॥**
**रुद्रैकादशसंयुक्ता भैरव्येकादशाक्षरा ।**[13]
**नानाविधानि[1] वस्तूनि नानाद्रव्याणि दापयेत् ॥ ७३ ॥**

---

१ नामकर्णमथोद्धरेत्–ग ।
२ मन्त्रार्णं–ग ।
३ गुह्यार्णदेखि सुरवन्दितभन्दा अगाडिको पाठ मसी उडेकाले नबुझिने भएको–क ।
४ मतोन्यं सुरवन्दित–क,ग ।
५ वर्ण–ग ।
६ राधाविद्या–ग ।
७ नाम चाख्यादेखि मार्गोर्ध्वं सम्मको पाठ मसी उडेकाले नबुझिने भएको–क ।
८ स्वरूपिणी–ग ।
९ यो पूरै हरफ मसी उडेकाले नबुझिने भएको–क ।
१० मसी उडेकाले नबुझिने भएको–क ।
११ च्छुरिकां–ग ।
१२ कु अक्षर लेख्न छुटेको–ग ।
१३ यो पूरै हरफ मसी उडेकाले नबुझिने भएको–क ।

तत् सर्वमग्रतो देयं भैरवी यत्र पूजिता ।
सप्तसागरपर्यन्तं मेदिनीमोषधींस्तथा ॥ ७४ ॥
समुद्रास्तत्र सङ्कल्प्या[२] रुधिरेण महेश्वर ।
योन्युद्भवं जगत् सर्वं पशुरूपेण कल्पयेत् ॥ ७५ ॥
दिवौकसश्च पशवो ब्रह्मविष्णवीश्वरादयः ।
पशुर्मृत्युः[३] पशुः कालः पशुर्लम्बोदरस्तथा ॥ ७६ ॥
पशुर्धर्मस्तथा धर्म्यः[४] सर्वं पशुमयं भवेत् ।
एवं मानसयागं तु वाक्ये कुर्याद् यथाविधिः ॥ ७७ ॥
सर्वं मुकुटपृष्ठे तु दद्यान्नैवेद्यकं सदा ।
विधिना वज्रमुदकं महालोहितमेव वा ॥ ७८ ॥
नालाह्यबीजे[५] गोजातं छागं नारं च मीनजम् ।
जलजांस्थलजांश्चैव[६] अन्तरिक्षगतांस्तथा[७] ॥ ७९ ॥
सर्वं निवेदयेद् देव्यै[८] पानकानि तथैव च ।
पलाण्डुं लशुनं चैव मण्डूकान् कृशरांस्तथा ॥ ८० ॥
क्षीरिणी[९] लेह्य[१०] पेयानि मित्राणि कुसुमानि च ।
नानाविधांस्तथा धूपान् नानादीपाँश्च दापयेत् ॥ ८१ ॥
पशूंश्च विविधान् सम्यग्ग्राम्यवास्यवटून्यपि[११] ।
सर्वं निवेदयेत् तत्र वित्तशाठ्यं[१२] न कारयेत् ॥ ८२ ॥
नित्यं पूजा प्रकर्तव्या यदीच्छेत् खेचरीं[१३] गतिम् ।

---

१ अघिल्लो ना अक्षर मसी उडेकाले नबुझिने भएको–क ।
२ संकल्या लेखी कोष्ठकमा (संकल्प्या ) लेखिएको–ग ।
३ पशु मृत्युः–क ।
४ धर्मः–ग ।
५ नाराज्य लेखी कोष्ठकमा (नालाह्य) लेखिएको–ग ।
६ जलजान्स्थलजांश्चैव–ग ।
७ अन्तरीक्षगतास्तथा–ग ।
८ ग देव्याः–क,ग ।
९ क्षीरणी–ग ।
१० लेक्ष–क, लक्ष–ग ।
११ सम्यक् ग्राम्यवास्यवटून्यपि–क ।
१२ वित्तसाठ्यं–क ।
१३ यदित्छेत्खेचरी–ग ।

**इत्थं समग्रं[1] कथितं क्रमं[2] संहारसंज्ञकम् ॥ ८३ ॥**
**गोपयेत् प्राणवद् यत्नादित्याह परमेश्वरी ॥ ८४ ॥**

इति श्रीमदुत्तरपीठोद्भूते श्रीश्रीनाथावतारिते श्रीकालिकाकुले पञ्चशते चतुर्थः पटलः ॥

अत्यन्त तेजिलो स्वरूप भएकी, बिन्दुस्थानभन्दा माथि रहेकी संहारचक्रनायिकालाई बिन्दुमार्गभन्दा माथि आफ्नो चित्त लगाएर भावरूप पदार्थहरूमा तथा अभावरूप शून्यमा उनको व्यापकताको चिन्तन गर्दै एकादश वीर वा रुद्रहरूका साथमा मानसिक पूजा गर्नुपर्छ अथवा धारिलो छुरी, कैँची वा निर्मल ऐना स्थापना गरी ती वस्तुहरूमा विभिन्न प्रकारका द्रव्यहरू अर्पण गरेर वीरहरूका साथमा संहारभैरवीको पूजा गर्नुपर्छ। सात समुद्रपर्यन्त पृथिवी तथा औषधिहरू सबैथोक संहारभैरवीलाई अर्पण गरेको चिन्तन गर्नुपर्छ। हे महेश्वर! समुद्रहरू रगतको कल्पना गर्नुपर्छ। यो समग्र चराचर जगत्लाई पशुरूप कल्पना गर्नुपर्छ। ब्रह्मा, विष्णु, ईश्वर, देवताहरू, गणेश, यम, धर्म, धर्म्य सबैथोकलाई पशुमय कल्पना गर्नुपर्छ र यसप्रकार यथाविधि मानसयाग गर्नुपर्छ। विधिपूर्वक वीर्य, रज, थुक आदि कुलद्रव्य तथा जलचर, स्थलचर र खेचर पशुपन्छीको मासु, प्याज, लसुन आदि भोज्यपदार्थ, विभिन्न प्रकारका फूलहरू, धूपहरू देवीको मुकुटपृष्ठमा चढाउनु पर्छ। पूजामा धनको कन्जुस्याइँ वा घमण्ड गर्नुहुँदैन। यदि खेचरीगति चाहने हो भने विधिपूर्वक माथि बताएझैँ सधैँ भगवतीको पूजा गर्नुपर्छ। यसप्रकार समग्र संहारक्रम बताइयो। उक्त संहारक्रम आफ्नो प्राणलाई झैँ अत्यन्त गोप्य राख्नू भनी परमेश्वरीले बताइन् ॥ ७०-८४ ॥

॥ उत्तरपीठमा उद्भव भएको श्रीनाथद्वारा अवतारित **कालिकाकुलपञ्चशतक** नामक ग्रन्थमा तन्त्राचार्य माधवप्रसाद लामिछानेद्वारा नेपाली भाषानुवादसहित सम्पादित चौथो पटल पूर्ण भयो ॥

---

१ समग्र–ग।
२ क्रम–ग।

# पञ्चमः पटलः

**॥ श्रीभैरव्युवाच ॥**
**श्रृणु वक्ष्यामि तत् सर्वं वक्त्राद् वक्त्रेषु यत् स्थितम्[1] ।**
**अकथ्यं परमं सारं वाच्यवाचकवर्जितम् ॥ १ ॥**
**अन्यशास्त्रोपमाहीनं दुर्विज्ञेयं दुरासदम् ।**
**नाद्यापि[2] विदितं यच्च सिद्धानां बोधशालिनाम् ॥ २ ॥**
**पारम्पर्यक्रमायातं सञ्चरन्तं मुखान्मुखम् ।**
**तच्छ्रृणुष्व महाप्राज्ञ यथावत् कालिकाक्रमम् ॥ ३ ॥**

श्रीभैरवीले भनिन्–

हे महाप्राज्ञ ! परम्पराक्रमले एउटा वक्त्रबाट अर्को वक्त्र हुँदै प्रवाहित भएको कालिकाकुलक्रमको जुन ज्ञानधारा छ त्यो ज्ञानको परम साररूप, वाच्य तथा वाचकले वर्जित, अकथ्य, अन्य शास्त्रसँग तुलना गर्न नसकिने, बुझ्न ज्यादै कठिन र दुष्प्राप्य रहेको छ। अहिलेसम्म सिद्धहरू तथा बोधशाली व्यक्तिहरूले पनि नजानेको ज्ञानको परम साररूप त्यो कालिकाक्रम म तिमीलाई बताउँछु, सुन ॥ १-३ ॥

**यत् तद् ब्रह्म परं धाम व्योमातीतं[3] निरामयम् ।**
**निष्कलुषं[4] परं शुद्धं[5] निर्विकारं निराश्रयम् ॥ ४ ॥**
**कैवल्यं च निराधारं सर्ववाग्जालवर्जितम् ।**
**निस्तत्त्वं परमात्माख्यं अजं शान्तं ध्रुवं शिवम्[6] ॥ ५ ॥**
**भावाभावपदैर्हीनं[7] भावनापरिवर्जितम् ।**
**हानादानपदैर्मुक्तं[8] सर्वगं परमेश्वरम् ॥ ६ ॥**
**शक्त्यातीतं गुणातीतं सर्वद्वन्द्वविवर्जितम् ।**
**क्षरश्चाक्षरभावेन भाव्यं तन्न कदाचन[9] ॥ ७ ॥**

---

१ यस्थितम्–ग ।
२ द्या अक्षर अलिकति टुटेको–क ।
३ मा अक्षर टुटेको–क ।
४ निःकलुषं–क ; निकूलं च–ग ।
५ परंशुद्धि–ग ।
६ शि अक्षरका अगाडि खाली ठाउँ छोडिएको छ र वम् लेख्न छुटेको –ग ।
७ वप अक्षर टुटेको तथा दै अक्षर अलिकति टुटेको ; मा.ग भावाभावपदैहीनं–क ।
८ दानादानपदैर्युक्तं–ग ।
९ न अक्षर टुटेको–क ।

**न[1] द्वैतं न च वाऽद्वैतं[2] द्वैताद्वैतोभयोज्झितम् ।**
**किन्तु सर्वोपमाहीनं यस्य संवित्तिलक्षणम् ॥ ८ ॥**

त्यो परंब्रह्म तत्त्व शून्यातीत, निरामय, कालुष्यहीन, परं शुद्ध, निर्विकार, निराश्रय, निराधार, कैवल्यस्वरूप, सम्पूर्ण वाग्जालले वर्जित, सम्पूर्ण तत्त्वलाई आफूभित्र विलय गर्ने निस्तत्त्वस्वरूपले रहेको छ। उक्त परमात्मास्वरूप परं तत्त्व अज, शान्त, शाश्वत, कल्याणस्वरूप, भाव र अभावले रहित, भावनाले वर्जित, त्याग र ग्रहणले मुक्त, सबै ठाउँमा पुग्ने अर्थात् सर्वव्यापक, परमेश्वरस्वरूप, शक्तिभन्दा अतीत, गुणातीत, सम्पूर्ण द्वन्द्वले रहित, क्षर तथा अक्षरभावले कहिल्यै भावना गर्न नसकिने, द्वैत, अद्वैत वा द्वैताद्वैतभावले रहित, अनुपम, चैतन्यस्वरूप रहेको छ ॥ ४-८ ॥

**चिन्तात् परतरं[3] वापि शब्दात् परतरं[4] सदा ।**
**तस्यावबोधात् परमा[5] शक्तिः शक्तिमतः परा ॥ ९ ॥**
**अकला च कलारूपा महोल्केव सुतेजसी[6] ।**
**उपमानस्वरूपेण[7] भूरिभानुरिवोदिता ॥ १० ॥**
**खकला खमयी[8] खस्था खेचरीष्वपि दुर्गमा ।**
**महाकाली[9] कलां[10] याता कलामृतमयी शुभा ॥ ११ ॥**

मन र वाणीभन्दा परको विषय बनेको त्यस्तो शक्तिमान् परं ब्रह्मतत्त्वको क्षोभबाट अत्यन्त विशाल उल्कापिण्डझैँ तेजस्वरूप भएकी, कलाले युक्त एवं कलाले रहित भएकी, करोडौं सूर्यको झैँ आभाले युक्त भएकी, परम शून्यस्वरूप भएकी, महाशून्य पदमा रहेकी, खेचरीहरूका लागि पनि जान्न ज्यादै कठिन रहेकी, मङ्गलस्वरूप भएकी, अमृतमय कलाले युक्त भएकी महाकाली प्रकट भइन् जो परं ब्रह्मस्वरूप शक्तिमान् महाकालकी अभिन्न पराशक्ति हुन् ॥ ९-११ ॥

---

१ न अक्षर टुटेको–क ।
२ वाद्वैतं–क ; नाद्वैतं–ग ।
३ वित्तात्परतरं–ग ।
४ श्रद्धात्परतरं–ग ।
५ र अक्षर टुटेको, मा अक्षर खुइलिएको–क ।
६ सुतेजसा–ग ।
७ उपमानस्वरूपेणे–ग ।
८ खभयी–ग ।
९ महाकालि–क ।
१० कला–क,ग ।

तस्याः कमलनोद्भूताः[1] काल्यंशास्तु[2] पदानुगाः[3] ।
संहारकरणे[4] यास्तु संस्थिता नायिका हर ॥ १२ ॥
तासां संहरणार्थं हि सैकेयं बहुधा गता ।
कालरूपान्तकरणी यत्र सा शान्तिमृच्छति[5] ॥ १३ ॥
एकैका सा स्वसामर्थ्यात् संहारहरणोद्यता ।
एकैका च परा देवी ज्ञेया ब्रह्मस्वरूपिणी[6] ॥ १४ ॥
एवं सा[7] द्वादशैर्भेदैः परमार्कस्वरूपिणी[8] ।
द्वादशाऽपि तदुत्पन्नाः शुद्धाः प्राकाश्यनिर्मलाः ॥ १५ ॥
सूर्यकोटिसहस्राभाश्चन्द्रायुतनिभोपमाः[9] ।
विग्रहास्ते[10] सर्वदिक्काः शान्तास्तद्धर्ममागताः[11] ॥ १६ ॥
सर्वास्तमितभावा सा काली कालान्तकारिणी ।
स्वभावपदसंरूढा स्वप्रभावा कुलेश्वरी ॥ १७ ॥
महाकालीति संज्ञा सा पारम्पर्यक्रमोदिता ।
सदसद् व्यक्तसद्भावा परमानन्दनन्दिनी ॥ १८ ॥
बिन्दुस्था चाचला[12] नित्या स्वेच्छानुरूपसंस्थिता[13] ।
एकाकिनी चैकवीरा सुसूक्ष्मा चाव्यया परा ॥ १९ ॥
तासां नामानि भो[14] देव द्वादशः श्रृणु भैरव ।
सर्वकारणनिर्मुक्ता इच्छानुरूपसंस्थिता[15] ॥ २० ॥

---

१ कवलनोद्भूता–ग ।
२ काल्यंशम्तु–क ; काल्यशंत–ग ।
३ पदानुगा–ग ।
४ संहारकालने–ग ।
५ शान्तिमर्च्छति–क ।
६ ब्रह्मस्वरूपिणी पाठ मसी उडेकाले नबुझिने भएको छ–क ।
७ स्याद्–ग ।
८ द्वादशैर्भेदैर्परमात्त(र्थ)स्वरूपिणी–ग ।
९ ..निभोपमा–ग ।
१० विग्रहान्ते–ग ।
११ शान्तास्तद्धर्ममागता–ग ।
१२ नाचला–क ।
१३ स्वेच्छारूपा तु संस्थिता–क,ग ।
१४ ये–ग ।
१५ इच्छारूपा तु संस्थिता–क ; इच्छा तुपा तु संस्थिता, पातुका माथि कोष्ठकमा ( पा तु) लेखिएको–ग ।

खस्वरूपा खमध्यस्था खचक्रे च व्यवस्थिता ।
निरामया चाप्रमेया अनुच्चार्या गुणोज्झिता ॥ २१ ॥[१]
फट्कारान्ता[२] महाघोरा ग्रसन्ती भैरवेश्वरान् ।
रविमध्ये निरानन्दा चिन्मरीच्यन्तःभासिका ॥ २२ ॥
तस्या[३] द्वादश नामानि नामभेदेन[४] तच्छृणु[५] ।
मन्त्रोदया व्योमरूपा व्योमस्था व्योमवर्जिता ॥ २३ ॥
सर्वाः सर्वविनिर्मुक्ता विश्वेऽस्मिन् सृष्टिनाशनी ।
या कला विश्वविभवा सृष्ट्यर्थकरणक्षमा[६] ॥ २४ ॥
यदन्तः शमते[७] सा तु सृष्टिकालीति[८] सा स्मृता ।[९]
हंसिनी[१०] पौद्गली[११] येयं बालाग्रशतकल्पना ॥ २५ ॥
कल्पते सर्वदेहस्था स्थितिः सर्गस्य[१२] कारिणी ।
यदुत्पन्ना तु सा देवी पुनस्तत्रैव[१३] लीयते ॥ २६ ॥
तां विद्धि देवदेवेश स्थितिकालीं महेश्वर ।
चण्डकाली शुद्धवर्णा याऽमृतग्रसनोद्यता ॥ २७ ॥
भावाभावविनिर्मुक्ता विश्वसंहाररूपिणी ।
तत्र सा याति विलयं सा च संहारकालिका ॥ २८ ॥
न चैषा[१४] चक्षुषा ग्राह्या न च सर्वेन्द्रियस्थिता ।
निर्गुणा निरहङ्कारा रञ्जयेत् सर्वमण्डलम्[१५] ॥ २९ ॥

---

१ यो हरफ मसी उडेकाले नबुझिने भएको–क ।
२ फट्का.. मसी उडेकाले नबुझिने भएको–क ।
३ तस्य–क ।
४ भ अक्षर लेख्न छुटेको–ग ।
५ पाठ टुटेको–क ।
६ सृष्टार्थे करणक्षमा–ग ; सृष्ट्यर्थकरणक्षमा– तन्त्रालोकको विवेक टीकामा श्रीदेवीपञ्चशतकबाट उद्धृत पाठ ।
७ मते पाठ टुटेको–क ।
८ सृष्टिकाली तु–ग ।
९ यदन्तः शान्तिमायाति सृष्टिकालीति सा स्मृता– तन्त्रालोकको विवेक टीकामा श्रीदेवीपञ्चशतिकबाट उद्धृत पाठ ।
१० हम्सिनी–क ; हासिनी–तन्त्रालोकको विवेक टीकामा देवीपञ्चशतकबाट उद्धृत पाठ ।
११ पौंगली–ग ।
१२ सर्वस्य–ग ।
१३ त्रै अक्षर अलिकति टुटेको–क ।
१४ निचैषा–ग ।
१५ विश्वमण्डलं–तन्त्रालोकको विवेक टीकामा श्रीदेवीपञ्चशतकबाट उद्धृत पाठ ।

सा कला तु[1] यदुत्पन्ना सा ज्ञेया रक्तकालिका ।
महांश्चितो[2] यथासद्य[3] उर्मीमध्याज्जलौकसाम्[4] ॥ ३० ॥
क्षयं याति तु तत्रस्थं[5] जगत् सर्वमिदं तथा ।
या सा प्रलयकाले तु अक्रमात् क्रमयोगतः[6] ॥ ३१ ॥
अकला[7] भीषणा[8] रौद्रा कुलकौलनिराकुला[9] ।
अलक्षा लक्षनिर्लक्षा सुकाली नाम सिद्धिदा ॥ ३२ ॥
यमरूपस्वरूपस्था रूपातीतस्वरूपगा[10] ।
सा कला लीयते यस्यां यमकाली तु सा स्मृता ॥ ३३ ॥
पशुरूपा स्वरूपस्था रूपातीताद्यतीतगा[11] ।
करङ्किणी[12] कुलेशानि मृत्युकालान्तःपातिनी[13] ॥ ३४ ॥
मृत्यवन्तका कला यस्याः प्रविशेद् देहमण्डले ।
तेन ह्येषा[14] कुलेशानि मृत्युकालान्तःपातिनी[15] ॥ ३५ ॥
मृत्युकालकला यस्याः[16] प्रविशेद् विग्रहं शिव ।
तदा सा मृत्युकालीति ज्ञेया[17] गिरिसुताधव ॥ ३६ ॥
गमागमसुगम्यस्था[18] महाबोधावलोकिनी ।

---

१ कलान्त–ग ।

२ महाश्रितो, श्रितोको मुनि....चिह्न दिइएको छ र देब्रेपट्टि सोही हरफको सीधा कोष्ठकमा (न्चितो) लेखिएको–ग ।

३ यथासद्यो–ग ।

४ जलकशां–क ।

५ तत्रस्थो–क ।

६ अक्रमाक्रमयोगतः–ग ।

७ अट्टला–ग ; डकला–तन्त्रालोकको विवेक टीकामा देवीपञ्चशतिकबाट उद्धृत पाठ ।

८ भेषणा–ग ।

९ कुलकालिनिराकुला–तन्त्रालोकको विवेक टीकामा देवीपञ्चशतिकबाट उद्धृत पाठ ।

१० रूपातीतस्वरूपगा– तन्त्रालोकको विवेक टीकामा देवीपञ्चशतिकबाट उद्धृत पाठ ।

११ रूपाताद्यतीतगा–क ।

१२ करक्षिणी–ग ।

१३ मृत्युकालान्तयातिनी–क ; मृत्युकालान्तपातिनी–ग ।

१४ ओमित्येषा–तन्त्रालोकको विवेक टीकामा देवीपञ्चशतिकबाट उद्धृत पाठ ।

१५ मृत्युकालान्तयातिनी–क ; मृत्युकालान्तपातनी–ग ।

१६ यस्य–क,ग ।

१७ ज्ञेया सा–क ।

१८ अगाडिको म अक्षर टुटेको–क ।

**मायामलविनिर्मुक्ता[1] विज्ञानामृतनन्दिनी ॥ ३७ ॥**
**सर्वलोकस्य कल्याणी भद्रा भद्रसुखप्रदा[2] ।**
**यत्रैव शाम्यति परा[3] भद्रकाली[4] तु सा स्मृता ॥ ३८ ॥**
**(भेदस्य द्रावणाद् भद्रा भद्रसिद्धिकरीति या ।)[5]**
**एकाकिनी चैकवीरा सुसूक्ष्मा सूक्ष्मवर्जिता ।**
**परमात्मपरावस्था[6] परापरस्वरूपिणी ॥ ३९ ॥**
**सा कला पररूपेण यत्र संलीयते शिव ।**
**सा काली[7] परमार्केति ज्ञेया भस्माङ्गभूषण ॥ ४० ॥**
**शब्दब्रह्मपदातीता[8] षट्त्रिंशान्तनवान्तगा[9] ।**
**ब्रह्माण्डखण्डादुत्तीर्णा मार्तण्डी मूर्तिरव्यया ॥ ४१ ॥**
**सा कला लीयते यस्यां मार्तण्डी[10] कालिकोच्यते ।**
**वरदा विश्वरूपा च गुणातीतापराकला[11] ॥ ४२ ॥**
**अघोरा[12] सा स्वरारावा[13] कालाग्निग्रसनोद्यता ।**
**निरामया निराकारा यस्यां सा शाम्यति[14] स्फुटम् ॥ ४३ ॥**
**कालाग्निरुद्रकालीति[15] सा ज्ञेयामरवन्दित ।**
**ऋतोज्ज्वला[16] महादीप्ता सूर्यकोटिसमप्रभा ॥ ४४ ॥**

---

१ महाबल–ग ; मायामल– तन्त्रालोकको विवेक टीकामा देवीपञ्चशतकबाट उद्धृत पाठ ।
२ भद्रभद्रयुप्रदा–ग ; रुद्रारुद– तन्त्रालोकको विवेक टीकामा देवीपञ्चशतकबाट उद्धृत पाठ ।
३ पुरा–ग ; कला– तन्त्रालोकको विवेक टीकामा देवीपञ्चशतकबाट उद्धृत पाठ ।
४ भद्र पाठ टुटेको–क ।
५ तन्त्रालोक ४।१५७, विवेकव्याख्यामा उद्धृत अधिक पाठ ।
६ परमात्मा परावस्था–ग ; परमात्मपदावस्था– तन्त्रालोकको विवेकव्याख्यामा देवीपञ्चशतकबाट उद्धृत पाठ ।
७ सा का अक्षर टुटेको, ली अक्षरको केही भाग टुटेको–क ।
८ शब्दब्रह्मपरातीत–ग ; शब्दब्रह्मपदातीता– तन्त्रालोकको विवेक टीकामा देवीपञ्चशतकबाट उद्धृत पाठ ।
९ षट्त्रिंशान्तनवांतगा–ग ।
१० मार्त अक्षर टुटेको ।
११ गुणतीता पराकला–ग ।
१२ अघोषा–तन्त्रालोकको विवेक टीकामा श्रीदेवीपञ्चशतकबाट उद्धृत पाठ ।
१३ सुराराव–ग ।
१४ शाप्यति–ग ।
१५ कालाग्निको का अक्षर टुटेको–क ।
१६ ऋतुज्वला–क,ग ।

**कलाकलङ्करहिता कालस्य कलनोद्यता[१] ।**
**यत्र सा लयमाप्नोति[२] कालकालीति[३] सा स्मृता ॥ ४५ ॥**
**तेजोज्ज्वला महादीप्ता सूर्यकोटिसमप्रभा ।**
**दशसप्तविसर्गस्था महाभैरवभीषणा ॥ ४६ ॥**
**संहरेद्[४] भैरवान् सर्वान् विश्वं च सुरपूजित ।**
**साऽन्तः[५] शाम्यति यस्यां च सा स्याद् भरितभैरवी[६] ॥ ४७ ॥**

तिनै पराशक्ति महाकालीबाट संहाररूपी कृत्य गर्नका लागि संहारचक्रनायिकाहरू उत्पन्न भएका हुन् । तिनीहरूको संहरणका लागि अर्थात् तिनीहरूलाई एकत्र गर्नका लागि ती पराशक्ति महाकाली एकै भए तापनि विभिन्न बनिन् । काललाई समेत आफैँमा लीन गर्ने ती महाकाली काललाई आफूमा लीन गरेपछि प्रलयावस्थामा शान्त हुन्छिन् । एउटै ती ब्रह्मस्वरूपिणी पराशक्ति आफ्नो शक्तिको विस्तारबाट संहाररूप कार्यमा उद्यत छिन् । यसप्रकार परमार्क (परमादित्य) स्वरूप महाकाली एउटै भए तापनि बाह्र भेदले आभासित हुन्छिन् । उनीबाट नै उत्पन्न भएका ती बाह्र कालीहरू शुद्ध, निर्मल प्रकाशस्वरूप, करौडौँ सूर्यको जस्तो तेजले युक्त भएका, चन्द्रमाको जस्तो निर्मल आभाले युक्त छन् । कालीका विग्रहस्वरूप ती बाह्र कालीहरू शान्त तथा कालीका स्वभावले युक्त छन् । सम्पूर्ण तत्त्वहरूलाई आफूभित्र नै विलीन गर्ने स्वभाव भएकी पराशक्ति काली काललाई समेत आफूमा लय गर्दछिन् । आफ्नो स्वाभाविक चैतन्यपदमा आरूढ भएकी, आफ्नो प्रकृष्ट भावले युक्त भएकी ती कुलेश्वरी महाकाली भनेर चिनिन्छिन् । पारम्पर्यक्रमबाट उदाएकी, सदसत् तथा व्यक्त सद्भाववाली, परमानन्दरूप स्वभावमा रमाउने, बिन्दुधाममा स्थित, अचल स्वरूप भएकी, आफ्नो इच्छाअनुरूप रहेकी अर्थात् स्वतन्त्र स्वभाव भएकी, नित्यस्वरूप भएकी, संसारमा उनीबाहेक अरू कसैको सत्ता नभएकाले एक्ली, एकवीरा अर्थात् सम्पूर्ण कार्य गर्ने क्षमता भएकी अद्वितीय स्वरूपकी, अत्यन्त सूक्ष्म, अव्ययस्वरूप भएकी, परादेवी बाह्र कालीका रूपमा व्यक्त हुन्छिन् । हे भैरव ! सम्पूर्ण कारणदेखि मुक्त रहेकी अर्थात् स्वयं नै सबैको कारण भएकीले कारणहीन, आफ्नो इच्छाअनुरूप रहेकी अर्थात्

---

१ कनोद्यता–ग ।
२ प्नो अक्षरको केही केही भाग टुटेको–क ।
३ कालकाली तु–क ।
४ संहार–ग ।
५ शान्तः–क,ग ।
६ साम्याद्भरित–ग ।

सर्वतन्त्रस्वतन्त्र स्वभाव भएकी, व्योमस्वरूप भएकी, चैतन्याकाशको बीचमा रहेकी, व्योमचक्रमा व्यवस्थित भएकी, निरामयस्वरूप भएकी अर्थात् मल, माया र कर्मरूप पाशद्वारा अनावृत आफ्नो वास्तविक चैतन्य स्वरूपमा रहेकी, अप्रमेयस्वरूप भएकी, अर्धमात्रामा स्थित भएकीले अनुच्चार्य स्वभाव भएकी बिन्दुरूपिणी, भैरवहरूलाई ग्रास गर्दै गरेकी, समग्र आनन्दले युक्त, चित्स्वरूप सूर्यको माझमा भासित हुने ती कालीका बाह्रवटा नामहरू सुन। जसबाट मन्त्रको उदय हुन्छ, जो चैतन्यस्वरूप गगनमा रहेकी छिन्, स्वयं चिदाकाशस्वरूपकी छिन् तथा चिदाकाशबाट वर्जित छिन् अर्थात् ती सबैबाट अतीत छिन्, जो सर्वमयी छिन्, पुनः सबैबाट विनिर्मुक्त छिन्, जो संहारस्वरूपिणी छिन्, सृष्टिरूप अर्थ (कार्य) लाई सम्पन्न गर्न सक्षम विश्वरूप ऐश्वर्य कला जसमा लीन भएर शान्त हुन्छ ती बाह्रवटीमध्येकी प्रथम सृष्टिकाली हुन्। जो हंस अर्थात् मुक्त स्वरूपवाली छिन् तथा रौँको टुप्पोको सय भाग बराबर सूक्ष्म स्वरूपले रहेको पुद्गल अर्थात् पाशबद्ध जीवस्वरूपवाली छिन् अर्थात् जो मुक्त एवं बद्ध दुवै हुन्, जो सम्पूर्ण शरीरमा प्राणको रूपमा रहेकी छिन् किनभने चितिशक्ति नै सर्वप्रथम प्राणको रूपमा परिणत भएकी हुन्, जो नित्यनिरन्तर सृष्टि एवं स्थितिरूप नृत्य सम्पादन गर्दछिन्, ती देवी जहाँबाट उत्पन्न हुन्छिन् र पुनः जहाँ विलीन हुन्छिन्, हे महेश्वर! हे देवाधिदेव! तिनलाई स्थितिकाली भनेर जान्नू। शुद्ध वर्ण भएकी चण्डकाली जो अमृतलाई ग्रास गर्न अर्थात् पान गर्न उद्यत छिन्, जो भाव एवं अभावले मुक्त छिन्, जो विश्वलाई संहार गर्ने स्वरूपकी छिन् ती देवी जहाँ विलीन हुन्छिन् ती संहारकाली हुन्। जसलाई आँखाले ग्रहण गर्न सकिँदैन, जसलाई इन्द्रियका माध्यमबाट प्राप्त गर्न सकिँदैन, जो निर्गुण एवं निरहङ्कार स्वभावकी छिन् तथा सम्पूर्ण विश्वमण्डललाई रागमय बनाउँछिन् त्यस्तो कलाले सम्पन्न देवी जसबाट उत्पन्न हुन्छिन् तिनलाई रक्तकाली भनेर बुझ्नुपर्छ। जसरी समुद्रको माझबाट उत्पन्न भएका जलतरङ्गहरू पुनः समुद्रमै विलीन हुन्छन् त्यसरी नै महाचैतन्यबाट उत्पन्न जगत् प्रलयकालमा त्यही चैतन्यमा नै विलीन हुन्छ। विश्वसृष्टिको कारणस्वरूप त्यो स्वतन्त्र चितिशक्ति कलारहित, भीषण स्वरूप भएकी, रौद्र स्वरूप भएकी, कुल, कौल एवं अकुल स्वरूप भएकी छिन्, जो अलक्ष्य, लक्ष्य र निर्लक्ष्य स्वभावकी छिन् त्यस्ती सुकाली नामकी देवी क्रम तथा अक्रमयोगबाट सिद्धि दिनेवाली छिन्। यमराजको स्वरूपमा रहेकी, रूपातीत अथवा निराकार स्वरूपका रूपमा जानिने यस्तो कला जसमा लीन हुन्छ ती यमकाली हुन्। आफ्नो स्वातन्त्र्यद्वारा पाशबद्ध जीवको रूपमा रहेकी, आफ्नो वास्तविक चैतन्य स्वरूपमा रहेकी, रूपातीत

आदि पदभन्दा माथि रहेकी अर्थात् पिण्ड, पद, रूप र रूपातीत पदभन्दा पनि माथि रहेकी, करङ्किणीमुद्राको प्रदर्शनबाट प्रसन्न हुने करङ्किणी नामकी शक्तिस्वरूप, कुलकी स्वामिनी, मृत्युस्वरूप काललाई आफूभित्र समेट्ने स्वभाव भएकी कालसङ्कर्षिणी, मृत्युस्वरूप कालकला जसको शरीरमा प्रवेश गर्दछ त्यस्ती भगवतीलाई मृत्युकाली भनेर जान्नू। आवागमनरूप सुगम्य संसारमा रहेकी, महाज्ञानस्वरूप प्रकाशको अवलोकन गर्ने, मायारूप मलले निर्मुक्त, विशिष्ट ज्ञान वा रहस्यविद्यारूपी अमृतले प्रसन्न हुने समस्त लोकको कल्याण गर्ने स्वभाव भएकी, स्वयं कल्याणस्वरूप भएकी एवं कल्याणरूप सुख प्रदान गर्ने यस्ती भगवती जहाँ विलीन भई शान्तपदमा पुग्छिन् तिनलाई भद्रकाली भनेर भनिन्छ। (भेदरूप संसारलाई द्रावण गर्ने वा नष्ट गर्ने भएकीले उनी भद्रा वा कल्याणस्वरूप हुन् एवं कल्याणकारक सिद्धि प्रदान गर्ने देवी हुन्।)। शब्दब्रह्मभन्दा माथि रहेकी अर्थात् परं ब्रह्मपदमा रहेकी, पृथ्वीदेखि शिवसम्मका छत्तीस तत्त्वको सार एवं मातृकाक्षरका नौवटा वर्णको सारका रूपमा जानिने, विश्वोत्तीर्ण रूपमा रहेकी, निर्विकार मार्तण्ड मूर्तिरूप कला जसमा विलीन हुन्छ तिनैलाई मार्तण्डीकाली भनिन्छ। अभीष्ट वर प्रदान गर्ने, सम्पूर्ण जगत्मा जड एवं अजड पदार्थका रूपमा विश्वरूपले आभासित भइरहेकी, सत्त्व, रज र तमस् रूप त्रिगुणबाट उत्तीर्ण अवस्थामा रहेकी, पराकलाले युक्त, सौम्य स्वरूप भएकी, स्वरस्वरूप नादले युक्त, कालाग्निलाई ग्रसन गर्न उद्यत, निरामय स्वरूप भएकी, निराकार यस्ती भगवती जसमा विलीन भई शान्त अवस्थामा रहन्छिन् तिनलाई कालाग्निरुद्रकाली भनेर जान्नू। परम सत्यद्वारा जो उज्ज्वल बनेकी छिन्, जो अत्यन्त जाज्वल्यमान स्वरूपकी छिन्, करोडौँ सूर्यको झैँ जसको आभा छ, जो कलारूप कलङ्कले रहित छिन्, जो काललाई ग्रसन गर्न उद्यत छिन् यस्ती भगवती जहाँ लीन हुन्छिन् त्यस्ती महाशक्तिलाई कालकाली भनेर जानिन्छ। जो तेजले धपक्क बलेकी अत्यन्त देदीप्यमान स्वरूप भएकी छिन, जसका करोडौँ सूर्यका झैँ आभा छन्, जो विशिष्ट सृजनास्वरूप सप्तदशाक्षरी मातृसद्भावरूपिणी महाविद्याको रूपमा रहेकी छिन्, जो अत्यन्त डरलाग्दो महाभैरव स्वरूपकी छिन्, भैरवसहित सम्पूर्ण विश्वलाई आफूभित्र नै लीन गर्ने संहारलीला सम्पन्न गर्ने भगवती जसभित्र लीन हुन्छिन् त्यस्ती पूर्ण तृप्त, निरभिलाषस्वरूप भएकी सबै द्वादश कालीकी समष्टिस्वरूप सर्वोच्च महाशक्ति महाभैरवचण्डोग्रघोरकाली हुन्॥ १२-४७॥

**महाभैरवचण्डोग्रघोरकाली परात्परा[१] ।**
**पूज्येयं ब्रह्मपद्मे हि निराख्या च निरामया ॥ ४८ ॥**
**षोडशान्ते नवान्ते वा चिदन्तः परमेश्वर ।**
**स्वसंवित्तिक्रमेणैव बाह्ये[२] वाऽथ[३] त्रिलोचन ॥ ४९ ॥**
**राजवर्त्तेन रजसा व्योमबिम्बं तु कारयेत् ।**
**बिम्बद्वादशकं[४] बाह्ये तद्रूपमवतारयेत्[५] ॥ ५० ॥**
**लोहितां[६] व्योमरेखां तु[७] दद्यात् सिन्दूरकेण च ।**
**विपर्ययेण वा कार्या शुक्ला वा व्योमरेखिका ॥ ५१ ॥**
**निशिते शूलचक्रे वा पूजयेत् तां स्वदेहजे[८] ।**
**पञ्चाशीतिस्तु देवीनां कोटयस्तत्र नित्यशः ॥ ५२ ॥**
**व्योमरूपाश्च तिष्ठन्ति महासिद्धिप्रदा यतः ।**
**मध्ये पूज्या महाकाली बाह्येऽन्याद् वा दशः क्रमात् ॥ ५३ ॥**
**पूर्वादारभ्य सर्वास्ताः पूजयेद्योगिनन्दन ।**
**स्त्रीवेशधारी भूत्वाऽसौ नग्नवासा महामतिः ॥ ५४ ॥**
**निर्विकल्पः प्रसन्नात्मा पूजाकर्मविशारदः ।**
**यथातथा यत्रतत्र सर्वत्र विमलाशयः ॥ ५५ ॥**

यी अनिर्वचिनीय स्वरूप भएकी महाभैरवचण्डोग्रघोरकालीलाई ब्रह्मपद्म अर्थात् सहस्रारचक्र, षोडशान्त, नवान्त वा हृदयकमलमा संवित्तिक्रमले पूजा गर्नुपर्छ अथवा बाह्य धामस्वरूप सुन्दर रातो वस्त्र, भूमि, कपालपात्र वा त्यसको अनुकल्पस्वरूप नरिवलको खबटा (विश्वामित्रकपाल), मद्यले भरिएको घ्याम्पो, मण्डल र धारिलो त्रिशूलमा पूजा गर्नुपर्छ। बाह्य धामस्वरूप भूमिको बीचमा बाह्र अङ्गुलको दुई तीनगुणा चौडाइ भएको व्योमबिम्ब (आकाशको प्रतिबिम्बस्वरूप बाटुलो घेरा) बन्ने गरी रातो अथवा सेतो रङको बाटुलो घेरा बनाई बीचको सो

---

१ परावरा–क ; परा च सा - तन्त्रालोकको विवेकव्याख्यामा देवीपञ्चशतकबाट उद्धृत पाठ ।

२ यो पाठ अनुपलब्ध–ग ।

३ वाक्यनाथ–ग ।

४ बिंबद्वादशकं वाह्ये पदावलीलाई तद्रूपमवतारयेत् भन्दा अघि ˘ चिह्न दिएर सोही हरफको माथि थपिएको–ग ।

५ तद्रूपमवतारयेत, पम अक्षरमा सेतो दाग लागेको–क ।

६ लोहितां]संशोधित पाठ ; लोहितं–क,ख,ग ।

७ व्योमरेखां तु]संशोधित पाठ ; व्योमरेषान्त–क ; व्योमरेखान्त–ख, व्योमरेखान्तं–ग ।

८ पूजयेत्तत् स्वदेहजे–ख ।

गोलाकार भागमा रातो रङको चूर्णले पोती व्योमबिम्ब बनाउनू। अत्यन्त धारिलो त्रिशूलचक्र वा आफ्नो देहमा रहेका कायपीठस्वरूप शिर र आन्तरचक्रहरूमा महाभैरवचण्डोग्रघोरकालीको पूजा गर्नुपर्छ। त्रिशूलको हृदयस्थलमा (त्रिशूलको मूलमा) सदासर्वदा ठूलाठूला सिद्धिहरू प्रदान गर्ने चिद्‌गगनस्वरूपका पचासी करोड देवीहरू निवास गर्दछन्। बाह्य धाममा पूजा गर्दा पूर्वादि क्रमले अन्य देवीहरूलाई पूजा गरेर बीचमा महाभैरवचण्डोग्रघोरकाली (महाकाली) को पूजा गर्नू। ती द्वादशकाली एवं तिनको समष्टिस्वरूप महाकाली वा महाभैरवचण्डोग्रघोरकालीको पूजा गर्ने क्रममा पूजाकर्ममा प्रवीण, महामति, निर्मल चित्त भएको साधकले स्त्रीको भेष धारण गरेर वा निर्वस्त्र भएर निर्विकल्प एवं प्रसन्न चित्तका साथ पूजा गर्नुपर्छ॥ ४८-५५॥

**अत्र विद्यां[1] प्रवक्ष्यामि मुखपारम्परागताम्[2]।**
**न ज्ञाता केनचिद् देव[3] तव स्नेहाद् वदाम्यहम्॥ ५६॥**
**श्रृणु सम्यग्विधानेन विद्यां गुरुमुखोत्थिताम्।**
**नाभिवर्णं समुच्चार्यं वामजानुसमायुतम्[4]॥ ५७॥**
**योनिवर्णं महादेव वामजानु ततः परम्।**
**दक्षबाहुं च नादान्तं[5] केशान्तं[6] परमेश्वर॥ ५८॥**
**एकीकुर्यात् समासेन बीजराजमुमाप्रिय।**
**नादं[7] द्विधा[8] समुच्चार्यं वामजानुसमायुतम्॥ ५९॥**
**प्रथमं नाभिसंयुक्तं द्वितीयं दक्षदंष्ट्रया।**
**भूषणं सव्यकर्णस्य[9] हृदयं नाभिसंयुतम्॥ ६०॥**
**वामपार्श्वं वामकर्णं तथान्तादस्थिभूषणम्[10]।**
**अन्त्रान्तं[11] विष्णुमुण्डं च जीवं योनिं च गुह्यगम्[12]॥ ६१॥**

---

१ अत्र वि टुटेको–क।
२ मखपारंपरागताम्–ग।
३ ज्ञानात्केनचिद्देवि–क।
४ वामजानुस टुटेको–क।
५ नादार्ण्णं–ख ; नादार्णं–ग।
६ केशार्णं–ख,ग।
७ दं अक्षर टुटेको–क।
८ द्वि अक्षर टुटेको–क।
९ सर्वकर्णस्य–क।
१० तथान्तादस्थिभूषणम् देखि पूज्यनाम्ना च (५/७१) सम्मको पाठ अनुपलब्ध–ख।
११ अंवार्णं–ग।
१२ दुह्यगम्–ग।

**शिरोरुहादिगं[१] वर्णं दक्षिणोरु समुद्धरेत् ।**
**पञ्चधास्त्रं[२] समुच्चार्यं[३] नाशनं चेतसां पराम्[४] ॥ ६२ ॥**
**सप्तदशाक्षराऽशेषमनोजफलदायिका[५] ।**
**अस्या नाम न गृह्णीयाद् वाच्या वा षोडशाधिका[६] ॥ ६३ ॥**
**गोपनीया प्रयत्नेन विद्या विद्येश्वरेश्वरी ।**
**सकृदुच्चारणाद् देव्यास्तिष्ठन्ति[७] क्षणमात्रतः ॥ ६४ ॥**
**पञ्चाशीतिस्तु देवीनां कोटयो व्योमभासिकाः[८] ।**
**तस्मान्नोच्चारयेद् देवीं खेचरत्वप्रदायिकाम्[९] ॥ ६५ ॥**

अब यहाँ गुरुमुखपरम्पराबाट आएको तथा अहिलेसम्म कसैलाई पनि थाहा नभएको विद्या तिम्रो स्नेहले म बताउनेछु, राम्रोसँग सुन। (यसपछि श्लोक ५७ देखि श्लोक ६२ सम्म सप्तदशाक्षरी मातृसद्भावविद्याको उद्धार गरिएको छ)। यो सप्तदशाक्षरी मातृसद्भावविद्या सम्पूर्ण मनोवाञ्छा पूर्ति गर्ने विद्या हो। यस विद्यालाई प्रयत्नपूर्वक गोप्य राख्नुपर्छ। यस विद्याको गोपनीयताको विचार नगरी अनधिकारी व्यक्तिका अगाडि यसको उच्चारण गरेमा खेचरीस्वरूप पचासी करोड योगिनीहरू क्षणभरका लागि मात्र त्यहाँ रही उक्त व्यक्तिलाई त्यागिदिन्छन् र आफ्नो कृपाबाट वञ्चित गरिदिन्छन् त्यसैले चिदाकाशमा विचरण गर्ने सामर्थ्य प्रदान गर्ने उक्त सप्तदशाक्षरी मातृसद्भावविद्या र सो विद्याकी अधिष्ठातृदेवीको नाम अनधिकारीका अगाडि उच्चारण गर्नु हुँदैन ॥ ५६-६५ ॥

**मध्ये यासां पूजनीया महाकाली कुलेश्वर ।**
**तासां मन्त्रान् प्रवक्ष्यामि श्रृणु भैरवनन्दन । ६६ ॥**

---

१ शिरोरुहादिकं–ग ।

२ धा अक्षरको डिको केही मेटिएको–क ; पञ्च..स्त्रं, धा अक्षर अट्ने ठाउँ खाली छोडिएको–ग ।

३ समुद्धार्यं–ग ।

४ परम्–ग ।

५ मनोघफलदायिका–क ; मनोधफलदायिका–ग ।

६ मा.ग अस्यां तमन गृह्णीयादनाच्यावा षोडशाधिका, नाच्यावाको मुनि ..... चिह्न दिइएको–ग छ ।

७ तिष्ठति–ग ।

८ व्योमभाषिकाः–ग ।

९ खेचरश्चप्रदायिकाम्–ग ।

नादान्तं[1] सव्यदंष्ट्रा च युक्तं बीजमनुत्तमम्[2] ।
तथा नादं सनाभिस्थं[3] नाभिवर्णं च[4] केवलम्[5] ॥ ६७ ॥
विलोमेन त्रयो[6] वर्णा भूषिता वानजानुना ।
मन्त्रोऽयं किल कालीनां श्रृणुष्वान्यद् वदामि ते ॥ ६८ ॥
सप्तदशाक्षरां[7] कृत्वा पञ्चफट्कारवर्जितम् ।
[8]द्वादशेभ्यश्चैकमेकमेकैकस्या महेश्वर ॥ ६९ ॥
योज्यं[9] तदादिमध्यान्ते[10] पश्चात् संज्ञां प्रकल्पयेत् ।
फट्कारं च ततः पश्चान्नमः[11] पादान्तवर्जिता ॥ ७० ॥
बीजमन्त्रेण वा पूज्या नाम्ना चामन्त्रितेन तु ।[12]
सृष्टिसंहृदनामाख्यास्त्रियो विविधयो मताः ॥ ७१ ॥
नवाक्षरा तु या देवी तस्या एतद् विजृम्भितम्[13] ।
साऽपि पूर्वोक्तबीजस्य प्रपञ्चत्वे व्यवस्थिता ॥ ७२ ॥
तत् स्वयं पूजितं येन[14] विश्वं तेन प्रपूजितम् ।
पूजनीया महादेव संहारान्तकरी परा ॥ ७३ ॥
न ज्ञाता त्रिषु लोकेषु त्वदृते भक्तिवत्सल ।
चक्रं समस्तपूर्वोक्तं सहचक्रत्रयेण वा[15] ॥ ७४ ॥
पूज्यां[16] समयविद्यां च दिक्षु[17] चैव विदिक्षु च ।

---

१ नादार्णं–ग ।
२ युक्तं बीजमनुत्तमम् पाठ मसी उडेकाले नबुझिने भएको–क ।
३ तथा नादं सनाभिस्थं पाठ मसी उडेकाले नबुझिने भएको–क, सनाभिस्थ–ग ।
४ नाभिवर्णं च पाठ मसी उडेकाले नबुझिने भएको–क ।
५ यहाँ पूर्णविराम वाचक दण्डको प्रयोग हुनुपर्नेमा नभएको–क ।
६ विलोमेनोभयो–ग ।
७ सप्तादशाक्षरा–ग ।
८ द्वादशेभ्यश्चै पाठ मसी उडेकाले नबुझिने भएको, क अक्षर टुटेको–क; द्वादशभ्यश्चैक–ग ।
९ योज्या–क ।
१० तदादिमस्यां ते–ग ।
११ पश्चात्तमः–ग ।
१२ बीजेन, चा अक्षरको पछाडि अक्षर थपसूचक यस्तो चिह्न दिएर सोही चिह्नको सीधा माथि पत्रको माथिल्लो खाली भागमा **मन्त्रितेन तु । सृष्टिसंहृदनामाख्या** ऽ३ लेखिएको–ग ।
१३ एताद्विजृम्भितं–ख ; एताद्विजृम्भितम्–ग ।
१४ ये अक्षरको एकार टुटेको–क ।
१५ त्रये अक्षर मसी उडेकाले नबुझिने भएको, ण वा अक्षर टुटेको–क ।
१६ पूज्या पाठ टुटेको–क ।
१७ दिक्षुं–ग ।

**व्योमचक्रत्रिशूलाब्जौ[1] क्रमेण परिपूजयेत्[2] ॥ ७५ ॥**
**एकद्वित्रिचतुर्भेदैः समदिक् च तथापरम् ।**
**शक्त्या सह परं क्षोभं मन्त्रध्यानैकतत्परः[3] ॥ ७६ ॥**
**कृत्वा शक्त्युत्थितैर्द्रव्यैः पूजयेच्चक्रमध्यगः[4] ।**
**समस्तचक्रमध्ये वा काञ्चिदेकां[5] प्रपूजयेत् ॥ ७७ ॥**
**पूजयेद्रक्तवस्त्रे वा दीपे खड्गे च मूर्द्धनि[6] ।**
**मध्ये[7] पूज्या पुनर्देवी विद्येशानी नवाक्षरा ॥ ७८ ॥**
**बहिश्चक्रोदिताः पूज्याः पूर्वोक्ता भक्तिवत्सल ।**
**सृष्ट्याद्या बाह्यतः पूज्या मध्ये सप्तदशाक्षरा ॥ ७९ ॥**
**नानाविधानि[8] पुष्पाणि नानाद्रव्याणि दापयेत्[9] ।**
**नानाविधाश्च[10] पशवो दातव्या अविशङ्कितम् ॥ ८० ॥[11]**
**रेतो हराम्बु पुष्पं च क्षारं नालाज्यकं तथा ।**
**पौरुषं क्ष्माभवं[12] छागं मीनजं शाकुनीयकम् ॥ ८१ ॥**
**पलाण्डुं लशुनं चैव द्रव्यद्वादशकं शुभम् ।**
**एभिर्द्वादशभिर्देवीनैवेद्यैस्तोषयेच्छिव[13] ॥ ८२ ॥**
**अन्यानि यानि द्रव्याणि रसरूपाणि दापयेत् ।**
**पूजनीया[14] यथान्यायं वित्तशाठ्यं न कारयेत् ॥ ८३ ॥**
**पश्चाद् गुरुं दक्षयेत सर्वस्वेन सुरेश्वर ।**

---

१ व्योमचक्रत्रिशूला च–क,ख,ग ।
२ परिपूजयेत–क ।
३ न्त्रध्या टुटेको–क ; मन्त्रध्यानैकतत्परं–ख ; मन्त्रध्यानैकतत्परम्–ग ।
४ पूजयेञ्चक्रमध्यगः–ग ।
५ काश्चिदेकां–ख ।
६ दीपे खड्गे च मूर्द्धनि]संशोधित पाठ ; दीपे खड्गेशमूर्द्धनि–क,ख ; दीपखड्गेशमूर्द्धनि–ग ।
७ म अक्षर टुटेको–क ।
८ पछिल्लो ना अक्षरको अगाडिको भाग अलिकति टुटेको–क ।
९ पुष्पाणि नानाद्रव्याणि दापयेत् पाठ अनुपलब्ध–क ।
१० यो पाठ अनुपलब्ध–क ।
११ पशवो दातव्या अविशङ्कितम्]संशोधित पाठ ; पशूनदेव दातव्यान्यविशङ्कितं–क ; नानाविधान् पशून् देव दातव्यान्यविशङ्कितं–ख, नानाविधान्पशून्देव दातव्यान्यविशङ्कितम्–ग ।
१२ पौरुषक्षाभवं–ग ।
१३ एभिर्द्वादशभिर्देवीनैवेद्यैस्तोषयेच्छिव]संशोधित पाठ ; एभिर्द्वादशिभिर्देव्यो नैवेद्यैस्तोषयेच्छिव–क,ख,ग ।
१४ पूजनाया–ग ।

**आज्ञाभङ्गो न कर्तव्यः प्राणांस्तस्मै प्रदापयेत् ॥ ८४ ॥**
**एतत् ते सर्वमाख्यातं क्रमं कालिसमुद्भवम्[1] ।**
**गोपयेत् प्राणवद्यत्नादन्यथा[2] मरणं भवेत् ॥ ८५ ॥**
**मुखाम्नायगता विद्या वक्त्रं नो युज्यते हर ।**
**यस्माच्छ्रीनाथभाण्डारे चिन्तामणिरिवस्थिता ॥ ८६ ॥**
**मया तथैव हृदये[3] विद्येशी[4] गोपिता हर ॥ ८७ ॥**

इति श्रीमदुत्तरपीठोद्भूते श्रीश्रीनाथावतारिते श्रीकालिकाकुले पञ्चशते पञ्चमः पटलः ॥

हे कुलेश्वर ! ती द्वादशकालीहरूको माझमा महाकाली ( महाभैरवचण्डोघोरकाली) को पूजा गरिन्छ । अब म ती द्वादशकालीहरूको मन्त्र बताउँछु, सुन । (यसपछि श्लोक ७० सम्म द्वादशकालीहरूको मन्त्रोद्धार गरिएको छ) । उपर्युक्त बीजमन्त्र वा नाममन्त्रले द्वादशकालीको पूजा गर्नू । द्वादशकालीको बीचमा पूजित हुने जुन नववर्णवाली कुलेश्वरी महाकाली हुन् तिनैको यो क्रीडा हो । ती नवाक्षरी महाकाली पनि पूर्वोक्त बीजमन्त्रको प्रपञ्चत्वमा व्यवस्थित भएकी छिन् । यो सम्पूर्ण जगत् विश्वप्रपञ्च नवाक्षरी महाकालीको क्रीडा हो, विस्तार हो त्यसैले पूर्वोक्त बीजमन्त्रद्वारा यिनको पूजा हुँदा सम्पूर्ण विश्व नै पूजित हुन्छ । अतः कालसङ्कर्षिणी परादेवी महाकाली पूजनीया छिन् । हे भक्तिवत्सल ! तिमीबाहेक तीनै लोकमा अरू कसैले पनि तिनलाई जान्न सकेको छैन । माथि शूलचक्रका क्रममा बताइएको समस्त शूलचक्र वा शूलाग्र, शूलमध्य र शूलमूलरूप चक्रत्रयका साथमा समयविद्या एवं व्योमचक्र र त्रिशूलपद्मलाई एक, दुई, तीन र चार भेदले दिशा विदिशामा पूजा गर्नू । मन्त्र तथा ध्यानमा एकाग्रचित्त साधकले चक्रको माझमा प्रवेश गरी आफ्नी दूतीलाई क्षुब्ध (उत्तेजित) गराएर उनीबाट उत्पन्न द्रव्यले उनैका साथमा समयविद्या एवं व्योमचक्र र त्रिशूलचक्रको पूजा गर्नू । समस्त चक्रको माझमा परा, परापरा र अपरामध्ये कुनै एक देवीको पूजा गर्नू । रातो वस्त्र, दीप, खड्ग वा कायपीठस्वरूप आफ्नो शिरमा पूर्वोक्त देवीहरूको पूजा गर्नू र यागधामको बीचमा नवाक्षरीविद्याकी अधिष्ठात्री महाकालीको पूजा गर्नू ।

---

१ वम् पाठ टुटेको–क ।
२ गोपयेत्प्रा पाठ टुटेको–क ।
३ हृदये पाठ टुटेको–क ।
४ वि अक्षर टुटेको–क ।

हे भक्तिवत्सल ! पूर्वोक्त चक्रोदित सृष्टिकाली आदि द्वादशकालीहरूको पूजा आवरणपूजाका रूपमा बाहिर गर्नुपर्छ भने बीचमा सप्तदशाक्षरी मातृसद्भावरूपिणी महाभैरवचण्डोग्रघोरकाली (महाकाली) को पूजा गर्नुपर्छ। पूजाका क्रममा विभिन्न किसिमका फूलहरू, विभिन्न किसिमका द्रव्यहरू अर्पण गर्नू तथा निःशङ्कपूर्वक विभिन्न किसिमका पशुहरूको बलि दिनू। कालिकाकुलक्रम परम्परामा बाह्र प्रकारका द्रव्यलाई शुभ मानिन्छ। ती कुलद्रव्यहरू हुन्- वीर्य, रज, नुन, थुक, दिसा, च्याउ, बोको, माछा, पंक्षीको मासु, प्याज र लसुन। त्यसैले यिनै बाह्र प्रकारका कुलद्रव्यहरूलाई नैवेद्यका रूपमा समर्पण गरी भगवतीलाई प्रसन्न बनाउनू। अरू पनि जेजति पेय द्रव्यहरू छन् ती पनि देवीलाई चढाउनू। पैसाको लोभ वा घमण्ड नगरी कुलागममा बताएअनुसार पूजा गर्नू। अन्त्यमा गुरुलाई सर्वस्व समर्पण गर्नू , गुरुको आज्ञाभङ्ग नगर्नू, गुरुका लागि जीवन दिनुपरे पनि दिनू। हे भैरव ! तिमीलाई सम्पूर्ण कालिकाक्रम बताएँ। यो कालिकाक्रम (अनाख्याक्रम) आफ्नो प्राणलाई जसरी रक्षा गरिन्छ त्यसरी नै रक्षा गर्नू, गोप्य राख्नू अन्यथा मरण हुन्छ। गुरुमुखपरम्पराबाट आएको यो विद्या अदीक्षितहरूलाई प्रकाशित गर्नु हुँदैन। श्रीनाथको भण्डारमा चिन्तामणिझैँ रहेको यो रहस्यमय कालिकाकुलक्रम मैले त्यसरी नै आफ्नो हृदयमा गोप्यरूपले राखेको छु ॥ ६६-८७ ॥

॥ उत्तरपीठमा उद्भव भएको श्रीनाथद्वारा अवतारित **कालिकाकुलपञ्चशतक** नामक ग्रन्थमा तन्त्राचार्य माधवप्रसाद लामिछानेद्वारा नेपाली भाषानुवादसहित सम्पादित पाँचौँ पटल पूर्ण भयो ॥

# षष्ठः पटलः

**॥ श्रीभैरव[1] उवाच[2] ॥**
**श्रुतो मया[3] भवद्वक्त्रात् कालिकाकुलनिर्णयः ।**
**अधुना श्रोतुमिच्छामि[4] विद्यां समयपूरणीम् ॥ १ ॥**
**समयांश्च तथा ब्रूहि कुलाचारक्रमो[5] यथा ।**
**क्षेत्रपालस्य[6] मन्त्रं[7] तु[8] वद[9] मे[10] परमेश्वरि ॥ २ ॥**
**येन विज्ञातमात्रेण भवानि कुलभाजनः[11] ॥ ३ ॥**

श्रीभैरवले भने–

हे परमेश्वरी ! तपाईंको मुखबाट कालिकाकुलनिर्णय सुनें । अब समयपूरणीविद्या सुन्न चाहन्छु । कुलाचारक्रमअनुसार साधकले पालना गर्नुपर्ने समय (नियम वा आचार)हरू, क्षेत्रपालको मन्त्र मलाई बताउनुहोस् जसको ज्ञानमात्रले म कुलसाधनाका लागि योग्यपात्र बनूँ ॥ १-३ ॥

**॥ श्रीभैरव्युवाच ॥**
**श्रृणु भैरव तत्त्वेन कथयामि तवाद्भुतम् ।**
**येन विज्ञातमात्रेण[12] सिद्धचसे[13] कुलनन्दन[14] ॥ ४ ॥**
**रहस्यं श्रृणु सङ्क्षेपात् कालिकाकुलसम्भवम् ।**
**न निन्देत् कौलिकाचारं तद्द्रव्याणि न निन्दयेत् ॥ ५ ॥**

---

१ व अक्षर टुटेको–क ।
२ उवाच पाठ टुटेको–क ।
३ श्रुतो मया पाठ टुटेको–क ।
४ च्छामि पाठ लिपिकरले लेख्न छुटाएको–क ।
५ कुलाचारक्रमे–ख,ग ।
६ स्य अक्षर टुटेको–क ।
७ मन्त्रं पाठ टुटेको–क ।
८ तु अक्षर टुटेको–क ।
९ वद पाठ टुटेको–क ।
१० मे अक्षर टुटेको–क ।
११ कुलभाजनं–ख ; कुलभाजनम्–ग ।
१२ ज्ञा अक्षरको आकारवाचक दण्ड एवं तमात्रेण पाठ टुटेको–क ।
१३ सिद्ध्यसे पाठ टुटेको–क ।
१४ कुल पाठ टुटेको–क ।

कालीति वाक्यं न वदेद्भारी[1] शब्दं न[2] भाषयेत्[3] ।
कुमारीं[4] पूजयेन्नित्यमात्मज्ञानरतो भवेत् ॥ ६ ॥
गुर्वर्थे तु[5] त्यजेत् प्राणान् दाराभूमिधनानि च ।
नित्यमेव जपं[6] कुर्यादाह्निकं न विलोपयेत्[7] ॥ ७ ॥
न जुगुप्सेत[8] नारीणां वीराणां च कृताकृते ।
गुरोर्नोल्लङ्घयेदाज्ञां कुलशास्त्रं च पूजयेत् ॥ ८ ॥
न कुर्यात् पशुवत् कार्यं नातिगर्वं च भावयेत् ।
तर्कार्थे[9] वाऽथ[10] शब्दार्थे[11] न जुगुप्सेत् कुलागमम्[12] ॥९॥
परित्यज्य शिवद्वैतमद्वैतं परिभावयेत् ।
स्वच्छन्दं[13] पूजयेद् वामां[14] कृष्णवासां न निन्दयेत् ॥ १० ॥
यदुक्तं परमेशान कृशोदर्याऽथवा[15] स्वयम् ।
न जुगुप्सेत् ततः शास्त्रं वन्दनीयं यथा हर ॥ ११ ॥
एषः समयसंयुक्तः कालीभक्तो महेश्वर ।
अचिरात् सिद्धिभागी स्यात् प्राप्य वैहायसीं गतिम् ॥ १२ ॥
नान्यथा[16] सिद्धिभाक् सम्यग्गौरवं[17] याति दुर्मतिः ।
एवं[18] ज्ञात्वा सदा देव पालयेत् समयान् कुले[19] ॥ १३ ॥

---

१ द्भारी पाठ टुटेको–क ; वदेड्डारी–ग ।
२ शब्दं न पाठ टुटेको–क ।
३ भाषयेत् पाठ टुटेको–क ।
४ कुमा पाठ टुटेको–क ।
५ गुर्व्वर्थेन–क,ख ।
६ जयं–क ।
७ येत् पाठ टुटेको–क ।
८ न जुगुप्सेत पाठ टुटेको–क ।
९ र्थे अक्षरको पछिल्लो भाग अलिकति टुटेको–क ।
१० वाथ पाठ टुटेको–क ।
११ शब्द अक्षर टुटेको–क ।
१२ जुगुप्से कुलागमम्–ग ।
१३ स्वच्छंदां–ख ; स्वच्छन्दां–ग ।
१४ पूजयेद् वामां]संशोधित पाठ ; पूजयेण्णामां–क,ख ; पूजयेध्वामां–ग ।
१५ शो अक्षरको पछिल्लो भाग अलिकति टुटेको, दर्याऽथवा पाठ पूरै टुटेको–क ।
१६ नान्यथा पाठ टुटेको–क ।
१७ सम्यग्गौरवं पाठ मसी उडेकाले नबुझिने भएको–क ।
१८ ए अक्षर मसी उडेकाले नबुझिने भएको–क ।
१९ पालयेत्समयाकुले–ग ।

**एतद्रहस्यं परमं समयार्थं महाधिया ।**
**न देयं यस्य कस्यापि महादोषमवाप्नुयात्[1] ॥ १४ ॥**

श्रीभैरवीले भनिन्–

हे भैरव ! तिमीलाई म कालिकाकुलक्रमसम्बन्धी अद्‌भुत रहस्य तात्त्विकरूपले बताउँछु । जुन कुरा जान्नाले हे कुलनन्दन ! तिमी कुलसाधनामा सिद्ध बन्नेछौ त्यो कुरा म तिमीलाई बताउँछु, त्यसलाई ध्यानपूर्वक सुन । कौलिकाचार एवं कुलसाधनामा प्रयोग हुने कुलद्रव्यहरूको निन्दा नगर्नू । 'काली' भन्ने शब्द जथाभावी उच्चारण नगर्नू, ठूलो स्वर गरेर नबोल्नू, नित्य कुमारीपूजन गर्नू, आत्मज्ञानमा तल्लीन रहनू । गुरुका लागि आफ्नो धनसम्पत्ति, आवश्यक परे प्राणै पनि त्याग गर्नू, नित्यजप गर्नू, कुलसाधनामा गर्नुपर्ने दैनिक कृत्यको लोप नगर्नू, नारी र वीर (वीरभावमा स्थित कुलसाधक)हरूले गरेको वा नगरेको कुरालाई लिएर उनीहरूको निन्दा नगर्नू, गुरुको आज्ञालाई उल्लङ्घन नगर्नू, कुलशास्त्रलाई पूजा गर्नू, पशुभावमा स्थित साधकले जस्तो आचरण नगर्नू अर्थात् वीरभावमा रहेर तदनुकूल आचरण गर्नू, घमण्ड नगर्नू, तर्कका लागि वा केही बोल्नका लागि मात्र भनेर कुलसाधनासँग सम्बद्ध आगमहरूको निन्दा नगर्नू, द्वैतभावलाई त्यागेर शिवाद्वैतको चिन्तन गर्नू, स्वच्छन्दपूर्वक वामा (नारीशक्ति)को पूजा गर्नू, कालो कपडाको निन्दा नगर्नू, आगमग्रन्थहरूमा स्वयं कृशोदरी ( भैरवी)ले जे उपदेश गरेकी छिन् ती उपदेशहरूको तथा कालिकाकुलक्रमसँग सम्बद्ध वन्दनीय शास्त्रको निन्दा नगर्नू । हे महेश्वर ! माथि बताइएका समय (साधकले पालना गर्नुपर्ने नियम वा आचार) ले युक्त कालीको अनन्य भक्त शीघ्र नै खेचरीगति पाएर सिद्धिको अधिकारी बन्दछ । कुलाचारक्रममा बताइएका ती समयहरूको पालना नगर्ने कुबुद्धि व्यक्ति सिद्धिको अधिकारी बन्दैन बरु त्यस्तो व्यक्ति रौरव नामक नरकमा पर्दछ । अतः यो रहस्य बुझेर साधकले कुलाचारक्रममा बताइएका समयहरूको पालना गरोस् । कुलागममा वर्णित कुलसाधनासँग सम्बद्ध समय (साधकले पालना गर्नुपर्ने नियम वा आचार)को अर्थ वा आशय, त्यससम्बन्धी परम रहस्य बुद्धिमान् व्यक्तिले कसैलाई पनि नबताओस् । यदि गुरु र शास्त्रको वचनलाई उल्लङ्घन गरेर कुनै व्यक्तिले कुलाचारको रहस्य अनधिकारी व्यक्तिलाई बताउँछ भने त्यसलाई महादोष लाग्नेछ ॥ ४–१४ ॥

**अथातः सम्प्रवक्ष्यामि विद्यां समयपूरणीम् ।**
**महादोषक्षयकरीं[2] महासौभाग्यवर्द्धनीम् ॥ १५ ॥**

---

१ यो पूरै हरफ मसी उडेर नबुझिने भएको–क ।
२ महादोषक्षयं करीं–ख ।

**महासिद्धिप्रदां देव महाभयनिवारिणीम्**[1] **।**
**असिद्धिसाधनीं देवीमुपाशाक्लेशवर्जिताम्**[2] **॥ १६ ॥**
**तपोजपविनिर्मुक्तां स्मृतमात्रशुभप्रदाम्**[3] **।**
**महायोगेशवक्त्रस्थां महापापक्षयङ्करीम्**[4] **॥ १७ ॥**
**शतमेकं तु वर्णानामूनाधिकविवर्जिताम्**[5] **।**
**पञ्चास्त्रसंयुतां**[6] **देवीं श्रृणु कामान्धकान्तक ॥ १८ ॥**
**वामोरुसंस्थितं**[7] **वर्णं वामबाहुसदक्षिणाम्**[8] **।**
**नादं केशान्तसंस्थं च प्रोद्धृतं वीरनायक**[9] **॥ १९ ॥**
**खातकास्त्रं ततः**[10] **पश्चान्महाचण्डेपदं तथा**[11] **।**
**पदं देयं**[12] **चण्डमुखि चण्डयोगेश्वरीति**[13] **च ॥ २० ॥**
**कुलान्त्रं**[14] **तु ततो देयं चण्डदुःखपदं ततः ।**
**विमोचनि**[15] **पदं**[16] **पश्चात् सर्वसर्वयुता**[17] **परम्**[18] **॥ २१ ॥**
**समयेति पदं लोपविघातनि**[19] **पदं हर ।**
**तेजोवति पदं चान्यदमृतं मूर्तिसंयुतम् ॥ २२ ॥**

---

१ महाभयनिवारणीं–ख ।
२ वी अक्षर टुटेको–क ।
३ स्मृतमात्रशुभप्रदाम]संशोधित पाठ ; श्रुतमात्राच्चभप्रदाम्–क ; स्मृतमात्रां शुभप्रदां–ख ; स्मृतमात्रां शुभप्रदाम्–ग ।
४ महापापक्षंकरीं–क ।
५ तां अक्षर टुटेको–क ।
६ पञ्चास्त्रसं पाठ मसी उडेकाले नबुझिने भएको–क ।
७ रु अक्षर मसी उडेकाले नबुझिने भएको–क ।
८ वामबाहुसदक्षिणम्]संशोधित पाठ ; वामबाहुसदक्षिणं–क,ख,ग ।
९ वीरनायकं–क ।
१० खातकास्त्रं पाठ मसी उडेकाले नबुझिने भएको एवं ततः पाठ टुटेको–क ।
११ पश्चान्महाचण्डपदं तथा–ग ।
१२ देपं–क, देवं लेखी वंको माथि यं लेखिएको छ तर वंलाई काटिएको छैन–ग ।
१३ योगेश्व पाठ मसी उडेकाले नबुझिने भएको–ख, चण्ड....श्वरीति–ग ।
१४ कलान्तं–ग ।
१५ विमोचनि पाठ मसी उडेकाले नबुझिने भएको–क ।
१६ पदं पाठ मसी उडेकाले नबुझिने भएको–क ।
१७ पचात्सर्वशर्वयुता पाठ मसी उडेकाले नबुझिने भएको–क ।
१८ परम् पाठ मसी उडेकाले नबुझिने भएको–क ।
१९ णोपविघातनि–क ; नीयविघातनि–ग ।

**असिद्धसाधनिपदं सिद्धिऋद्धिपदे तथा ।**
**नाशयेतिपदं[1] सर्वं दोषानभिमतं ततः[2] ॥ २३ ॥**
**मे प्रयच्छ पदं सर्वे सर्वगे[3] पदसंयुतम् ।**
**अरूपेतिपदं सर्वरूपेपदसमायुतम्[4] ॥ २४ ॥**
**हृदयार्णं च वामेन वामजानुकसंज्ञकम् ।**
**एतद् बीजवरं श्रेष्ठमुद्धरेच्च तथापरम् ॥ २५ ॥**
**रावबीजं भूषणं च ब्रह्मदण्डनिपातितम् ।**
**एतदक्षरराजेन्द्रं ब्रह्मास्त्रमिति गद्यते ॥ २६ ॥**
**विद्याद्यं बीजराजेशमुद्धरेत् सुरपूजित[5] ।**
**खातकास्त्रं ततो घोरं योज्यं त्रिपुरनाशन ॥ २७ ॥**
**देयं वामनयनं च वामजानुकसंयुतम् ।**
**एतच्छिवं वरारोहे ततश्चाङ्कुशमुद्धरेत् ॥ २८ ॥**
**शिखास्थं वामजानुस्थं नादवर्णं महेश्वर ।**
**एवमेकीकृतं पश्चात् सर्वविद्येपदं ततः ॥ २९ ॥**
**स्वरवर्णपदं[6] पश्चात् संहारास्त्रं तथापरम् ।**
**द्विजातधनुविद्यान्ते योजयेत् परमेश्वर ॥ ३० ॥**
**एषा विद्या महादेव त्रिदशेश्वरपूजिता ।**
**महासमयलोपार्थे प्रमादाद् दूषणं प्रति ॥ ३१ ॥**
**ध्याता सर्वैर्महासिद्धैर्योगिनीखेचरीगणैः[7] ।**
**सकृत् संस्मृतमात्रं च नाशमायाति दुष्कृतम्[8] ॥ ३२ ॥**
**एकधोच्चारणाद्धन्ति[9] सामयीं विघ्नसन्ततिम् ।**
**सर्वथा रक्षयेदेनं[10] चौरेभ्यो द्रविणं यथा ॥ ३३ ॥**

अब म समयपूरणीविद्या बताउनेछु जुन विद्या महादोषलाई नाश गर्ने, महान् सौभाग्य वृद्धि गर्ने, महासिद्धि प्रदान गर्ने, संसाररूपी महाभयलाई निवारण गर्ने, असिद्ध कुरालाई पनि सिद्ध गर्ने, उपासनासम्बन्धी

---

१ नाशयतिपदं–ग ।
२ षा अक्षर टुटेको–क ।
३ सर्वम लेखी मको मुनि..चिह्न दिइएको–ग ।
४ सर्व्वं रूपेपदसमायुतम्–ग ।
५ मु अक्षर टुटेको–क ।
६ सुरवर्णपदं–क ।
७ सर्वैर्महासिद्धैर्योगिनीखचरीगणैः–ग ।
८ दुःकृतं–क ।
९ एकधोच्चारणाद्धन्ति]संशोधित पाठ ; एकचोच्चारणाद्धन्ति–क,ख,ग ।
१० रक्षसेदन्यं–ग ।

क्लेशले हीन, जपतप आदिबाट मुक्त, स्मरणमात्रले पनि कल्याण प्रदान गर्ने, साक्षात् योगेश्वर परम शिवको वक्त्रमा रहेको, महापापलाई क्षय गर्ने, एकसय एक वर्णले युक्त तथा पाँचवटा अस्त्रमन्त्र (फट्) ले युक्त छ। उक्त मन्त्र अब सुन। (श्लोक १८ देखि श्लोक २९ सम्म समयपूरणीविद्याको उद्धार गरिएको छ)। हे महादेव ! यो समयपूरणीविद्या त्रिदशेश्वर इन्द्रद्वारा सम्पूजित विद्या हो। यस विद्याको जपले समयलोपजन्य दोषका साथै प्रमादवश उत्पन्न भएको दोषको नाश हुन्छ। यस विद्याको ध्यान महान् सिद्धहरू, योगिनीहरू एवं खेचरीगणहरूले गरेका छन्। यस विद्यालाई एकपटक सम्झँदा मात्र पनि सम्पूर्ण दुष्कृतहरू नष्ट हुन्छन्। यस विद्याको एकपटक मात्रै उच्चारण गर्नाले पनि आचारसँग सम्बद्ध विघ्नपरम्परा नाश हुन्छ। जसरी धनलाई लुकाएर चोरबाट त्यसको रक्षा गरिन्छ त्यसरी नै यस विद्यालाई कुलागममा दीक्षा नलिएका अनधिकारी व्यक्तिसमक्ष गोप्य राखेर यसको रक्षा गर्नुपर्दछ ॥ १५–३३ ॥

**नित्यं[1] संस्मरणाद्रुद्र योगिनीवल्लभो भवेत् ।**
**श्रृणु त्वं परमेशान क्षेत्रपालस्य भैरव ॥ ३४ ॥**
**मन्त्रं तु परमं सिद्धं पूजितं सुरनायकैः ।**
**येन पूजितमात्रेण[2] सर्वसिद्धिर्भविष्यति ॥ ३५ ॥**
**मायां श्रीं पूर्वमुच्चार्य देवीपुत्रपदं तथा ।**
**वटुकनाथाय पदं गच्छोच्छुष्मपदं तथा ॥ ३६ ॥**
**हारिणीति[3] पदं चान्यन्मुहुर्मुहुस्तथापरम्[4] ।**
**शिखार्णं[5] दक्षजानुस्थमेकीकृत्य[6] द्विधा कुरु ॥ ३७ ॥**
**क्षपणेति पदं पश्चाद् वटुकायपदमेव च[7] ।**
**बलिं गृह्ण द्विधा कृत्वा होमान्तपदसंयुतम् ॥ ३८ ॥**
**क्षेत्रपालस्य[8] मन्त्रोऽयं पूजयेत् कुलभास्कर ।**

---

१ त्यं अक्षर मसी उडेकाले नबुझिने भएको–क ।
२ त्रे अक्षर टुटेको–क ।
३ हारिणीति]संशोधित पाठ ; हारिणोति–क,ख,ग, (मातृका खमा पहिले हारिणीति लेखिएकोमा णीको इकारलाई धमिलो बनाई पछि हारिणोति लेखिएको स्पष्ट देखिन्छ) ।
४ स्तथा पाठ टुटेको–क ।
५ शिखान्तं
६ शिखार्णन्दक्षजानुस्थं एकीकृत्वा–ख ।
७ वटुकपदमेव च]संशोधित पाठ ; वटुकायदमेव च–क ; पश्चाद्वटुकापदमेव च–ख, ग ।
८ ..त्रपाल पाठ टुटेको–क ।

**पूजिते सर्वसिद्धैश्च तथान्यैरितरैर्जनैः ॥ ३९ ॥**
**यो वा नश्यादयं[1] मोहादाचार्यः कुलपूजने[2] ।**
**तस्य सर्वं वृथा याति[3] निर्मूलं[4] सम्पतत्यधः ॥ ४० ॥**
**यावन्न दत्तं वटुके कुतः सिद्धिमवाप्नुयात् ।**
**एतत् सङ्क्षेपतः प्रोक्तं त्वत्प्रीत्या मन्मथान्तक ॥ ४१ ॥**

इति श्रीमदुत्तरपीठोद्भूते श्रीश्रीनाथावतारिते श्रीकालिकाकुले पञ्चशते षष्ठः पटलः ॥

हे रुद्र ! यस समयपूरणीविद्यालाई नित्य स्मरण गऱ्यो भने अर्थात् यसको जप गऱ्यो भने उक्त साधक योगिनीहरूको कृपापात्र बन्दछ । हे परमेश्वर ! अब क्षेत्रपाललाई बलि दिँदा प्रयोग गरिने देवताहरूद्वारा पूजित परम सिद्ध मन्त्र बताउँछु, सुन । उक्त मन्त्रको पूजनमात्रले पनि सम्पूर्ण सिद्धिहरू प्राप्त हुन्छन् । (यसपछि श्लोक ३५ देखि श्लोक ३७ सम्म क्षेत्रपाललाई बलि दिँदा प्रयोग गर्ने मन्त्रको उद्धार गरिएको छ) । हे कुलसाधनाका ज्योति ! सम्पूर्ण सिद्धहरू र अन्य व्यक्तिहरूद्वारा पूजा गरिएको क्षेत्रपाललाई बलिप्रदान गर्ने यस मन्त्रको अवश्य पूजा गर्नू । कुलपूजनमा मोहवश आचार्यले यस मन्त्रको लोप गरे भने उनका सम्पूर्ण कुराहरू व्यर्थ हुन्छन्, उनको समूल वंशको अधःपतन हुन्छ । जबसम्म बटुकभैरवलाई (क्षेत्रपाललाई) बलि दिइँदैन तबसम्म सिद्धि कहाँ प्राप्त हुन्छ ? हे मन्मथान्तक (कामदेवलाई अन्त्य गर्ने) महादेव ! तिमीप्रतिको प्रीतिका कारण मैले यो कुरा तिमीलाई सङ्क्षेपमा भनेँ ॥ ३४-४१ ॥

॥ उत्तरपीठमा उद्भव भएको श्रीनाथद्वारा अवतारित **कालिकाकुलपञ्चशतक** नामक ग्रन्थमा तन्त्राचार्य माधवप्रसाद लामिछानेद्वारा नेपाली भाषानुवादसहित सम्पादित छैठौँ पटल पूर्ण भयो ॥

---

१ नश्यादयं]संशोधित पाठ ; नस्यान्धये–क,ख,ग ।
२ कुलपूजिते–ग ।
३ याति पाठ टुटेको–क ।
४ निर्मूलं]संशोधित पाठ ; नि अक्षर टुटेको–क ; निर्म्मूलः–ख,ग ।

# सप्तमः पटलः

**॥ श्रीभैरव उवाच ॥**
**हे देवि परमेशानि संसारभयनाशनि ।**
**श्रुतो मया त्वत्प्रसादात् कालिकाकुलनिर्णयः ॥ १ ॥**
**अशेषकुलसद्भावः सिद्धानामपि दुर्लभः ।**
**अद्यापि संशयो देवि न निवृत्तः[१] सुरेश्वरि ॥ २ ॥**
**सारभूतं न विज्ञातं येन चित्तं प्रसीदति[२] ।**
**सृष्टौ स्थितौ च संहारे चतुर्थे कालिकाक्रमे ॥ ३ ॥**
**सोपदेशेन भावेन सोपमाक्रमलक्षणम् ।**
**येनाहं वेद्मि सद्भावं सारभूतं मुखान्मुखम् ॥ ४ ॥**
**आयातं च[३] कथं देवि प्राप्तिर्वा तत्र कीदृशी ।**
**येन विज्ञातमात्रेण उत्पतेद् गमनान्तरम् ॥ ५ ॥**
**तं वदस्व सुखोपायं येन स्यां गतसंशयः[४] ।**
**यत्र गर्भो न विद्येत प्रकटं वद कौलिनि ॥ ६ ॥**
**सारात् सारं[५] कुलेशानि परमामृतदायिनि ।**
**त्यज कौटिल्यभावं मेऽनुग्रहं कुरु भैरवि ॥ ७ ॥**
**प्राप्नुयामचिराद्येन[६] शाम्भवं पदमुत्तमम् ॥ ८ ॥**

श्रीभैरवले भने–

हे भैरवी ! संसाररूप भयलाई नाश गर्ने हे परमेश्वरी ! तपाईंको कृपाबाट मैले सिद्धहरूका लागि पनि दुर्लभ, सम्पूर्ण कुलसाधनाको सारस्वरूप कालिकाकुलक्रमको निर्णय सुनें तैपनि हे सुरेश्वरी ! मेरो संशय हटेको छैन । सृष्टि, स्थिति, संहार र कालिकाक्रम वा अनाख्याक्रममा निहित त्यस्तो सारभूत कुरा मैले जानेको छैन जसबाट मेरो चित्त प्रसन्न होस् । अतः मलाई उपदेशभावले त्यो ज्ञान बताउनुहोस् जसबाट मैले मुखपरम्पराबाट प्राप्त उपमाक्रमलक्षण सहितको सारभूत कालिकासद्भाव जानूँ । हे देवी ! उक्त कालिकाकुलक्रम कसरी अवतीर्ण भयो ? त्यसको प्राप्ति कस्तो हो ? जुन कुरा

---

१ निव्वत्तः–क ; निवृत्ते–ख,ग ।
२ सी अक्षर मसी उडेकाले नदेखिने भएको–क ।
३ आ अक्षर टुटेको–क ।
४ स्याद्गतसंशयः–ख,ग ।
५ अघिल्लो सा अक्षरको अगाडिको भाग अलिकति टुटेको–क ।
६ प्राप्नुयामोचिराद्येन–क ।

जान्नाले मात्रै पनि अर्कै संसारमा गमन हुन्छ त्यस्तो सुखको उपाय बताउनुहोस् जसबाट म संशयमुक्त बनूँ, जहाँ कुनै रहस्य नरहोस् । हे कुलेशानी ! मोक्षरूप परम अमृत प्रदान गर्ने हे देवी ! सार कुरा स्पष्ट रूपमा बताउनुहोस् । हे भैरवी ! मलाई अनुग्रह गर्नुहोस्, कौटिल्यभाव त्याग्नुहोस्, त्यस्तो उपाय बताउनुहोस् जसबाट म शीघ्र नै शाम्भव पद प्राप्त गरूँ ॥ १-८ ॥

**॥ श्रीभैरव्युवाच ॥**

**श्रृणु देव[1] रहस्यं यद् गोपनीयं प्रयत्नतः ।**
**कथयामि न सन्देहः श्रुतमेतत् पराद्यथा ॥ ९ ॥**
**श्रीमदुत्तरपीठेऽस्मिन्नायातं यादृशं स्थितम् ।**
**पीठेश्वरीणां हृद्यब्जे यादृशं[2] वर्तते सदा ॥ १० ॥**
**कर्णात् कर्णप्रयोगेण सञ्चरंश्च मुखान्मुखम् ।**
**न लभेद् भाग्यहीनोऽयं यदि जन्मशतैरपि ॥ ११ ॥**
**लभन्ते पुण्यकर्माणो यदि जन्मक्षयं गतः[3] ।**
**तथा च शक्तिपातेन कृशोदर्या अनुग्रहात् ॥ १२ ॥**
**नान्यथा प्राप्नुयात् कश्चिद्यदि रुद्रसमो भवेत् ।**
**तत् ते सर्वं प्रवक्ष्यामि ज्ञानं श्रीपीठसम्भवम् ॥ १३ ॥**
**यत्र गर्भो न चान्योऽस्ति[4] न क्लेशाः कुमृतिर्न[5] च ।**
**प्रकटं वच्मि वीरेन्द्र सद्योपाधिस्वरूपकम् ॥ १४ ॥**
**ज्ञातेन येन भूतेषु खेचरत्वं किमद्भुतम् ।**
**अणिमाद्याः सिद्धयोऽष्टौ नाद्भुतं[6] कालिकाक्रमे[7] ॥ १५ ॥**

श्रीभैरवीले भनिन्–

हे देव ! कालिकाकुलक्रमको यो रहस्य प्रयत्नपूर्वक गोप्य राख्नुपर्छ । यो रहस्य मैले परमेश्वरबाट जस्तो सुनें, यो ज्ञान उत्तरपीठमा जसरी आएर सुरक्षित रहेको छ, पीठेश्वरीहरूको हृदयकमलमा जुन ढङ्गले यो ज्ञान सधैं रहेको छ, श्रुतिपरम्पराबाट लोकमा प्रवाहित भइरहेको त्यस्तो ज्ञान म तिमीलाई बताउँछु, सुन । भाग्यहीन व्यक्तिले सयौं जन्ममा पनि यो ज्ञान प्राप्त गर्न सक्तैन । जो पुण्यकर्म गर्दछन्, जसको कर्म क्षय भएको छ तथा कृशोदरी (भगवती) द्वारा शक्तिपातका माध्यमबाट अनुग्रह भई जसले

---

१ दे अक्षरको एकार टुटेको–क ।
२ या अक्षर टुटेको–क ।
३ गतः पाठ टुटेको–क ।
४ न चा पाठ पूरै टुटेको, न्यो अक्षरको अगाडिको भाग अलिकति टुटेको–क ।
५ कुमति न–क ।
६ तं अक्षर टुटेको–क ।
७ अघिल्लो का अक्षरको अगाडिको भाग अलिकति टुटेको–क ।

रुद्रसमान तेज प्राप्त गरेको छ त्यस्तो व्यक्तिले यो ज्ञान प्राप्त गर्दछ अन्यथा यो ज्ञान प्राप्त गर्नु सम्भव छैन। श्रीपीठमा उद्‌भव भएको यो सबै ज्ञान म तिमीलाई बताउनेछु। क्लेशहरू तथा कुमतिले हीन, अर्को कुनै रहस्य नरहेको ब्रह्मको उपाधिस्वरूप ज्ञान म तिमीलाई स्पष्टरूपले उपदेश गर्छु जसको ज्ञानले प्राणीहरूमा खेचरत्व प्राप्ति कुनै अद्‌भुत कुरा रहँदैन। कालिकाक्रममा अणिमा आदि गरिएका सिद्धिहरू अद्‌भुत विषय होइनन् अर्थात् यी सहजै प्राप्त हुने विषयहरू हुन्॥ ९-१५॥

**तच्छृणुष्व समासेन सङ्क्षेपात् परमेश्वर।**
**योऽसावनादिनिधनः शिवः परमकारणः॥ १६॥**
**निर्गुणो निष्कलः[1] शान्तः कलनाकालवर्जितः।**
**निरञ्जनो निरालम्बो निराभासश्च भासकः॥ १७॥**
**निरिन्द्रियो निराधारः केवलः सङ्गवर्जितः।**
**अरजः शाश्वतोऽभ्रान्तः कल्पनातीतगोचरः॥ १८॥**
**शक्त्यातीतः परानन्दो गुणाश्रयविवर्जितः।**
**निर्विकारः परः शुद्धो हेतुदृष्टान्तवर्जितः॥ १९॥**
**सर्वभावान्तरस्थश्च व्योमातीतो निरामयः।**
**सर्वगः सर्वकर्ता च स्वच्छन्दामृतनिर्भरः॥ २०॥**
**निरुपाधिर्महादेवः सर्वभूतेष्ववस्थितः।**
**तस्यावबोधात् परमा स्वेच्छया परमेश्वर॥ २१॥**

हे परमेश्वर! त्यो ज्ञान अब तिमी सङ्क्षेपमा सुन। अनादि एवं अन्त्यहीन शिव जगत्‌का परम कारण हुन्। उनी निर्गुण, निष्कल, शान्त, असीम, कालहीन, निरञ्जन, निरालम्ब, निराभास र जगत्‌का प्रकाशक हुन्। उनी निरिन्द्रिय, निराधार, केवलस्वरूप, सङ्गहीन, राग वा वासनाहीन, शाश्वत, अभ्रान्त, सङ्कल्प एवं विकल्पस्वरूप मनभन्दा पर आत्माबाट मात्र प्रत्यक्ष हुने, शक्तिभन्दा अतीत, परमानन्दस्वरूप, गुण तथा आश्रयहीन, निर्विकार, परस्वरूप, शुद्ध, स्वयं विश्वको कारण भएकाले कारणरहित तथा कसैसँग पनि तुलना गर्न नसकिने छन्। उनी सम्पूर्ण भावमा विद्यमान छन्, शून्यातीत छन् तथा स्वस्वरूपमा स्थित रहेकाले निरामय छन्। उनी सर्वत्र व्याप्त छन्, उनी नै सर्वकर्ता हुन्, उनी स्वच्छन्द छन् तथा अमृतरूप आनन्दले भरिपूर्ण छन्। उनी उपाधिहीन छन्, उनी देवाधिदेव महादेव हुन् तथा उनी सम्पूर्ण प्राणीहरूमा चेतनाका रूपमा अवस्थित छन्। हे परमेश्वर! तिनै परम कारणस्वरूप विश्वोत्तीर्ण परम शिवमा जब विमर्शस्वरूप आफ्नो स्वातन्त्र्यशक्तिको बोध हुन्छ तब इच्छा, ज्ञान र क्रियाशक्तिको समष्टिस्वरूप परम स्वातन्त्र्यशक्ति कालिकाको प्रादुर्भाव हुन्छ॥ १६–२१॥

---

१ निःकल–क।

जाता सा कालिकाशक्तिरेका तद्धर्मधर्मिणी ।
सूक्ष्मरूपा परा शान्ता परमानन्दनन्दिता ॥ २२ ॥
स्वभावतः शिवा जाता वेद्यरूपा निरञ्जना ।
उन्मना समना सा तु स्वेच्छया परमेश्वरी ॥ २३ ॥
यथा रश्मिप्रभा सूर्ये वह्नौ च दहनात्मिका ।
अचिन्तिता समुत्पन्ना शिवस्य सहधर्मिणी ॥ २४ ॥
समनोन्मनरूपेण शिवेच्छा द्वयमद्वयम् ।
तत्तदिच्छाम्यनिच्छातस्तदिच्छेदक्रिये[1] शिवे ॥ २५ ॥
सम्भूता तु परा शक्तिः समनोन्मनरूपिणी ।
समना चैव विश्वेऽस्मिन् पञ्चार्थानां प्रसूयिनी ॥ २६ ॥
उन्मना शिवसामर्थ्यादर्पयेज्ज्ञानमुत्तमम् ।
पुनः सा ग्रसते विश्वं स्वेच्छया परमेश्वरी ॥ २७ ॥
तद्विवर्तः स्मृतो ज्योतिःपुञ्जश्चक्रेशिपूर्वगः ।
कलाबीजानि सूते सा सोमार्कानलसंयुता ॥ २८ ॥
एकाकारा[2] निरालोका परंधामस्वरूपिणी ।
तेजस्तु यस्या मध्यस्था सैकीभावत्वमागता ॥ २९ ॥
नानाऽऽख्यगा तु सा भाति भूरिभानुसमप्रभा ।
न शशीतारकाभावा नासौ व्योमेशरश्मिभा[3] ॥ ३० ॥
न च सा तडितःप्रख्या चित्रभानुसमा च सा ।
सा भासा जठरे नैव दृश्यते ज्ञानचक्षुषा ॥ ३१ ॥
उन्मेषमार्गचक्षुषा नान्यथा दृश्यते तु सा ।
प्रदीप्यन्ते[4] तया सर्वे वह्निश्चन्द्रार्कतारकाः ॥ ३२ ॥
रविसोमविभागेन सामरस्यपदप्रदा ।
तेन सोर्मिकुला[5] भीमा द्वैतभावस्य भक्षिणी ॥ ३३ ॥
संहारवह्नियोगेन[6] कुलप्राप्तगता परा ।
पारम्पर्यक्रमायाता तदुपासा सुरेश्वर ॥ ३४ ॥
पूजनात् सर्वसिद्धानां खेचरीणां शिवस्य च ।
सञ्जाता[7] तत्पदप्राप्तिर्नित्यं त्रिपुरदाहक ॥ ३५ ॥

---

१ तत्तदिच्छाम्यनिच्छातस्तदिच्छेदः क्रये–क ।
२ कारा पाठ टुटेको–क ।
३ सौ व्योमेश पाठ टुटेको–क ।
४ प्र अक्षर टुटेको–क ।
५ तेन सोर्मिकुला]संशोधित पाठ ; तेनासोर्मिकुला–क,ग ; तेनासोर्म्मिकुला–ख ।
६ यो अक्षरको अगाडिको भाग टुटेको–क ।
७ संयाता–क ।

उक्त भगवती कालिका अत्यन्त सूक्ष्म एवं शान्तस्वरूप भएकी, परमानन्दरूप क्रीडामा उल्लसित हुने स्वभावकी छिन् । शिवको विमर्शस्वरूप स्वातन्त्र्यशक्तिका रूपमा प्रकट भएकी परमेश्वरी भगवती काली ज्ञेय स्वरूपकी, निरञ्जन स्वरूपवाली, उन्मना एवं समना स्वरूपवाली छिन् । सूर्यमा रश्मिप्रभा र अग्निमा दाहकता अभिन्नरूपले रहेझैँ भगवती काली शिवकी अभिन्न शक्ति हुन् जसमा भेदको कल्पना गर्न सकिँदैन । यी दुवैको जुन यामलरूप हो त्यही नै आनन्दशक्ति हो जहाँबाट विश्वको रचना हुन्छ । परप्रमाता शिवमा रहने सृष्टि गर्ने चाहनास्वरूप परामर्श नै इच्छाशक्ति हो । सो इच्छाशक्ति क्षुभित र अक्षुभित गरी दुई प्रकारको हुन्छ । क्षुभितरूप इच्छाशक्ति समना हो भने अक्षुभित इच्छाशक्ति उन्मना हो । यसलाई यसरी पनि अर्थ्याउन सकिन्छ– शिव अनादि, प्रथम, अचल, शाश्वत धाम हो । आफ्नो इच्छाशक्तिका माध्यमबाट शिवले आफूलाई बाह्य जगत्का रूपमा उल्लसित गर्दछन् । शिवको इच्छाशक्ति नै सर्वप्रथम परम सूक्ष्म उन्मनाशक्तिको रूप धारण गर्दछ । प्रकाशस्वरूप यो शक्ति जब सृष्टिप्रति उन्मुख हुन्छ तब त्यसलाई समनाशक्ति भनिन्छ । समनारूप इच्छाशक्ति पञ्चार्थको जननी हो भने उन्मनारूप इच्छाशक्ति शिवसामर्थ्यका माध्यमबाट उत्तम ज्ञान वा शिवधामरूप फल प्रदान गर्ने शक्ति हो । त्यसैले शिवकी सहधर्मिणी कालिकाशक्ति समनारूप इच्छाशक्तिका माध्यमबाट विश्वप्रपञ्चको सृष्टि गर्छिन् भने पुनः उन्मनारूप इच्छाशक्तिका माध्यमबाट सम्पूर्ण विश्वलाई ग्रास गर्छिन् अर्थात् आफूमै लय गराउँछिन् । शक्तिचक्रकी मालिक्नी भगवती काली प्रलयकालपछि सर्वप्रथम आफ्नो विवर्तरूप ज्योतिःपुञ्जका रूपमा आभासित हुन्छिन् । सोम, सूर्य र अग्निरूप त्रिधाममध्ये परंधामस्वरूपिणी अर्थात् समष्टिस्वरूपले सूर्यधामका रूपमा रहेकी भगवती काली प्रलयकालिक अवस्थामा उनीबाहेक अन्य कसैको पनि उपस्थिति नरहने भएकाले एउटै वा अद्वितीय स्वरूपकी छिन् तथा प्रलयकालकी अधिष्ठात्री भएकीले तमोरूपिणी छिन् । सोम, सूर्य र अग्निको संयुक्तस्वरूपमा रहेकी भगवती काली अग्नि एवं सोमरूप आफ्ना कलाका बीजहरूलाई जन्माउँछिन् । विभिन्न नामले जानिने ती भगवती काली करोडौँ सूर्यको प्रभाझैँ प्रकाशित हुन्छिन् । न तिनलाई चन्द्रमा वा ताराको उपमा दिन सकिन्छ, न सूर्यको रश्मिझैँ आभा भएकी भन्न सकिन्छ, न त तिनलाई बिजुलीको उपमा दिन सकिन्छ । तिनी बाह्य चक्षुले भासित हुन्नन् । तिनी त ज्ञानचक्षुद्वारा हृदयभित्र अनुभूत हुन्छिन् । ज्ञानमार्गमा तल्लीन प्रज्ञारूपी नेत्रले तिनलाई देख्न सकिन्छ अन्यथा देखिँदैन । अग्नि, चन्द्र, तारा सबैथोक तिनीबाट प्रकाशित हुन्छन् तर तिनलाई कसैले प्रकाशित गर्न सक्तैन, तिनी

स्वयंप्रकाशस्वरूप छिन् । संहाररूप अग्निको योगले जब सृष्टिरूप चन्द्र र स्थितिरूप सूर्य द्रवित हुन पुग्छन् तब ती दुईको उद्‌बोधक स्थितिका कारण सामरस्यपद प्रदान गर्ने तथा द्वैतभावलाई भक्षण गर्ने कुण्डलिनी पराशक्ति उत्पत्ति र विनाशको क्रीडारूप कुलदशामा प्राप्त हुन्छिन् । हे सुरेश्वर ! जसको पूजनले सिद्धहरू, खेचरीगण एवं स्वयं शिवलाई त्यो परमपदको प्राप्ति नित्यरूपले भइरहेको छ त्यस्ती कुण्डलिनी पराशक्तिको उपासना पारम्पर्यक्रमबाट आएको छ ॥ २२-३५ ॥

**शिववह्न्यात्मके भावे द्वैतायाते सुरेश्वर ।**
**कालाग्न्यधो वह्निपुञ्ज ऊर्ध्वं[1] पीयूषमण्डलम् ॥ ३६ ॥**
**मध्येऽर्करूपा परमा धीतत्त्वस्यावलम्बिनी ।**
**मनोगर्वौ तथोर्ध्वाधो विषरूपौ स्थितौ सदा ॥ ३७ ॥**
**ऊर्ध्वे सृष्टिः परा प्रोक्ता शशाङ्कसकलोपमा ।**
**ऊर्ध्वमार्गस्य चाधस्तादग्निरूपा महोज्ज्वला ॥ ३८ ॥**
**उभयोर्भावयोर्देव मध्यात् संयोगसम्भवः ।**
**ज्ञेयोऽवतारो देवेश सौरः परमकारणम् ॥ ३९ ॥**
**दीप्तकीलालसंयोगध्यानादेकात्मतां गता ।**
**तदोपलब्धिभावेन प्राप्यते कालिकाक्रमः ॥ ४० ॥**
**तस्योपमा परानिष्ठा[2] उन्मनायां व्यवस्थिता ।**
**एतदुत्तरयोगेन स्थिता सा समना हर ॥ ४१ ॥**
**सृष्टिप्रलयभावेनाप्यवतारक्रमेण च ।**
**तदाद्यन्ते[3] महादेव महाविज्ञानभूमयम् ॥ ४२ ॥**

कालाग्निरुद्रसमान अग्निपुञ्ज तल रहेको छ भने अमृतको वर्षा गर्ने चन्द्रमण्डल माथि रहेको छ । ती दुईको बीचमा बुद्धितत्त्वको आलम्बनस्वरूप तेज (सूर्य)रूप परमा शक्ति रहेकी छिन् । मन र अहङ्कार दुवै विषरूपले क्रमशः माथि र तल रहेका छन् । माथि रहेको चन्द्रकला सृष्टिरूप पराशक्ति हुन् भने ऊर्ध्वमार्गको तल महान् उज्ज्वलस्वरूप संहाररूप अग्निकला रहेकी छिन् । सृष्टिरूप चन्द्रकला र संहाररूप अग्निकलाको बीचमा रहेको सूर्य अवतार (स्थिति) स्वरूप परम कारण हो भनेर जान्नू । प्रदीप्त संहाररूप अग्नि र सृष्टिरूप अमृतस्वरूप चन्द्रमाको बीचमा रहेको सूर्यरूप आत्मचैतन्यको ध्यानबाट जब परम कारणस्वरूप कालिकाशक्तिसँग ऐकात्म्यभावको बोध हुन्छ तब कालिकाक्रम (अनाख्याक्रम) को प्राप्ति हुन्छ ।

---

१ ऊर्ध्वं]संशोधित पाठ ; ऊर्ध्वे–क,ख,ग ।
२ परमा निष्ठा–क ।
३ ते अक्षरको अगाडिको भाग अलिकति टुटेको–क ।

परम कारणस्वरूप अनाख्याशक्ति कालिका अक्षुभित इच्छाशक्तिस्वरूप उन्मना अवस्थामा रहेकी छिन् । हे हर ! त्यसभन्दा पछिल्लो क्रममा सृष्टि, स्थिति (अवतार) र संहारक्रमले क्षुभित इच्छाशक्तिस्वरूप समना अवस्थामा तिनै कालिकाशक्ति रहेकी छिन् । हे महादेव ! त्यसको आदि र अन्त्यमा महाचैतन्यसत्ता विद्यमान छ ॥ ३६-४२ ॥

**कथयामि रहस्यं च कालिकाक्रममुत्तमम् ।**
**चिन्तयेत् परमादित्यं धामरूपं परं विभुम् ॥ ४३ ॥**
**चिच्चक्रचेतनायुक्तं चन्द्रकोटयवभासकम्[1] ।**
**कल्पान्ताग्निसहस्राभं भूरिसूर्यसमप्रभम् ॥ ४४ ॥**
**ऊहकादिशिवान्तस्थं सर्वसत्वादनोद्यतम् ।**
**कलालयेन सहसा प्रशान्तं चितिमण्डले ॥ ४५ ॥**
**तत्राकाशं[2] विजानीयान्निर्मलं[3] ब्रह्मसन्निभम् ।**
**यत्र सा संस्थिता देवी चिदविश्रामभूमिका[4] ॥ ४६ ॥**
**सृता द्वादशभिर्भेदैः परमार्कस्वरूपिणी ।**
**रश्मिद्वादशसद्रश्मिसहस्रशतसन्निभा[5] ॥ ४७ ॥**
**वाचां पथि कथं योज्या वक्त्रं सा कुलनन्दन ।**
**यो विन्दति सकृत् तस्यास्तत्क्षणात् खेचरो भवेत् ॥ ४८ ॥**
**निर्माति[6] विश्वमखिलं ग्रसते लीलया[7] पुनः[8] ।**
**न तस्य साधकस्यैवमुपमा भुवि विद्यते ॥ ४९ ॥**
**त्रैलोक्ये तिष्ठति परं प्रभुत्वेन यथेश्वरः[9] ।**
**परं विज्ञानविभवं कथितं ते[10] त्रिलोचन ॥ ५० ॥**

अब म अत्यन्त उत्तम कालिकाक्रम तथा त्यसको रहस्य बताउँछु । साधकले परम आदित्यधामस्वरूप व्यापक तत्त्वको चिन्तन गरोस् । चेतनास्वरूप चक्रले युक्त, करोडौं चन्द्रमालाई आभासित गर्ने, हजारौं

---

१ व अक्षर पूरै टुटेको, भा अक्षरको अगाडिको भाग अलिकति टुटेको एवं ..शकं–क ।
२ शं अक्षर टुटेको–क ।
३ विजानीया–क ।
४ विदविश्रामभूमिका–ग ।
५ ..श्मिसहस्रश पाठ टुटेको–क ।
६ निर्म्मिता–क ।
७ या अक्षर टुटेको–क ।
८ पु अक्षर टुटेको–क ।
९ यथेश्वरः]संशोधित पाठ ; यथेश्वर–क,ख,ग ।
१० कथितान्ते–ख,ग ।

कालाग्निको झैँ आभा भएको, अनेकौं सूर्यको झैँ आभा वा ज्योति भएको यस्तो परम व्यापक तत्त्व कलाहरूको लयका कारण अचानक चैतन्याकाशमा शान्त भएको चिन्तन गरोस्। उक्त चैतन्याकाश अत्यन्त निर्मल, ब्रह्मतत्त्वसमान कल्पना गर्नू जहाँ चेतनाको विश्रामभूमिस्वरूप महाकाली रहेकी छिन्। लाखौं रश्मिको आभाले युक्त परम सूर्यस्वरूपिणी महाकाली बाह्र रश्मिस्वरूप द्वादशकालीका रूपमा बाह्र भेदले फैलिएकी छिन्। हे कुलनन्दन! त्यस्ती अनिर्वचनीय भगवती कालीलाई कसरी वाणीद्वारा व्यक्त गर्न सकिन्छ ? जसले उनको स्वरूपलाई एकपटक जान्दछ ऊ तत्क्षण चिदाकाशमा विचरण गर्दै स्वरूपलाभको स्थितिमा पुग्दछ। यस संसारमा त्यस्तो साधकको कसैसँग तुलना हुन सक्तैन। उसले आफ्नो लीलाद्वारा सम्पूर्ण विश्वको निर्माण गर्न सक्तछ र पुनः आफूमा लीन गर्न सक्तछ अर्थात् उसमा सर्वकर्तृत्वशक्ति अभिव्यक्त हुन्छ, ईश्वरस्वरूप भई ऊ त्रैलोक्यमा परम प्रभुत्वले रहन्छ। हे त्रिलोचन! परम रहस्य तथा परम ऐश्वर्यस्वरूप विशिष्ट ज्ञानधाराको रूपमा रहेको यो अनाख्यास्वरूप कालिकाक्रम मैले तिमीलाई बताएँ ॥ ४३-५० ॥

**एतद्रहस्यं[1] परमं नाख्येयं कालिकाक्रमम्।**
**दुष्प्राप्यं[2] कालिकाम्नायं सिद्धानां बोधशालिनाम् ॥ ५१ ॥**
**न देयं क्रूरताद्वैतलोभमोहजुषां नृणाम्।**
**तान्त्रिकाणां न शैवानां न दद्याद् वैष्णवात्मनाम् ॥ ५२ ॥**
**भस्मनिष्ठाप्रपन्नानामस्थिमालादिधारिणाम्।**
**वेदान्तादिक्रियारूढिदानधर्मतपोजुषाम् ॥ ५३ ॥**
**तीर्थाश्रमप्रपन्नानां न देयं पारमार्थिकाम्।**
**देयं च गुरुभक्तानामात्मज्ञानरतस्य[3] च ॥ ५४ ॥**
**कुलागमरतस्यापि[4] कालिभक्तियुतस्य[5] च।**
**अद्वैतस्यापि धीरस्य गुप्ताचारस्य भैरव[6] ॥ ५५ ॥**
**तस्यैव च न दातव्यं किं पुनः प्राकृते जने।**
**एतत् सर्वं समासेन कथितं भुजगाङ्गद ॥ ५६ ॥**

---

१ ह अक्षर टुटेको–क।
२ दुष्प्राप्यं]संशोधित पाठ ; दुःप्राप्यं–क, दुष्प्राप्य–ख।
३ गुरुभक्तानामात्मज्ञानरहस्य–ग।
४ कुलागमरहस्यापि–ग।
५ कालिकाभक्तियुतस्य–क।
६ भै अक्षरको अगाडिको भाग अलिकति टुटेको–क।

यो विशिष्ट ज्ञानस्वरूप कालिकाम्नाय सुप्रबुद्ध सिद्धहरूका लागि पनि दुष्प्राप्य रहेको छ। क्रूरता, द्वैतभाव, लोभ, मोह आदिमा डुबेका मानिसहरू तथा कालिकाम्नायमा दीक्षा नलिई संस्कारसम्पन्न नभएका तान्त्रिक, शैव, वैष्णव, पाशुपत, कापालिक, वेदान्ती, कर्मकाण्डी आदि प्राकृतजनहरूलाई कालिकाम्नायको यो परम रहस्य नबताउनू। जो गुरुका परम भक्त छन्, जो आत्मज्ञानमा प्रवृत्त छन्, जो कुलागमको अभ्यासमा लागेका छन्, जो कालीका परम भक्त छन्, जो धीर स्वभावका छन्, जो गुप्ताचारमा प्रवृत्त छन्, जो अद्वैत मतमा रमाएका छन् त्यस्तालाई त राम्ररी अधिकारको परीक्षा नगरी यो ज्ञान दिनुहुँदैन भने अन्य अदीक्षित प्राकृत व्यक्तिहरूको के कुरा ? हे भुजगाङ्गद ! मैले तिमीलाई यी सबै कुराहरू सङ्क्षेपमा बताएँ ॥ ५१-५६ ॥

**योऽस्य शास्त्रस्य देवेश धारयेद् वन्दयेत् तथा ।**
**काङ्क्षेत पूजयेद् वाऽथ[१] योगिनीनां[२] स वल्लभः[३] ॥ ५७ ॥**
**यस्य तिष्ठति[४] हस्तस्थं शास्त्रं कालिक्रमाकुलम् ।**
**स पूज्यः[५] सर्वथा देव यथा भैरवनायकः ॥ ५८ ॥**

इति श्रीमदुत्तरपीठोद्भूते श्रीश्रीनाथावतारिते श्रीकालिकाकुले पञ्चशते सप्तमः पटलः ॥ समाप्तमिदं श्रीकालिकाक्रमम् ॥

जसले यो कालिकाकुलशास्त्रको वन्दना गर्दछ, यस शास्त्रमा बताइएको ज्ञानलाई सधैँ चिन्तनपूर्वक धारण गर्दछ, यो शास्त्रको ज्ञान प्राप्त गर्ने कामना गर्दछ त्यो व्यक्ति योगिनीहरूको कृपापात्र बन्दछ। जसको हातमा यो कालिकाकुलशास्त्र रहन्छ अर्थात् जसले यो कालिगकुलशास्त्रको मनन र निदिध्यासन गरेको छ त्यो व्यक्ति सधैँ भैरवझैँ पूज्य हुन्छ ॥ ५७-५८ ॥

॥ उत्तरपीठमा उद्भव भएको श्रीनाथद्वारा अवतारित **कालिकाकुलपञ्चशतक** नामक ग्रन्थमा तन्त्राचार्य माधवप्रसाद लामिछानेद्वारा नेपाली भाषानुवादसहित सम्पादित सातौँ पटल पूर्ण भयो ॥

---

१ थ अक्षर मेटिएको–क ।
२ यो पाठ मसी लतपतिएकाले नदेखिने भएको–क ।
३ वल्लभ–ग ।
४ ष्ठति पाठ लेख्न छुटेको–क ।
५ संपूज्यः–ख,ग ।

# परिशिष्ट

## अष्टिका
### (प्रबोधनाथद्वारा विरचित)

प्रबोधनाथद्वारा विरचित अष्टिका नामक स्तोत्र राष्ट्रिय अभिलेखालयमा पुस्तक सङ्ख्या ५–३५८ मा सूचीकृत तथा नेपाल–जर्मन हस्तलिखित ग्रन्थसंरक्षण परियोजनाद्वारा रिल नं बी-३०/२६ अन्तर्गत माइक्रोफिल्म गरिएको **कालिकाकुलपञ्चशतक** शीर्षकको मातृकाअन्तर्गत पत्रसङ्ख्या ९६-९७ मा सङ्ग्रह गरिएको छ ।

स्यान्डर्सनले प्रबोधनाथलाई चक्रभानुका शिष्यका रूपमा उल्लेख गरेका छन् (Goodall & Padoux(Ed.), 2007, P.292) . चक्रभानुको समय ई.सं. ९२५ देखि ई.सं. ९७५ अर्थात् वि.सं. ९८२ देखि वि.सं. १०३२ को आसपास निर्धारित भएकाले प्रबोधनाथलाई चक्रभानुभन्दा एक पुस्ता तल मान्दा उनको समय ई.सं. ९५० देखि ई.सं. १००० अर्थात् वि.सं. १००७ देखि वि.सं. १०५७ को आसपास देखापर्दछ (पूर्ववत्) । यिनको अर्को नाम तपोधन भएको कुरा नवजीवन रस्तोगीले उल्लेख गरेका छन् (रस्तोगी, ई.सं. २०११, पृ. ८१) । चक्रपाणिको रचना मानिएको **भावोपहार** नामक क्रमस्तोत्रमाथि रम्यदेवले लेखेको टीकामा तपस्वी प्रबोधनाथको उल्लेख पाइन्छ (पूर्ववत्, टिप्पणीसंख्या ११३ मा उद्धृत ) । उपर्युक्त विवरणबाहेक प्रबोधनाथका विषयमा हालसम्म अन्य जानकारी उपलब्ध हुन सकेको छैन ।

प्रबोधनाथद्वारा विरचित अष्टिका नामक स्तोत्रका सुरुका दुईवटा श्लोकहरू ईश्वर आश्रम ट्रस्ट, श्रीनगर, काश्मीरद्वारा प्रकाशित बहुरूपगर्भस्तोत्रमा सङ्ग्रह गरिएको छ। ईश्वर आश्रमद्वारा आयोजित विभिन्न यज्ञ आदि उत्सवहरूमा निर्धारित स्तोत्रपाठानुक्रमणिकामा बहुरूपगर्भस्तोत्र राखिएको छ र उक्त स्तोत्र कलशपूजाका क्रममा तथा कलशविसर्जनका समयमा पाठ गर्ने प्रचलन रहेको छ[१] ।

बहुरूपगर्भस्तोत्रमा सङ्गृहित अष्टिकास्तोत्रको दुईवटा श्लोकको पाठ र उपलब्ध मातृकाको पाठमा देखिएको पाठभेदलाई टिप्पणीमा स्थान दिएको छु। स्यान्डर्सनले पनि उक्त पाठभेदको उल्लेख गरेका छन् (पूर्ववत्, पृ. २९३) ।

---

१ वि.सं. २०७२ भदौ–असोज महिनामा काश्मीरयात्राका क्रममा मैले पनि ईश्वर आश्रममा आयोजित रविवासरीय पूजामा सहभागी हुने अवसर पाएको थिएँ ।

ॐ नमो मङ्गलायै ।

सद्यः[1] कारणकलापकल्पितोल्लाससङ्कुलसमाधिविष्टराम् ।
हार्द[2]कोकनदसंस्थितामपि त्वां[3] प्रणौमि शिववल्लभामजाम् ॥१॥
सद्यो[4] जन्तुहृदयाब्जमण्डलोद्भूतभावमधुपानलम्पटाम् ।
वर्णभेदविगतालिवल्लभां[5] त्वां[6] प्रणौमि भवजालभेदिनीम्[7] ॥२॥
कालकेलिविमलोल्लसत्कलां कल्पनाकलितलाभलोहिताम् ।
संविदोज्झितपदार्थवर्तिनीं त्वां प्रणौमि शिवशक्तिगर्भगाम् ॥ ३॥
सूर्यवह्निशशिधामविभ्रमध्वस्तसम्भवसमाधिगोचराम् ।
भवभेदविभवान्तरस्थितां त्वां प्रणौमि जगदम्बसर्वगाम् ॥ ४॥
वर्णपुञ्जहृदयान्तरस्थितग्रस्तसर्वभवभेदविग्रहाम् ।
नौमि वाग्विभवमन्त्रमातरं त्वामनाहतहतोज्झितां शिवाम् ॥ ५॥
भावसम्भवविभागगोचरध्वस्तभेदपथहृद्गुहालयाम् ।
अद्भुताऽपि गमितस्वरूपिणीं त्वां प्रणौमि समलामलोज्झिताम् ॥६॥
सद्यः[8] संहृतसदोद्यतोल्लसद्[9]भैरवेन्द्रजानताभयप्रदाम् ।
भक्तिवन्तविमलार्थदायिनीं त्वां प्रणौमि परमाद्भुतोपमाम् ॥७॥
देवदानवमनुष्यशोणितत्वग्वसापिशितभोजनप्रियाम् ।
शान्तबोधविमलाशयामपि त्वां प्रणौमि समसुन्दराद्भुताम् ॥ ८ ॥
कैवल्याख्यसमस्तविश्वमुदितां[10] राजन्ती[11] नैकां मुखाम् ।
कन्दामिन्द्रदुकर्णरन्ध्रविवरैर्हाहाहरावैः सदा ॥
वक्त्रेमध्यमजेयसप्तविवरैस्त्रैलोक्यमाग्रासिताम् ।
वन्देहावतमोहरन्ती[12] जगतां वक्त्रेश्वरी[13] पातु सा ॥९॥

श्रीप्रबोधनाथविरचिताऽष्टिका समाप्ता ॥ मङ्गलमहाश्री ॥

---

१ सद्य–उपलब्ध मातृकाको पाठ, सर्व– बहुरूपगर्भस्तोत्रमा सङ्ग्रह गरिएको पाठ ।
२ हर्म्म–उपलब्ध मातृकाको पाठ, हार्द– बहुरूपगर्भस्तोत्रमा सङ्ग्रह गरिएको पाठ ।
३ तां– बहुरूपगर्भस्तोत्रमा सङ्ग्रह गरिएको पाठ ।
४ सद्य–उपलब्ध मातृकाको पाठ, सर्व– बहुरूपगर्भस्तोत्रमा सङ्ग्रह गरिएको पाठ ।
५ वर्णभेदविभवान्तरस्थितां– बहुरूपगर्भस्तोत्रमा सङ्ग्रह गरिएको पाठ ।
६ तां– बहुरूपगर्भस्तोत्रमा सङ्ग्रह गरिएको पाठ ।
७ शिववल्लभामजाम्– बहुरूपगर्भस्तोत्रमा सङ्ग्रह गरिएको पाठ ।
८ सद्य–उपलब्ध मातृकाको पाठ, सर्व– बहुरूपगर्भस्तोत्रमा सङ्ग्रह गरिएको पाठ ।
९ द्रुतोल्लसद्–उपलब्ध मातृकाको पाठ ।
१० मुदितं–उपलब्ध मातृकाको पाठ ।
११ राजंति–उपलब्ध मातृकाको पाठ ।
१२ हरंति–उपलब्ध मातृकाको पाठ ।
१३ वक्त्रेश्वरे–उपलब्ध मातृकाको पाठ ।

# विशिष्ट पारिभाषिक शब्दावली*

**अकुला** (१:१३क, २:३२क) : कुलार्णवतन्त्र आदि ग्रन्थमा अकुल शब्दको अर्थ शिव गरिएको छ, त्यसैले रामको शक्ति भन्ने अर्थमा रमा शब्दको व्यवहार गरेझैँ अकुल शिवको शक्ति भन्ने अर्थमा अकुला शब्दको व्यवहार गरिन्छ ।

**उन्मना** (७ :२३ग, ७ :२७क,७ :४१ख) : प्रणव अर्थात् ॐकारको बाह्र कलामध्ये एक । उन्मनाको स्थिति शिखान्तमा रहेको हुन्छ । परम शिवको अक्षुभित इच्छाशक्ति जसमा सम्पूर्ण विश्व लीन भएको हुन्छ र जसका माध्यमबाट उत्तम ज्ञान वा शिवधामरूप फल प्राप्त हुन्छ त्यसलाई उन्मना भनिन्छ ।

**ऊर्ध्वरेता** (३:११ग) : कुलमार्गमा वीर्यको प्रसरणरूप अधिकारले रहित भएका स्वात्ममात्रमा विश्रान्त अन्तर्मुखी साधकलाई ऊर्ध्वरेता भनिन्छ । कौलपरम्परामा भट्ट, इन्द्र, वल्कल, अहीन्द्र, गजेन्द्र र महीधर यी छ राजपुत्रलाई ऊर्ध्वरेता भनिएको छ ।

यहाँ वीर्यलाई मन्त्रमुद्रादि प्रदर्शन र क्रियायोगसँग सम्बद्ध चमत्कार एवं शरीरमा रहेको वीर्यरूप चरम धातुको अर्थमा लिइएको छ । कौलमार्गमा शिष्यपरम्परा र सन्ततिपरम्परा दुवैलाई समान महत्त्व दिइएको छ । अतः जुन साधकले मन्त्रमुद्रादिप्रदर्शन र क्रियायोगसँग सम्बद्ध चमत्कारद्वारा शिष्यसन्तति परम्परालाई अगाडि बढाउँदैन एवं शरीरमा रहेको वीर्यरूप चरम धातुलाई स्त्रीयोनिमा सङ्क्रमण गरेर सन्ततिपरम्परालाई अगाडि बढाउँदैन र केवल आफ्नो उत्कर्षका लागि साधनामा लीन रहन्छ त्यस्तो साधकलाई ऊर्ध्वरेता भनिन्छ ।

**कन्दचक्र** (३:२४ग) : गुदस्थानदेखि दुई अङ्गुल माथि तथा लिङ्गस्थानदेखि दुई अङ्गुल तल रहेको चराको अण्डाजस्तो आकार भएको चार अङ्गुल चौडा स्थानलाई कन्द भनिन्छ । सोही कन्दस्थानबाट बहत्तर हजार चेतनावाहिनी नाडीहरू उत्पन्न हुन्छन् । तीमध्ये इडा, पिङ्गला र सुषुम्णा नाडीहरू मुख्य रहेका छन् । तिनै नाडीहरूको मुख्य आधारस्थल भएकाले कन्दचक्रको अर्को बहुप्रचलित नाम मूलाधारचक्र हो । उक्त

---

* **पारिभाषिक शब्दको प्रविष्टिपछि कोष्ठकभित्र राखिएका अङ्क र अक्षरहरूले क्रमशः पटल सङ्ख्या, श्लोक सङ्ख्या र श्लोकको पादलाई बुझाउँछन् ।**

कन्दचक्र वा मूलाधारचक्रमा योगीहरू चेतनाशक्तिको प्रतीकस्वरूप रातो वर्णका चारवटा अधोमुख कमलपत्र[1] र उक्त कमलपत्रमा पूर्व आदि दिशाका क्रमले सुनको जस्तै आभा भएका वं, शं, षं, सं चार वर्णको ध्यान गर्दछन्। उक्त कमलपत्रको मध्यकर्णिकामा चतुष्कोण पृथिवीमण्डलको ध्यान गरिन्छ जुन मण्डल आठै दिशामा पहेँला शूलहरूले घेरिएको छ। उक्त पृथिवीमण्डलको बीचमा लँ पृथिवीबीज रहेको छ। ध्यानको क्रममा उक्त पृथिवीबीजलाई योगीहरू ऐरावत हात्तीमा चढेको, चार हातले युक्त ध्यान गर्दछन्। सोही बीजवर्णको बिन्दुमा योगीहरू बालस्वरूप ब्रह्माको ध्यान गर्दछन्। यस कन्दचक्रकी अधिष्ठात्री डाकिनीशक्ति चार हातमा शूल, खट्वाङ्ग, खड्ग र अमृतपूर्ण घडा लिएकी, विभिन्न अलङ्कारले युक्त कालो कपडा लगाएकी, रातो आँखा भएकी, रातो वर्ण भएकी, लामालामा दाँत भएकी छिन्।

**करङ्किणी** (५:३४ग) : स्थूल, सूक्ष्म र कारण शरीरलाई चिदाकाशमा विलीन गराउने शक्तिलाई करङ्किणी भनिन्छ। महानयप्रकाशमा पाञ्चभौतिक शरीरलाई परम चिदाकाशमा विश्राम गराउने करङ्किणीमुद्रालाई ज्ञानसिद्धहरूको मुद्रा भनिएको छ। प्रस्तुत कालिकाकुलपञ्चशतक ग्रन्थमा चाहिँ करङ्किणीलाई मुद्राका रूपमा नभई शक्तिका रूपमा वर्णन गरिएको छ।

**कालाग्निचक्र** (२:७१ग) : विज्ञानभैरव आदि ग्रन्थहरूमा कालपद अर्थात् दाहिने गोडाको बूढी औँलाबाट कालस्वरूप अग्निको प्रादुर्भाव भएको ध्यान गर्दै उक्त कालाग्निको ज्वालाले आफ्नो सम्पूर्ण शरीर भस्म भएको चिन्तन गर्ने धारणाको वर्णन पाइन्छ (विज्ञानभैरव, धारणा सङ्ख्या २८-३०)। सोही कालस्वरूप अग्निको ज्वालालाई नै कालाग्निचक्र भनिन्छ। सोही कालाग्निचक्रले आफ्नो शरीर एवं बाह्य जगत्, सम्पूर्ण पदार्थ भस्म भएको भावनाको अभ्यास गर्दागर्दै साधक निर्विकल्प अवस्थामा आरूढ हुन पुग्छ। त्यतिखेर अनन्तकोटि प्रकाशस्वरूप भैरवीको उदय हुन्छ अर्थात् साधकले आफूलाई परा देवी भैरवी वा कालसङ्कर्षिणी कालीका साथ एकाकार गराउँछ। तिनै कालसङ्कर्षिणी पराभैरवीलाई प्रस्तुत कालिकाकुलपञ्चशतक ग्रन्थमा कालाग्निचक्रबाट उदाएकी परमा शक्तिको रूपमा सङ्केत गरिएको छ (प्रथम पटल, श्लोक १)।

---

१ अधोमुख कमलपत्र प्रवृत्तिमार्गको प्रतीक हो भने ऊर्ध्वमुख कमलपत्र निवृत्तिमार्गको प्रतीक हो त्यसैले प्रवृत्तिमार्गका साधकहरू अधोमुख कमलपत्रको ध्यान गर्दछन् भने निवृत्तिमार्गका साधकहरू ऊर्ध्वमुख कमलपत्रको ध्यान गर्दछन्।

**काली/कालिका** (१:३८घ, १:४८ग, २:५०, २:९७, ३:४३ख, ३:५०क, ५:१२ख, ५:१७ख, ५:४५घ, ६:१ख, ६:५घ, ६:६क, ६:१२ख, ७ :१घ, ७:४३ख, ७ :५५ख) : काली शब्दको निष्पत्ति कल धातुबाट भएको छ। कल धातुका निम्नलिखित पाँचवटा अर्थ रहेका छन् - १.क्षेप (फ्याँक्नु वा बाहिर निकाल्नु) २.गत (जान्नु) ३.सङ्ख्यान ( पृथक् रूपमा गणना गर्नु वा नियमन गर्नु) ४.गत (पुग्नु) ५.शब्द (नादरूप परामर्श )

क)फ्याँक्नु वा बाहिर निकाल्नु भन्ने अर्थमा प्रयोग हुने कल धातुबाट बनेको काली शब्दको व्युत्पत्ति यस्तो छ- **कलयति स्वात्माभेदेन स्थितं प्रमातृप्रमाणप्रमेयरूपं विश्वं बहिर्भावेनोल्लासयतीति परा संविद्दैव काली इत्युच्यते** । अर्थात् आफूदेखि अभिन्न रूपमा रहेको प्रमाता, प्रमाण र प्रमेयरूप जगत्लाई भिन्नजस्तै गरी बाहिर अवभाासित गर्ने चितिशक्तिलाई नै काली भनिन्छ ।

ख)जान्नु अर्थमा प्रयोग हुने कल धातुबाट बनेको काली शब्दको व्युत्पत्ति यस्तो रहेको छ **कलयति स्वात्मबहिर्भावेनावभासितमपीदं मातृमानमेयात्मकं जगत् स्वात्माभेदेनैव परामृशतीति परैव संविद्देवी काली इत्युच्यते** । अर्थात् आफ्नो चैतन्य स्वरूपदेखि अभिन्न रूपमा रहे तापनि भिन्नझैँ बाहिर अवभासित भएको प्रमाता, प्रमाण र प्रमेयरूप जगत्लाई आफ्नै स्वरूपमा ज्ञान गर्ने चितिशक्तिलाई नै काली भनिन्छ ।

ग)विकल्पका रूपमा अर्थात् भिन्नभिन्न रूपमा नियमन गर्नु भन्ने अर्थमा प्रयोग हुने कल धातुबाट बनेको काली शब्दको व्युत्पत्ति यस्तो रहेको छ- **कलयति भेदितमपि मातृमेयादिकं जगद्रूपमर्थं परस्परापोहनादयं घटः, न पटः इति प्रतिनियतरूपतया अवस्थापयति इति परैव चिल्लहरी संवित् काली इत्युच्यते** । अर्थात् आफ्नो चैतन्य स्वरूपदेखि अभिन्नरूपले रहे तापनि भिन्नझैँ बाहिर अवभासित भएको प्रमाता, प्रमाण र प्रमेयरूप जागतिक पदार्थलाई अपोहनशक्ति (अपूर्ण ज्ञानरूप अवरोधक शक्ति)का माध्यमबाट यो घैँटो हो, कपडा होइन, यो नीलो हो, पहेँलो होइन इत्यादि भिन्नभिन्न रूपमा व्यवस्थित गर्ने चैतन्यशक्तिलाई काली भनिन्छ ।

घ)पुग्नु अर्थमा प्रयोग हुने कल धातुबाट बनेको काली शब्दको व्युत्पत्ति यस्तो रहेको छ- **कलयति यया मातृमानमेयात्मको भेदितोऽर्थः स्वसंवित्तिमुकुरे स्वात्मन्यव्यतिरिक्तत्वेऽपि अव्यतिरेकैणैव स्वरूपारोहितत्त्वेनैवावस्थापयतीति परा कालसङ्कर्षिणी देवी काली इत्युच्यते** । अर्थात् आफ्नो चैतन्यस्वरूप देखि अभिन्न भए तापनि उक्त

चैतन्यदर्पणमा भिन्नरूपले प्रतिबिम्बित भइरहेको प्रमाता, प्रमाण र प्रमेयरूप जगत्लाई आफ्नै चैतन्यस्वरूपमा पुनः स्थापित गर्ने कालसङ्कर्षिणी संवित् भगवतीलाई काली भनिन्छ ।

ङ) नादरूप परामर्शको अर्थमा प्रयोग हुने काली शब्दको व्युत्पत्ति यस्तो छ- **कलयति समस्तानामविकल्पसविकल्पादीनां ज्ञानानां सृष्टि–स्थिति–संहार–पिधानानुग्रहात्मकपञ्चकृत्यानुसन्धानेन स्वात्मपरामर्शशेषतयैव सर्वं परामृश्यतीति परैव संवित् काली इत्युच्यते ।** अर्थात् निर्विकल्पात्मक एवं सविकल्पात्मक सम्पूर्ण ज्ञानको परामर्श सृष्टि, स्थिति, संहार, तिरोधान र अनुग्रहस्वरूप पञ्चकृत्यका रूपमा गर्दै सम्पूर्ण ज्ञानलाई आफ्नै बोधस्वरूप तुरीय सत्तामा विलीन गर्ने परा संवित्लाई काली भनिन्छ ।

**कुल** (१:१३क, १:३८ख, २:२८घ, २:२९घ, २:३०क, २:३२क, २:३५ख, २:३८ख, २:४२घ, २:४३घ, २:६९ग, ३:४६घ, ४:२७ग, ५:३२ख, ७:३४ख) : १. स्थूल, सूक्ष्म र कारण शरीर, पञ्चप्राण, तेह्र इन्द्रिय र पञ्चमहाभूतको समूह, २. समग्र विश्वमा अन्तर्निहित चेतनाशक्ति ।

पहिलो अर्थले समग्र नामरूपात्मक जगत्लाई बुझाउँछ भने दोस्रो अर्थले चराचर जगत्मा मूल सत्ताका रूपमा विद्यमान चितिशक्तिलाई बुझाउँछ ।

**कुलागम** (२:६८क, ७:५५क) : कुलसाधना वा कुलपरम्पराको वर्णन गर्ने शास्त्रविशेषलाई कुलागम भनिन्छ । कुलपरम्परालाई आचार्य अभिनवगुप्तले रहस्यचर्या भनेका छन् । अतः रहस्यचर्याको वर्णन गर्ने शास्त्र जो योगिनीवक्त्र–परम्पराबाट लोकमा सञ्चारित हुन्छ त्यसैलाई कुलागम भनिन्छ । कुलागमको पर्यायका रूपमा कुलशास्त्र, कुलाम्नाय आदि शब्दको प्रयोग पाइन्छ ।

**कुलेश्वर** (३:२३क) : कुलयागका क्रममा यागधामको बीचमा जुन परम प्रकाशस्वरूप शक्तिमान् तत्त्वको पूजा गरिन्छ तिनैलाई कुलेश्वर भनिन्छ । कुलयागका लागि भू, वस्त्र र काय अर्थात् शरीरलाई यागधाम मानिएको छ । यिनमा उत्तरोत्तर श्रेष्ठताको भाव रहेको छ अर्थात् कुलयागका लागि भू वा जमिनभन्दा वस्त्र उत्तम र वस्त्रभन्दा काय वा शरीर उत्तम मानिन्छ ।

**कुलेश्वरी** (३:२३क) : कुलेश्वरकी स्वातन्त्र्यशक्ति । मातृसद्भावरूपिणी पराशक्ति जो सर्वत्र चितिशक्तिका रूपमा स्फुरित भइरहेकी छिन् तिनै संवित्स्वरूप पराशक्तिलाई कुलेशी वा कौलेशी पनि भनिन्छ ।

**कौलिक** (१:१२घ, २:३२ख, :१०२घ) : कुलपरम्परामा कुलयाग सम्पादन गर्नका लागि अर्घपात्र, यागधाम र दीप यी तीनलाई प्रमुख द्रव्य मानिएको छ। अतः यी तीन कुलद्रव्यमा निष्ठा र आस्था राख्ने एवं कुलयाग सम्पादनका लागि यत्न गर्ने साधकलाई कौलिक भनिन्छ। कुलसँग सम्बद्ध भन्ने अर्थमा कुलपरम्परासँग सम्बद्ध हरेक विषयको विशेषणका रूपमा पनि कौलिक शब्दको व्यवहार गरिन्छ।

**गुप्ताचार** (१:१५क, ६:२ख) : रहस्यविधिद्वारा सम्पादन गरिने आचारविशेषलाई कुलाचार भनिन्छ। आचार्य अभिनवगुप्तले कुलपरम्परालाई रहस्यचर्या भनेका छन् त्यसैले कुलाचार भन्नाले गुप्ताचार बुझिन्छ।

**चित्त** (१:१ग) : चेतनाशक्ति नै जब विकल्पावस्थामा सङ्कुचित शक्तिका रूपमा परिणत हुन्छ त्यतिखेर चितिशक्तिलाई नै चित्त भनिन्छ। निर्विकल्पावस्थामा चित्त पुनः आफ्नो चिति स्वभावमा प्रतिष्ठित हुन्छ।

**चिति/चित्** (१:१ग, ३:५१ख, ५:२२घ, ५:४९ख, ७ :३४क, ७ :४६घ) : चेतनाशक्ति।

**चेत्य** (१:१ग) : चितिशक्तिद्वारा ग्राह्य विषय।

**त्रयोदशकाली**

१. **सृष्टिकाली** (५:२५) : जब पञ्चज्ञानेन्द्रियका माध्यमबाट प्रमेयरूप बाह्य पदार्थलाई ग्रहण गर्नका लागि चेतना उक्त प्रमेयरूप बाह्य पदार्थप्रति उन्मुख हुन्छ तब प्राथमिक क्षणमा उक्त प्रमेय पदार्थलाई निर्विकल्प रूपमा ग्रहण हुन्छ। उक्त निर्विकल्प प्रथम आभासको अवस्थामा द्रष्टा, दर्शन र दृश्यको कुनै विकल्प वा भेद रहँदैन। सृष्टिका प्रति उन्मुख चितिशक्तिको सोही प्राथमिक निर्विकल्प अवस्थालाई नै सृष्टिकाली भनिन्छ।

२. **रक्तकाली** (५:३०ख) : निर्विकल्पात्मक प्रथम आभासरूप सृष्टिकालीको उदय भएपछि संवित् शक्ति जब पदार्थप्रति उन्मुख हुँदै प्रमेयवर्ती प्रमाणदशामा आएर इन्द्रियका माध्यमबाट रूप, रस आदि विषयका साथ जब रागमा प्राप्त भई विषयहरूलाई भोग्दै विषयभोगरूप रागलाई निर्विकल्प भावले अनुभव गर्दछ संवित् शक्तिको त्यस्तो स्वरूपविकासको दोस्रो अवस्थालाई रक्तकाली भनिन्छ।

३. **स्थितिनाशकाली** (५:२७ख) : विषयलाई भोग्ने कार्यको समाप्तिमा जब भोगबाट तृप्त भएर पुनः अन्तर्मुख भई ग्राह्य र ग्रहणको स्थितिलाई आत्मसात् गरेर परम चैतन्य सत्ताका साथ एकाकार हुने चेतनाको अवस्थालाई स्थितिनाशकाली भनिन्छ। यस अवस्थामा

विषयभोगस्वरूप रागको अवसान हुने भएकाले चेतनाको त्यस अवस्थालाई स्थितिनाशकाली भनिएको हो ।

४. **सुकाली** (५:३२घ) : अभिनवगुप्तले सुकालीलाई गणना नगरी तन्त्रालोकमा बाह्र कालीको वर्णन गरेका छन् तर तन्त्रालोकमाथि विवेक नामक व्याख्याका रचनाकार जयरथले पञ्चशतिकलाई उद्धृत गर्दै सुकालीलाई समेत गणना गरी तेह्र कालीको धारणालाई समर्थन गरेका छन् । भीषण एवं रौद्र स्वरूपकी कुलशक्ति सुकाली सम्पूर्ण सिद्धिकी प्रदात्री हुन् ।

५. **यमकाली** (५:३३क) : परासंवित्स्वरूप भगवती काली जगत्लाई नियमन गर्ने उद्देश्यले एकातिर समस्त विकल्परूप विश्ववैचित्र्यलाई आफ्नै चैतन्यस्वरूप अग्निमा अन्तर्लीन गरी परप्रमातृदशामा स्फुरित हुन्छिन् भने अर्कातिर बहिर्मुखी बन्दै आफूभित्र चैतन्यबीजका रूपमा विद्यमान समस्त नामरूपात्मक जगत्लाई बाह्य विकल्पस्वरूपमा प्रकाशन गरी महाविलासरूपी रसको आनन्द लिँदै सङ्कुचित प्रमातृदशामा स्फुरित हुन्छिन् । चितिशक्तिको यिनै स्वरूप आच्छादन एवं स्वरूप उन्मीलनरूप द्वयात्मक स्वरूपलाई नै यमकाली भनिन्छ । यस अवस्थामा शक्तिको सतत अनुसन्धानद्वारा विकल्पजाललाई भेदन गर्ने प्रयत्न साधकले गरेन भने स्वात्मस्थितिबाट च्युत भएर अन्य संसारी व्यक्तिहरूझैं बहिर्मुख हुने खतरा रहन्छ ।

६. **संहारकाली** (५:२८घ) : समस्त विकल्पात्मक विश्ववैचित्र्यलाई आफ्नो चितिस्वरूप अग्निमा अन्तर्लीन गर्दा स्वरूपप्रकाशनात्मक परप्रमातृदशाको स्फुरण हुन्छ र समस्त विकल्पस्वरूप भावमण्डलको उपसंहार भएको अनुभव हुन्छ । सोही अवस्थालाई संहारकाली भनिन्छ ।

७. **मृत्युकाली** (५:३६ग) : संहारकालीको अवस्थामा इदं (भेद)का रूपमा अवभासित समस्त विश्ववैचित्र्य अहं (अभेद)मा विलीन भएको बोध हुन्छ । त्यस अवस्थामा पनि इदन्ता (भेदरूपता) सम्पूर्ण रूपमा विलीन भएको हुँदैन अर्थात् पूर्ण अहन्ताको परामर्श भइसकेको हुँदैन त्यसैले उपाधियुक्त अहन्तारूपी संवित् (संहारकाली) उपाधिरहित स्वभावभूत पूर्णाहन्ता (मृत्युकाली) मा विलीन भएको अवस्थालाई मृत्युकाली भनिन्छ ।

८. **भद्रकाली** (५:३८घ) : प्रमाणगत संहारस्वरूप भद्रकालीको अवस्थामा पनि विकल्पसंस्काररूप शङ्काहरू उत्पन्न हुन्छन् तर ती शङ्काहरू आफैं नष्ट हुन्छन् । यमकालीको अवस्थामा स्वरूपगोपनात्मक

शक्तिका कारण विकल्पसंस्काररूप शङ्काहरू उत्पन्न हुन्छन् र यदि साधकले शक्तिको सतत अनुसन्धानद्वारा ती शङ्काहरूलाई नष्ट गर्ने प्रयत्न गरेन भने ऊ पुनः संसारचक्रमा फस्ने सम्भावना रहन्छ तर भद्रकालीको अवस्थामा आरूढ साधकमा भने ती विकल्पसंस्काररूप शङ्काहरू आफैँ नष्ट हुन्छन् । यसप्रकार विकल्पसंस्कारलाई उत्थापन गर्ने भेदनव्यापार र पुनः ती विकल्पसंस्कारहरूलाई प्रशमन गर्ने द्रावणव्यापारमा संलग्न चितिशक्तिलाई भद्रकाली भनिन्छ ।

९. **मार्तण्डकाली** (५:४२ख) : प्रमाणदशामा स्थित बाह्र इन्द्रिय (पञ्च ज्ञानेन्द्रिय, पञ्च कर्मेन्द्रिय, मन र बुद्धि) लाई तिनको आश्रयस्थल बनेर रहेको अहङ्कारपदमा विलीन गराई आफ्नो विश्वमय स्वरूपको प्रदर्शन गर्ने परप्रमातृरूप चितिशक्तिलाई मार्तण्डकाली भनिन्छ । यद्यपि यो अवस्था प्रमाणवर्गअन्तर्गत संविद्देवीको अनाख्या अवस्था भएकाले यहाँ देवीको विश्वमय-विश्वोत्तीर्ण दुवै रूपको अवभासन हुन्छ तर विश्वमय स्वरूप स्फुटरूपमा देखापर्दछ ।

१०. **परमार्ककाली** (५:४०ग) : प्रमाणदशामा स्थित बाह्र इन्द्रियसमूहको आश्रयस्थल बनेर रहेको परमादित्यस्वरूप अहङ्कारलाई समेत आफ्नो चैतन्यस्वरूपमा लय गराउने भगवती कालीको स्वरूपविकासलाई परमार्ककाली भनिन्छ ।

११. **कालाग्निरुद्रकाली** (५:४४क) : परमादित्यस्वरूप अहङ्कारलाई समेत आफूमा लीन गराउने कालाग्निरुद्र नामक कल्पित प्रमाता पनि जुन पूर्णाहन्तास्वरूप चैतन्यमा विलीन हुन्छ त्यही महाचिदग्निलाई कालाग्निरुद्रकाली भनिन्छ । यस अवस्थामा समस्त भाववर्ग पूर्ण अहंविमर्शमा विलीन हुन्छ । सर्वत्र अहंस्वरूपको चमत्कार दृष्टिगोचर हुन थाल्छ । यस अवस्थामा प्रवेश गरेको योगीले समस्त भाववर्गलाई अहंस्वरूपमा एकाकार गर्दै उक्त अहन्तारूपी चमत्काररसमा निमग्न भैरवको रूपमा आफूलाई बोध गर्दछ ।

१२. **कालकाली** (५:४५घ) : कालाग्निरुद्रकालीको अवस्थामा समस्त भाववर्ग पूर्ण अहंपरामर्शस्वरूप महाकालमा विलीन हुन्छ । त्यस्तो महाकाल वा कालाग्निरुद्रकाली पनि आफ्नो स्वभावभूत जुन अकुलधाममा प्रविष्ट हुन्छ त्यही कालकलनाशून्य महाशून्यको अवस्थालाई भगवती कालसङ्कर्षिणीको महाकालकाली स्वरूप भनिन्छ ।

१३. **महाभैरवचण्डोग्रघोरकाली** (५:४८क) : माथि वर्णन गरिएका समग्र स्वरूपको उत्पत्ति एवं लयस्थानका रूपमा विद्यमान अनाख्याधाम जो

चण्ड अर्थात् प्रमेयचक्र, घोर अर्थात् प्रमाणचक्र र महाभैरव अर्थात् प्रमातृचक्र यी तीनैलाई आफैँबाट उत्पन्न एवं आफैँमा लय गर्दै क्रम,अक्रम तथा क्रमाक्रम रूपले तुरीय सत्ताका रूपमा विद्यमान छ त्यही मातृसद्भावरूपिणी कालसङ्कर्षिणी देवीलाई नै महाभैरवघोरचण्डकाली भनिन्छ ।

**त्रिधाम** (२:७२क) : सूर्य, सोम र वह्निलाइ नै त्रिधाम भनिन्छ । नेत्रतन्त्रमा पनि सूर्य, सोम र वह्निलाई त्रिधाम भनिएको छ -

सूर्याचन्द्रमसौ वह्निस्त्रिधाम परिकल्पना ।
त्रिनेत्रकल्पना मह्यं तदर्थमिह दृश्यते ॥ (नेत्रतन्त्र, १।३०॥

यिनै तीन धामको मध्यमा परा कुलशक्तिको स्थिति रहेको हुन्छ भन्ने कुलपरम्परामा बताइएको छ ।

**त्रिपथ** (१:१ख) : सोमस्वरूप इडा नाडी, सूर्यस्वरूप पिङ्गला नाडी र अग्निस्वरूप सुषुम्णा नाडीलाई त्रिपथ भनिन्छ ।

**द्वादशचक्र** (४:३०ग, ४:३१ख) : जन्माग्र, मूल, कन्द, हृदय, कण्ठ, तालु, भ्रूमध्य, ललाट, ब्रह्मरन्ध्र, शक्ति, व्यापिनी यी बाह्र स्थानमा रहेका शक्ति वा चेतनाकेन्द्रलाई द्वादशचक्र भनिन्छ । यी चक्रहरूमा सोह्रवटा स्वरवर्णहरूमध्ये ऋ, ॠ, लृ, ॡ चार स्वरवर्णलाई छोडेर बाह्र स्वरको ध्यान गरिन्छ । ऋ, ॠ, लृ, ॡ यी चार स्वरवर्णलाई षण्ढ वा नपुंसक वर्ण मानिने भएकाले ध्यानमा यिनको उपयोग गरिँदैन । उपर्युक्त द्वादशचक्रमा याग, होम, जप आदिरूप स्थूल उपाय, षट्चक्र, षोडश आधार आदिमा प्राण-चारको भावनारूप सूक्ष्म उपाय र अष्टाङ्गयोगको अभ्यासरूप पर उपाय गरी तीन प्रकारले चिन्तन वा ध्यान गरिन्छ ।

**दूती** (२:६९ख) : कुलमार्गमा बाह्यशक्तिको पूजालाई अनिवार्य मानिएको छ । बाह्यशक्तिको प्रतीकका रूपमा दूतीको चयन गरिन्छ । जसरी वैदिक यज्ञमा यजमानकी सहधर्मिणी पत्नी याज्ञिक कर्म सम्पादनका लागि अनिवार्य मानिन्छ त्यसरी नै कुलमार्गमा कुलयाग सम्पादनका लागि दूतीको साथ अनिवार्य मानिन्छ । आचार्यले दिएको आज्ञालाई अक्षरशः पालना गर्ने, प्रियवादिनी, सात्विक वृत्ति भएकी, आसक्तिरहित, कसैप्रति पनि घृणा नगर्ने, भैरवाचारले युक्त, कुलपरम्परामा प्रतिष्ठित, सबैलाई पुत्रसमान समभावले हेर्ने यस्ती स्त्री नै कुलयागका लागि योग्य दूती मानिन्छ ।

**पिण्डस्थैर्य** (१:५०घ, १:५२क, १:५२ग) : यो कुलसाधनाको अभ्यासबाट प्राप्त हुने एक प्रकारको सिद्धि हो । यसको सङ्केत आचार्य जयरथले तन्त्रालोकको विवेक नामक व्याख्यामा गरेका छन्-

ये पिण्डस्थैर्यादिरूपां सिद्धिमाप्तुकामाः । (तन्त्रालोक, आह्निक २९ श्लोक १२७, विवेकव्याख्या )।

तन्त्रालोकको परमहंसकृत नीरक्षीरविवेक नामक हिन्दी व्याख्यामा **मम शरीरं वज्रवत् साधय साधय** मन्त्रको सतत जप र अभ्यासबाट शरीरलाई वज्रवत् बनाउने सिद्धिलाई पिण्डस्थैर्य सिद्धिको संज्ञा दिइएको छ ।

**पीठ** (१:७ग, ७ :१०ग) : आन्तर एवं बाह्य याग सम्पादनका लागि योग्य स्थानविशेषलाई पीठ भनिन्छ । याग वा उपासना आन्तर र बाह्य भेदले दुई प्रकारको भएझैँ पीठ पनि आन्तर र बाह्य भेदले दुई प्रकारको मानिन्छ । बाह्य पीठको स्थिति बाहिरी स्थानविशेषमा तथा आन्तर पीठको स्थिति शरीरमा मानिन्छ । बाह्य पीठको धारणाअनुसार पीठको सङ्ख्या विभिन्न ग्रन्थमा तेत्तीसदेखि एकसय आठसम्म गणना गरेको पाइन्छ । ती विभिन्न पीठहरूमध्ये कामरूप, पूर्णगिरि, जालन्धर र ओड्डियानपीठ मुख्य मानिन्छन् । आन्तर पीठको धारणाअनुसार शरीर नै पीठ हो । यस धारणाअनुसार शरीरका विभिन्न अङ्गहरूमा पीठको कल्पना गरिन्छ । ती विभिन्न पीठहरूमध्ये शरीरको कन्दस्थानमा कामरूपपीठ, नाभिमा पूर्णगिरिपीठ, हृदयमा जालन्धरपीठ र सहस्रारमा ओड्डियानपीठको कल्पना गरी तत्तत् पीठमा शक्तिको अनुसन्धानरूपी आन्तर उपासना गरिन्छ ।

**भैरव** (१:९घ, २:४१घ, ४:४७ख) : 'भा' अर्थात् ज्ञानशक्ति र 'ऐ' अर्थात् माहैश्वर्यको अभिव्यञ्जक क्रियाशक्तिद्वारा सम्पूर्ण विश्वलाई विमर्श गर्ने वा आफूदेखि अभिन्नरूपले बोध गर्ने तत्त्वलाई भैरव भनिन्छ । 'भिया सर्वं रवयतीति भैरवः' यस व्युत्पत्तिअनुसार नील, घट, पट आदि बाह्य वेद्यसमूह एवं सुख, दुःख आदि आन्तर वेद्यसमूहलाई आफूदेख अभिन्न बताएर समस्त प्राणीहरूलाई भयबाट मुक्त गराउने तत्त्वलाई नै भैरव भनिन्छ । **द्वितीयाद् वै भयं भवति** (बृहदारण्यकोपनिषद्, १।४।२) अर्थात् आफूदखि भिन्न कुनै दोस्रो व्यक्ति वा वस्तुबाट नै भय हुन्छ भन्ने श्रुतिअनुसार आफूदेखि भिन्न व्यक्ति वा वस्तुको उपस्थितिको कल्पना नै भयको कारण हो । आफूदेखि भिन्न वस्तु वा व्यक्ति नै नभएपछि केको डर ? त्यसैले साधकको चित्तमा बाह्य एवं आन्तर वेद्यसमूहप्रति अभेदबोधको भावना प्रदान गरेर साधकको भयलाई हटाउने भएकाले त्यस्तो तत्त्वलाई भैरव भनिएको हो । यसको गूढ तात्पर्य के हो भने साधकले जब सम्पूर्ण बाह्य एवं आन्तर जागतिक पदार्थलाई आफूसँग तादात्म्य मान्दै यो सम्पूर्ण संसार मदेखि अभिन्न छ, म नै विश्वका रूपमा उल्लसित भइरहेको छु भन्ने दृढ अनुभव गर्दछ तब ऊ स्वयं

परमेश्वर भैरवरूपमा समाविष्ट हुन्छ । यस अवस्थालाई भैरवसमावेशको दशा भनिन्छ, त्यही नै जीवन्मुक्तिको अवस्था हो ।

**भैरवाष्टक** (१:९ख) : अर्धचन्द्र, निरोधिनी, नाद, नादान्त, शक्ति व्यापिनी, समना र उन्मना यी आठ कलाले अभिन्न ॐकारस्वरूप ऐँ पल्लवबीजले युक्त क्रौँ, ह्रीँ, क्षं, यं, रं लं, वं, सौः यी आठ बीजमन्त्रहरूको समूहलाई कुलपरम्परामा भैरवाष्टक भनिन्छ ।

**महानन्द** (१:८क) : कुलपरम्परामा विकल्पावस्थामा सामान्य स्त्री र पुरुषको मिलनबाट जुन आनन्दको अभिव्यक्ति हुन्छ त्यसलाई जगदानन्दको संज्ञा दिएको पाइन्छ भने निर्विकल्पावस्थामा आरूढ भएपछि जब साधक तथा साधिकामा भैरव एवं भैरवीभावको उदय हुन्छ तब त्यस्तो भावमा स्थित साधक तथा साधिकाको मिलनबाट अभिव्यक्त हुने आनन्दलाई महानन्द भनिन्छ । यसैलाई कुलपरम्परामा कौलिकानन्द पनि भनिन्छ ।

**योगिनी** (१:१५ग, २:१०२क, ३:२८घ, ४:३८ख, ६:३२ख, ६:३४ख, ७:५७घ) : कौलमतमा साधिकालाई योगिनी भनिन्छ । आफूलाई पराशक्ति भैरवीका रूपमा बोध गर्दै समग्र शक्तिको अधिष्ठातृ पदमा आरूढ साधिका नै योगिनी हो ।

**शक्तिपात** (२:४२ख) : भगवान्को अनुग्रह वा कृपादृष्टिलाई शक्तिपात भनिन्छ । तन्त्रशास्त्रको विशेषता के हो भने यहाँ सृष्टि, स्थिति र संहारका अतिरिक्त निग्रह (तिरोधान) र अनुग्रहलाई पनि भगवान्को कृत्यका रूपमा गणना गरी भगवान्लाई पञ्चकृत्यकारी मानिएको छ । भगवान्को तिरोधानशक्तिका कारण नै मनुष्य आफ्नो वास्तविक स्वरूपलाई बिर्सेर सांसारिक आवागमनको चक्करमा फस्दछ । यस सांसारिक चक्करबाट मुक्तिका लागि भगवान्को अनुग्रह वा कृपादृष्टि मुख्य कारण मानिएको छ । कुनै मनुष्यमाथि जब ईश्वरको शक्तिपात हुन्छ तब उसमा शास्त्रको अध्ययनप्रति रुचि जाग्नुका साथै बिस्तारै संसारप्रति वैराग्य उत्पन्न हुन्छ र मुक्तिको कामना जागृत हुन थाल्छ । त्यतिखेर अनायास नै योग्य गुरुको प्राप्ति हुन जान्छ र गुरुको कृपाबाट दीक्षा प्राप्त गरी शास्त्रको अध्ययन, मनन र निदिध्यासनपूर्वक आफ्नो वास्तविक शिवस्वरूपको बोध भई शिवानन्दस्वरूप मुक्तिको आस्वादन गर्न पुग्छ । अतः भगवत्कृपालाई नै तन्त्र वा आगमशास्त्रमा शक्तिपात भनिन्छ ।

**षडङ्गयोग** (२:७२ग) : शैव, शाक्त, वैष्णव, बौद्ध तन्त्रग्रन्थहरूमा अष्टाङ्गयोगको सट्टा षडङ्गयोगको वर्णन पाइन्छ । पातञ्जलयोगसूत्रमा योगका निम्नलिखित आठवटा अङ्गहरूको उल्लेख पाइन्छ– यम, नियम,

आसन, प्राणायाम, प्रत्याहार, धारणा, ध्यान र समाधि (पातञ्जलयोगसूत्र, २।२९)। पातञ्जलयोगसूत्रले बताएको योगका आठवटा अङ्गहरूमध्ये शैव, शाक्त, वैष्णव र बौद्ध तन्त्रग्रन्थहरूमा यम, नियम र आसन तीनवटा अङ्गलाई छोडेको पाइन्छ। शैव एवं शाक्ततन्त्रको विश्वकोष मानिने तन्त्रालोकको विवेक नामक व्याख्यामा आचार्य जयरथले षडङ्गयोगको क्रम यस्तो उल्लेख गरेका छन् - प्राणायाम, ध्यान, प्रत्याहार, धारणा, तर्क र समाधि। वैष्णवतन्त्रअन्तर्गत विष्णुसंहितामा प्राणायाम, प्रत्याहार, धारणा, तर्क, समाधि र ध्यान यस्तो क्रम पाइन्छ भने बौद्धतन्त्रअन्तर्गत गुह्यसमाजतन्त्रमा प्रत्याहार, ध्यान, प्राणायाम, धारणा, अनुस्मृति र समाधि यस्तो क्रम पाइन्छ।

**समना** (७:२५क, ७:२६ख, ७:२६ग, ७:४१घ) : प्रणव अर्थात् ॐकारको बाह्र कलामध्ये एक। समनाको स्थिति शिखामा रहेको हुन्छ। विश्वसृष्टिका प्रति उन्मुख परम शिवको क्षुभित इच्छाशक्तिलाई पनि समनाको संज्ञा दिइएको छ।

**सामरस्य** (२:५८ख, ७:३३ख) : समरसता वा एकाकारको भावलाई सामरस्य भनिन्छ। जसरी शब्द र अर्थ सामरस्य अवस्थामा रहन्छ त्यसरी नै प्रकाशरूप शिव र विमर्शरूप शक्ति पनि सामरस्य अवस्थामा रहन्छन्। कुलपरम्परामा सामरस्य मैथुनको वाचक बनेको छ। मिथुन वा दुईको एकत्व नै मैथुन हो। एकत्व वा मैथुनको अभावमा कुनै पनि कुराको सृष्टि सम्भव छैन, चाहे त्यो वाक्सृष्टि होस् चाहे पदार्थसृष्टि।

**सिद्ध** : कौलमतमा आफ्नो भैरवीय तेजको साक्षात्कार गर्दै भैरवभावमा आरूढ साधकलाई सिद्ध वा वीर भनिन्छ। कुलपरम्परामा पञ्चमहाभूत, पञ्चज्ञानेन्द्रिय, मन र बुद्धि यी बाह्र तत्त्वलाई द्वादशसिद्धका रूपमा आन्तर पीठस्वरूप आफ्नै देहमा वा बाह्य पीठमा पूजा गरिन्छ।

**सिद्धपत्नी** (४:१२ख, ४:१२ग, ४:३२क, ४:३४ग) : कुलपरम्परामा पञ्चतन्मात्रा, पञ्चकर्मेन्द्रिय, अहङ्कार र प्रकृति यी बाह्र तत्त्वलाई सिद्धपत्नीका रूपमा आफ्नै देहमा वा बाह्य पीठमा पूजा गरिन्छ।

# सन्दर्भग्रन्थसूची


ऋग्वेदसंहिता, सायणभाष्यसहिता (भाग ९), प्रथम संस्करण, ई.सं.१९९१, वाराणसी : चौखम्बा विद्याभवन ।

कोकिलू, मखनलाल (अनु.)(ई.सं.२०१०), **बहुरूपगर्भस्तोत्र**, श्रीनगर : ईश्वर आश्रम ट्रस्ट ।

कौल, मधुसूदन(सं.)(ई.सं.१९२९), **स्वच्छन्दतन्त्र** (उद्योतव्याख्या) श्रीनगर : काश्मीर संस्कृत ग्रन्थमाला ।

गुप्त, अभिनव (ई.सं.२००२), **तन्त्रालोक** (विवेकव्याख्यासहित), राधेश्याम चतुर्वेदी (सं.) वाराणसी : चौखम्बा विद्याभवन ।

द्विवेदी, व्रजवल्लभ(सं.)(ई.सं.१९८३), **लुप्तागमसङ्ग्रह** (भाग २), वाराणसी : सम्पूर्णानन्द संस्कृत विश्वविद्यालय ।

द्विवेदी, व्रजवल्लभ(सं.)(ई.सं.१९८४), **विज्ञानभैरव**, द्वितीय संस्करण, वाराणसी : मोतीलाल बनारसीदास वाराणसी ।

द्विवेदी, व्रजवल्लभ(सं.)(ई.सं.१९८८), **योगिनीहृदय** (दीपिकाव्याख्यासहित), वाराणसी : मोतीलाल बनारसीदास ।

द्विवेदी, व्रजवल्लभ(सं.)(ई.सं.१९९२), **महार्थमञ्जरी**, वाराणसी : सम्पूर्णानन्द संस्कृत विश्वविद्यालय ।

द्विवेदी, व्रजवल्लभ(सं.)(ई.सं.२००४), **नेत्रतन्त्र** (उद्योतव्याख्यासहित), दिल्ली : परिमल पब्लिकेशन्स ।

नेपाल, ज्ञानमणि(वि.सं.२०६२), **नेपालको माध्यमिक कालको इतिहास**, काठमाडौँ : मकालु बुक्स एण्ड स्टेशनर्स ।

पणशीकर, वासुदेव(सं.)(ई.सं १९९०), **ईशाद्यष्टोत्तरशतोपनिषदः**, वाराणसी : चौखम्बा विद्याभवन ।

मिश्र, नारायण(सं.)(ई.सं.१९९८), **पातञ्जलयोगदर्शन**, दिल्ली : भारतीय विद्याप्रकाशन ।

मिश्र, परमहंस(सं.)(ई.सं.२००२), **कुलार्णवतन्त्र**, दिल्ली : चौखम्बा विद्याभवन ।

रविवासरीय पूजा(ई.सं.२०११), श्रीनगर : ईश्वर आश्रम ट्रस्ट ।

रस्तोगी, नवजीवन(ई.सं.२०११), **काश्मीर की शैव संस्कृति मे कुल और क्रम मत**, दिल्ली : डि.के. प्रिन्ट वर्ल्ड ।

शास्त्री, मुकुन्दराम(सं.)(ई.सं.१९३७), **महानयप्रकाश**, श्रीनगर : काश्मीर संस्कृत ग्रन्थमाला ।

सिंह, जयदेव(सं.)( ई.सं.१९७९), **शिवसूत्र** (विमर्शिनीव्याख्यासहित), दिल्ली : मोतीलाल बनारसीदास ।

**स्तोत्रपाठानुक्रमणिका** (फोटोकपी), श्रीनगर : ईश्वर आश्रम ट्रस्ट ।

Goodall, Dominic & Padoux, Andre(Ed.) (2007). Tantric Studies in Memory of Helene Brunner, Pondichery : Instute de Francais.

Rastogi, Navajivan (1979). The Krama Tantricism of Kashmir, Delhi : Motilal Banarasidas.

# श्लोकपादानुक्रमणिका

**ख**

**द**

**र**



**ल**



**व**

**ह**